# गृहप्रवेश

(ऐतिहासिक उपन्यास)

डायमनशमशेर राणा

रत्न पुस्तक भण्डार
काठमाडौं, नेपाल

# गृहप्रवेश

(ऐतिहासिक उपन्यास)

*डायमनशमशेर राणा*

**चौथो संस्करण** : २०६९ (सन् २०१२) (र.पु.भ.बाट तेस्रो)

| | | |
|---|---|---|
| **प्रकाशक** | : | रत्न पुस्तक भण्डार, काठमाडौं, नेपाल |
| **प्रथम संस्करण** | : | २०५९ |
| **© सर्वाधिकार** | : | लेखकमा |
| **आवरण** | : | ग्राफिक वर्कसप |
| **टाइपसेटिङ** | : | मानवमिति |
| **मुद्रक** | : | स्थापित अफसेट प्रेस |

**GRIHAPRAVESH *(HOUSE ENTRY)***
A historical fiction by *Diamond Shamshere Rana*

**ISBN: 978-99933-0-810-2**

# भूमिका

बसन्ती, सेतो बाघजस्ता उत्कृष्ट ऐतिहासिक उपन्यास दिएर पाठकवर्गलाई ऋणी बनाउनुहुने डायमनशमशेर राणाज्यूले आफ्नो साहित्यिक यात्रालाई सशक्त रूपमा अघि बढाउँदै हामीलाई अर्को त्यस्तै उपहार दिनुभएको छ गृहप्रवेश।

भीमसेन थापाको अन्त्य गराउने कुचाल र जङ्गबहादुरको उदयका घटनाहरूलाई सेरोफेरोमा राखेर लेखिएको यो उपन्यासले नेपाली साहित्यभण्डारलाई अझ समृद्ध बनाउने कुरा निर्विवाद छ। ऐतिहासिक घटनाहरूलाई आफ्नो कुशल साहित्यिक सीपले लिपपोत गरेर चहकिलो रूपमा प्रस्तुत गृहप्रवेश केवल इतिहासको उक्त कालखण्डको प्रतिबिम्ब मात्र नभएर भविष्यप्रतिको मार्गदर्शन बनेर उभिएको छ।

प्रस्तुतिको जीवन्तता र घटनाक्रमको स्वाभाविक वर्णनले पाठकलाई उपन्यास पढ्दा २०० वर्षअघिकै समाजमा घुलमिल भएको अनुभूति हुन जान्छ। तत्कालीन सामाजिक परिवेश राजनीतिक तथा आर्थिक व्यवस्थाको चिरफार गर्नाको साथै साहित्यका सम्पूर्ण अनुरागहरू गुथेर बनाइएको छ गृहप्रवेश।

पात्र सेर्बूलाई अघि सारेर प्रेम, विरह, आक्रोश, धैर्य, सहनशीलता, पाखण्ड, साहस सम्पूर्ण मानवचरित्रलाई उदाङ्ग पार्नुभएको छ उपन्यासकारले। प्रकृतिको सुन्दरतम वर्णन बैंसमा आउने कुतकुती - जङ्गलमा सेर्बू र जङ्गबहादुरको बीचमा होस् या दरबारमा गधापच्चीसेको आसपासको महाराजा र महारानीको - जीवन्त छ।

राष्ट्रभक्ति, राजभक्ति प्रदर्शन मात्र नभई कुन व्यवस्था अपनाएमा मुलुकको सर्वोपरि विकास हुन्छ जस्ता सवालदेखि लिएर राजसंस्था र जनताको भूमिकासम्मलाई समेटन पुग्नुभएको छ साहित्यशिल्पी डायमनशमशेर।

उपन्यास मात्र नभएर गृहप्रवेश सामाजिक विकासको दर्शन बनेर आएको छ। जनताको अधिकार जनतालाई शक्तिसम्पन्न बनाउने; शिक्षित, सचेत, सजग बनाउने; कर्तव्यबोध गराउने सम्पूर्णलाई ओगटेको छ। शक्ति र सत्ताले उन्मत्त जङ्गबहादुर र ती दानवीय गुण भनूँ या मानवीय दुर्गुणप्रति विरक्त पुतली महारानी (सेर्बू) बीचको मानसिक द्वन्द्वले भविष्यलाई घचघच्याइराख्न सफल छ उपन्यास।

तत्कालीन भाइभारदारको बग्गी संस्कृतिले हालको 'पजेरो' संस्कृतिलाई इङ्गित गरेको छ। भ्रष्टाचार, व्यभिचारका अनेक रूप, मानवीय दुर्बलता, नैतिक अधोपतन ती कुकृत्यप्रति नैतिकता र स्वधर्मको मनोवैज्ञानिक युद्ध अति नै कुशलतापूर्वक प्रस्तुत गर्नुभएको छ साहित्यस्रष्टा डायमनशमशेरले।

*हत्या, हिंसाबाट प्रताडित तत्कालीन राजनीतिले नेपालीलाई अर्ती दिन्छ डायमनशमशेरको कलमबाट- 'एक नेपालीले अर्को नेपालीको हत्या गर्नु महापाप हो।'*

*विभिन्न घटना सम्बन्धमा हालसम्म प्रकाशमा आएका कैयन् ऐतिहासिक कुराहरूभन्दा पृथक् कुराहरू निर्धक्कसँग पोख्न डराउनुभएको छैन लेखक। प्रस्तुत घटनाको आधिकारिकताको विश्लेषण गर्ने जिम्मा आगतका इतिहासकारले लिएरै जालान्, तर पाठकहरूलाई भने ती प्रस्तुतिद्वारा उत्साहित गर्न अवश्य सफल छ गृहप्रवेश।*

*भाषागत हिसाबले कसै-कसैले अप्ठ्यारो महसुस गर्न सक्लान्, तर यसलाई पनि डायमशनशमशेरज्यूले लगाउनुभएको ऋण नै सम्झनु मनासिब होला। कहाँ सधैँ मिल्छ यस्तो सौभाग्य तत्कालीन ठेट शब्दहरूको रसास्वादन गर्न।*

*समग्रमा उत्कृष्ट कलाकारिताले भरिपूर्ण छ गृहप्रवेश। देख्दा सानो भए पनि इतिहास, विज्ञान, प्रेम, यौन, प्रकृति, रीति, कुरीति, पाखण्ड, नैतिकता, अनैतिकता सम्पूर्ण फाँटलाई लिएर हाम्रा सामु आएको छ उपन्यास।*

*डायमनशमशेरको कलमले साहित्यभण्डार भर्दै जाओस्, शुभकामना!*

काठमाडौँ
२०५९ असार ३२

**सरोज देवकोटा**

*सेतो बाघ* उपन्यासप्रति साहित्यानुरागी मनीषीताको अत्यधिक अभिरुचि देखिएकाले *गृहप्रवेश*को जन्म हुन गएको हो।

यो कोरा इतिहास होइन। ऐतिहासिक उपन्यास हो। कल्पनाको घोडा कुदाएर सत्यतथ्यको सन्निकट पुग्ने प्रयास। यसमा उल्लिखित कुनै पात्रका नाम-थर काल्पनिक हुन्; रोमाञ्चित घटना हो।



# १

षोडशी सेर्बू बेँसी झर्न लागेकी। बुङताङ गाउँ वाग्मती अञ्चल, नुवाकोट जिल्लाअन्तर्गतको घना बस्तीमध्ये एक हो। समुद्री धरातलदेखि सालाखाला २,००० फिट उचाइमा अवस्थित। त्यो पहाडी भेगमा साधारण आइमाईको चोलो लगाउने हबिगत थिएन। पुरुषको निकटतामा फरियाको फेर उँभो सारेर स्तन छोप्थे। तर सेर्बू ह्लोसार मात्र हिँडेकीले चौबन्दी लगाएकी छ। पटुका बाँधेकी।

बालसूर्यसँगसँगै यात्रा प्रारम्भ गरेकी, यतिखेर डाँडामाथिको पहिलो घाम झुल्केको रक्तिम किरणले सुन्दर प्राकृतिक छटामा लाली छरिएको मनोरम दृश्य अवलोकन गर्दै समथर भूभागमा ओर्लिसकी जहाँ सल्लो, चिलाउने, टुनी, धूपीजस्ता रूखहरू छन्। वन्यजन्तुमा बाघ, चितुवा, कस्तूरी, मृग, थार, घोरल; पक्षीमा कालिज, हलेसो, न्याउली, डाँफे, मुनाल आदि।

यो वन गाउँले जीवनका लागि इन्धन प्राप्त गर्ने निकटवर्ती क्षेत्र हो। दाउरे-दाउरेनीहरू सुकेका हाँगाबिँगा बटुल्न लागेका, कोही पहार ताप्र।

स्त्रीजातिको कपाल जिङ्ग्रिङ्ङ, रौँ मुख-मुहारमा यत्रतत्र छरिएको – कन्चट र चिउँडोसम्म। लट्टा परेको आँठो-चुल्ठो।

फुटेका हातगोडा, उच्छ्रिएका नङ। ओठ चिरिएको। घामले डढेको अनुहार। रङ्ग खुइलिएको धोतीविशेष। नाक-कानमा कसकुट गहना। कसैले गिल्टीको बाला, कसैले मुगाको माला, फलामको औँठी लगाएका; त्यही पनि धोइपखाली छैन, कसयुक्त।

लोग्नेमान्छे केवल ठाडो लँगौटीको भरमा। कछाड लगाउने बिरलाकोटी। प्रायजसोले दाह्री पालेका, मुठे जुँगा, छुरा-कैँचीसित भेटघाट नभएको।

कसैको टाटेपाटे खौराइ। कोही झ्यापुल्ले। आशौच बार्नेहरूले मुण्डन गरेका।

जगल्टे हुन् या मुडुले, सबैले टुपी राखेका। टोपी लगाएका। चाउलो फाटेको प्वालबाट गोपुच्छर प्रमाणको शिखा बाहिर निस्किएर ग्रामीण जीवनको गरिबी, अशिक्षा र अज्ञानताको भन्डाफोर गरेझैँ प्रतीत हुन्थ्यो।

ढिँडो-फाँडो, खोलेसिबाय पोषयुक्त खाद्य पेटमा नपरेको। टाढैबाट करङ गन्न सकिने, अस्थिपञ्जर।

ती कङ्कालले ढब्बू बन्चरो मच्चाएर जिम्वाल, थरी, मुखिया, कटुवाल र धनी वर्गको घर निर्माणका निम्ति ठूलठूला रूख ढाल्न थालेका, गल्र्याम्म-गल्र्याम्म। निधारको पसिना चिउँडोबाट चुहाउँदै– तप्प-तप्प।

घरसङ्ग पुर्जीको चलन थिएन। अव्यवस्थित ढङ्गबाट 'हरियो वन नेपालको धन' दिनदिनै फँडानी हुँदै थियो। भूक्षयको पराकाष्ठा। तथापि अग्ला वृक्ष आफ्नो झाँगिलो इतिहासको गौरवमय प्राचुर्य बोकेर सुसाइरहेका।

लालुपाते, चाँप, गुराँस ढकमक्क। साथै औषधीमुलोको काममा आउने दुधालु वनस्पति सशक्त उपयोगिता देखाउन पछि नपरेका।

यिनै दुधिला झारपात र जडीबुटी मावलमा कोसेली लानका निमित्त सेर्बूले घाँसको डोको बोकेकी, हातमा हँसिया। आँखा गोरेटोछेउछाउ पलाएका लता-पल्लवमाथि।

हातले भेटेजति ओखती-उपचारमा काम लाग्ने कलिला मुन्टा निमोठ्दै, उखेल्दै, लाछ्दै डोकोभित्र हाल्न थाली। कुनै काखीमुनि च्यापी। एवंरीतले पाइला चाल्दै थिई फटाफट ...।

दुई बिसौनीजति अग्रगमनपश्चात् उसको दृष्टि एउटा बुट्यानमाझ पऱ्यो जहाँको खुला क्षेत्रमा एक लक्का जवान लम्पसार निदाइरहेको– फ्वाँ-फ्वाँ।

विक्रमसंवत् १८९५ – श्री ५ महाराजाधिराज राजेन्द्रविक्रम शाहकी जेठी बडामहारानी साम्राज्यलक्ष्मीदेवीका तर्फबाट युवराजाधिराज सुरेन्द्रका साथ अरू दुई भाइ सन्तान उपेन्द्र र दिवेन्द्र थिए। कान्छी बडामहारानी राज्यलक्ष्मीबाट रणेन्द्र र वीरेन्द्र।

एक दिन अकस्मात् जेठी महारानीका तृतीय शिशु दिवेन्द्रविक्रम शाहको गाथमा आराम भएन। मौसुफलाई सर्दीबाट बचाउने उद्देश्यले दुईतीनवटा सिरक ओढाएर गामगुम पारियो।

बन्द झ्यालढोकामा भीत र पर्दा टाँगेर सबैतिर थुनियो। बोर्सीमा भरभराउँदो आगो। खोपी रनक्क तताइयो। त्यति मात्र होइन, आरोग्यलाभका निम्ति बाहिर चोटामा विधिपूर्वक धार्मिक होम आदि चलिरहेको, साथै यजुर्वेदको वैदिक स्तोत्रपाठ।

रातको समय। प्रधानमन्त्री भीमसेन थापाले धुरन्धर जान्ने राजवैद्यलाई सँगै लिएर आए।

बिरामी निकै गलिसकेका। सास भएसम्म आस। उपचार सुरु भयो।

केही समयपछि खोपीको ढोका घरक्क खुल्यो। युवराजाधिराज सुरेन्द्र चार हातगोडा टेकेको मानिसको पिठ्यूँमाथि घोडा चढेर आएका रहेछन्, भित्र पसे।

प्रधानमन्त्री थापा शिष्टतापूर्वक उठिसकेका, जङ्गी सलाम ठोके। फौजी अभिवादन कुर्णेसतिर ध्यान गएन युवराजाधिराजको। वैद्यराजपट्टि फर्किएर हात पसारे– 'खै, पाचक देऊ।'

वैद्य एकदेव देउभाजूले बिरामीको फोहोर थाङ्ना छोएको। शिवानन्द भवानी औषधी खल गर्न लागेको। 'एकछिन पर्खिबक्सियोस्, सरकार!' ओखती लतपतिएका औँला नजर गरायो– 'हाम्रो हात खाली भएन।' लाचारी प्रकट गऱ्यो– 'के गरौँ? धर्मऔतार!'

औतारेको चञ्चल मनमा पर्खने धैर्य थिएन। आफ्नै बाहुलीले भेषजको पोकाबाट एउटा पुरिया थुते जसमाथि सावधानीका निम्ति ठूलठूला अक्षरले *विषादि* लेबल टाँसिएको थियो। तर उनी निरक्षर भएकाले चिनारी लेखोट पढ्न जानेनन्। पुरियाभित्रको धतुरोमिश्रित वस्तुलाई हजम गोली ठानेर खान तयार परे।

वैद्यले हत्तपत्त घातक वस्तु खोस्यो– 'यो त विष!' त्रासको लामो जिब्रो काढेर– 'जिउनार गरिबक्सन हुन्न।'

'विष! यहाँ किन ल्याएको?'

'विषस्य विषमा औषधम् प्रभु!'

रसादिमा अफिम र धतुरोको केही मात्रा मिलाउनुपर्ने औषधीय बेहोरा अवगत गराउन तम्सिए चिकित्सक, तर कोठा ज्यादै गुम्सिएकाले कुम्भीपाकभैँ थियो। त्यस्तो उखर्माउलो गर्मीले सताउने ठाउँमा युवराजलाई टिक्न मुस्किल पऱ्यो। वैद्याङ्गी व्याख्या सुन्नेतिर लागेनन्– 'चल् जङ्ग!' घोडा बनाएर चढेको जङ्गबहादुरलाई बाहिरतिर मोडे– 'हट् है हट् ...,' बटुवालाई सावधानीको स्वर सुनाउँदै घोडा हाँके।

सवारको इसारामा चौपाया बुर्कुसी मार्दै थियो बाइपङ्खीको अनुकरण गरेर। एक भऱ्याङ उक्लिएर दोस्रो तलाको चोटामा पैयाँ ठोक्न थाल्यो ...। केही गतिशील चालपश्चात् जनाना लङ आइपुग्यो।

त्यतातिरको खलङ्गामा पुरुषको प्रवेश निषेध थियो। अश्व अघि बढेन, हिचकिचायो। अडाहा घोडाभैँ रोकियो। तर दोरङ्गाको लडकपना रोकिएन। अश्वको दुवैतिर कोखामा एडीले घोचेर हिँड्ने सङ्केत दिए। शिरमा मखौरोले ठटाउन थाले – स्वाँठ ... स्वाँठ ...– 'चल्, चल्, ...।'

चतुष्पद मानव अघि बढ्न बाध्य भयो। अन्त:पुरभित्र पस्यो। जनानाखानामा नाचगानका तालिमे बस्दथे। त्यहाँ कोही उर्दू गीत भुनभुनाइरहेका, कोही तेल मालिस गर्न लागेका, कोही हातगोडा धुन। ओठ र औँलाको टुप्पामा चिउरीको घिउ र कागतीमिश्रित लेप दल्न, कुनै रात्रिफेरुवा बदल्न, कुनै गाढा निद्रामा, कोही बिस्तरामा उत्तानो पल्टिएका।

सबै यन्त्रवत्, जऱ्याकजुरुक उठे– 'युवराजाधिराज सरकारको जय!' झुकेर दर्शन गरे अदबसित।

अभिनन्दितको आनीबानीबारे समीक्षा गर्ने हो भने उनी एक नम्बरका असत्ती थिए। अरू रोएको, कहालिएको, आत्तिएको, कष्टकर स्थिति हेर्न मन पराउने। अत: उनको अचानक आगमनमा तालिमे डराए। नाक, मुख सुक्यो। काँप्न थाले।

तर अहिले उनको मुहारमा सधैँभैँ रोषको रेखा छैन। केवल उटपट्याङ भाव मात्र। आफूले चार हातगोडा टेकाएर पीठमाथि चढेको चारखुट्टे मान्छेको परिचय सुनाए– 'यो घोडगधा हो, यसले तिमीहरूलाई सुलुत्त निल्छ।' नर्तकीतिर लक्ष्य गरेर घोडगधाको मुख तेर्स्याए– 'अब तिमीहरू मर्ने भयौ। भाग ...।'

पर्दाप्रथाभित्र बन्द परेका नारीलाई दरबारको हाताबाहिर निस्कन वर्जित थियो – पुरुषको सम्पर्कमा जान नदिने, झ्यालबाट हेर्नसमेत नपाउने। नाटक मञ्चनमा पनि पुरुष पात्रको भूमिकामा स्वास्नीमानिसले अभिनय गर्थे मर्दको आवरणमा।

यस्तो सङ्कीर्ण महिलादीर्घाभित्रका यौनप्यासीलाई युवक जङ्गबहादुरको उपस्थिति तिर्खाएको बटुवाले पानीको मुहान देखेझैँ आकर्षण भयो। केटीहरू भागेनन्। बालबबुरो युवराजलाई उल्लू सिधा पार्न 'लौन, सरकार! हामीलाई बचाइबक्सियोस् ...' भन्दै कहालिएको अभिनय गरेर रुन-कराउन लागे, थरथर काँप्दै थचक्क बसे। कोही खाटमुनि छिरे। कोही भित्ताको आडमा छेकिएर उभिए। बाकसभित्र पनि लुक्न पुगे।

लालाको ओन्याइँ अघि बढ्यो, लुकुवीको मुखनेर घोडगधाको थुतुनो झोसिदिन पुऱ्याए। कुनै युवतीको छातीमा, कुनैको भुँडीमा 'टोक् घोडगधा टोक्' हरबर जारिराखे– 'अब तिमी केटीहरू भुतुक्क मर्ने भयौ ..., टोक् घोडगधा ...!' चोसो उपस्थलमा ठोकाउन थाले।

घोडगधा टोक्न मान्दैन। 'गाल पर्छ सरकार!' विरोधमा हिनहिनाउँछ। खडा हुन्छ। महोत्पात मच्चाउन लाग्यो। प्रतिकारमा नजिक पर्न आउने स्त्रीतिर लात फ्याँक्छ तर नलाग्ने हिसाबले।

त्यही घोडे लात समातेर केटीहरू घोडा धपाउने निहुँमा जङ्गबहादुरलाई घचेट्न पुगे, तान्न थाले। अँगाल्न, चिमोट्न, कुतकुत्याउन, चुम्न थाले। आङमाथि उक्लने प्रयास पनि गरे। युवक जङ्गबहादुरका निम्ति यो शारीरिक छातछुत महाआनन्दको स्पर्श थियो। रोमाञ्चकारी हस्तमर्दन। तर युवराजको अबोध दृष्टिमा घोडा र केटीहरूबीच हात मिसामिस परेको भ्रम भएछ – दुवै थरी क्रोधले तमतमाएका, अलल्लिएका।

युवराज रमाए। पेट मिची-मिची हाँस्न लागे– हा ... हा ... हा ...। मनमोजी हाँसो– हा ... हा ... हा ...।

हाँस्यो कि नास्यो उखानझैँ अचानक तल्लो तलाबाट विनाशकारी आर्तनाद आएको सुनियो– 'राम-राम! ... कठै मेरो बाबा!'

करुण क्रन्दनको स्पष्ट सङ्केत थियो बिरामी परेका कान्छा युवराज दिवेन्द्रलाई व्यथाले चापेको, सायद उनको गाथमा तलमाथि परेको।

सबै भसङ्ग भए। त्यहाँको हँसिलो वातावरणमा स्तब्धता छायो।

चञ्चल केटीहरू भुइँमा भरेका किलिप-काँटा टिपेर कपालको आँठामा घुसार्न लागे छिटो-छिटो। कोही वस्त्र आङमा मिलाउन।

युवराज घोडाबाट हाम फाले। गम्भीर मुद्रामा तलतिर दगुरे। घोडा पछि लाग्यो।

सम्पूर्ण घर ओर्लिएको सुनियो रुँदै-कराउँदै – अलापविलापको डाँको. नभन्दै राजकुमार दिवेन्द्र यस लोकमा रहेनछन्। परमधाम पुगिसकेका। मृत देह मात्र बाँकी।





# २

केही दिनअगाडि उनी रुघाखोकीको ज्वरोले ओछ्यान परेका थिए। बिरामीलाई चिसोबाट जोगाउनका निमित्त कोठाको सानो छिद्र पनि बन्द गरेर गुम्स्याइएको हावा छिर्ने डरले। तागतका निमित्त दूधको मात्रा बढाइयो। त्यही पनि खावा दूध। यस्तो अवैज्ञानिक स्याहारसुसारको कारणले युवराज दिवेन्द्रको ज्यान गएको हो। परन्तु त्यो वास्तविकतातिर कसैले ध्यान दिएनन्।

श्री ५ जेठी महारानी साम्राज्यलक्ष्मीदेवी शाह पाँडे भारदारको योग्यताकी पक्षपाती थिइन्। थापा खलकलाई फुटेको नजरले देख्न नसक्ने. विशेष गरेर भीमसेन थापालाई। त्यस स्वभावको विपरीत श्री ५ कान्छी बडामहारानी राज्यलक्ष्मीदेवी चाहिँ थापाकी पक्षधर, पाँडेको नाम सुन्न मन नपराउने। तर प्रधानमन्त्री भीमसेन थापा यी दुवै राजमहिषीलाई समान भक्तिले हेर्ने, गाई-गङ्गा बराबर।

यस्तो तटस्थताको बाबजुद जेठी महारानीले आफ्ना कान्छा छोराको असामयिक निधन हुनुको दोष भीमसेन थापाको थाप्लामा थुपारिन् वैद्यद्वारा विष खुवाएर राजकुमार दिवेन्द्रको हत्या गरायो भनी।

उक्त आरोपको समर्थनमा युवराज सुरेन्द्रले सत्यको सही हाले। वैद्यराजले विष दरबारमा ल्याएको आफ्नै आँखाले देखेको ठोकुवा गरे पाचक माग्दाको घटना उद्धृत गर्दै। अब प्रधानमन्त्रीमाथि लागेको आरोपप्रति विश्वास नहुने कुरै भएन।

रुवाबासी चल्यो। धाई, सुसारे सबैले थापाको विरोधमा धारे हात देखाए, सत्तो-सराप गर्न थाले -- छाती पिट्दै रुँदै।

शोकाकुल वातावरणमा कान्छी बडामहारानीले थापाको वकालत गर्नु समयसापेक्ष थिएन। चुप बसिन्। तथाकथित अभियुक्त वैद्यराज एकदेव देउभाजू

शूलीमा जाकियो। शिवानन्द भवानीको छाला काढियो। भीमसेन थापा आजन्म कैद परे। उनको स्थानमा रणजङ्ग पाँडे प्रधानमन्त्रीमा नियुक्त भए। काठमाडौँको यो राजनीतिक उथलपुथलसित केही चासो छैन बुङताङ फाँट भर्न लागेकी सेर्बूलाई। न कहिल्यै भीमसेन थापा र रणजङ्ग पाँडेको नाम कानमा परेको न दरबारसित सरोकार। केवल भुइँ-दुधिलो र यथाशीघ्र गन्तव्यस्थानमा पुग्नसित मतलब।

यस्ती होस्ल्याङी १६ वर्षे पट्ठी (सेर्बू) आफ्ना आँखासामुन्ने वरपीपलको रूखमुन्तिर फ्वाँ-फ्वाँ निदाएको मस्तरामछेउको बाटो भएर जानुपर्ने हुनाले निद्रित सन्निकट प्रस्तुत हुन पुगी। त्यहाँ अद्भुतको दृश्य विद्यमान थियो, डरलाग्दो!

आनन्दित सुतुवाको टाउकोमाथि बडेमानको सर्प कुण्डलाकारमा बेरिएर बसेको। फणा फुलाएको, जिब्रो लपलपाएको।

'आप्पै!' चस्मदिद एकाएक भस्की। उसको विस्फारित नजर लामकीराको अर्धभाग फुलेको, जिब्रो बाहिर निक्लेकोउपर केन्द्रित हुन पुग्यो। नजिकबाट राम्ररी नियाल्दा त्यो फटाटोपले सुतुवालाई डस्न होइन, बरु सुरक्षा प्रदान गर्नका लागि फणा फुलाएको प्रतीत हुन्थ्यो। उक्त रक्षाकवचमाथि प्रत्यक्षदर्शीले विश्वास गर्न सकिन। आतङ्कित मुखबाट एकाएक चिर्सिएको चीत्कार निस्कियो– 'साँ ... प!' त्यो उन्माद पुनः दोहोरियो– 'साँप ...!' तेहेरियो पनि यस पल्ट लेघ्रो तानेर– 'साँप ... प ... प ... प ...!'

सुतुवाको निद्रा खुल्यो। १९–२० वर्षको। ओठमाथि जुँगाको रेखी, गालामा दाह्रीको भुवा, निधारमा रातो-कालो छड्के टीका। हातगोडा सुकसुकाउँदा। नङ नङकटनीबाट काटिएको। भेस प्रकार दौरामुनि लँगौटी-कछाड। खाली गोडा, बङ्गाली केशकर्तन।

गाउँले र सहरिया दोया आकृतिको, लोलाएका निद्रित आँखा माड्दै उठ्यो। सामुन्ने एउटी घँसिनी मकैको फूल फुट्ने पाराले पटटट प्रलाप्न थालेकी सुन्यो।

स्थानीय फलाको बुझ्न सकेन सिबाय दुई शब्द – आप्पै र साँप।

सिरानीमा खुकुरी रहेछ। तह मिलाएर पटुकाभित्र घुसार्‍यो। टोपी लगायो। आँखा पूर्व क्षितिजमा पुगे जहाँ सूर्योदयको पहिलो किरणको साथसाथ भानु बादलभित्र थिए।

घामदेउतातिर पलक बन्द गरेर उपासनामा दुवै हात जोड्यो। अर्चनापश्चात् चारैतिर नजर घुमायो। घँसिनी भयभीत भएर चिच्च्याएको कारण मेसो पाएन।

स्वास्नीमान्छेको त्रसित डाँको वनभित्र रुमल्लिन पुगेको थियो। त्यो आकुलित आवाजको वास्तविकता पत्ता लगाउने उत्सुकता च्यापेर वरपरका गोठाला, घाँसी, वनपाले र बटुवा हान्निँदै घटनास्थलतिर आए।

सर्प कुन प्वालभित्र पस्यो, सेर्बूले देख्न सकिन। न कतै गोहो।

उसले लामकीराबारे गरेको सविस्तार बयानको कसै-कसैले विश्वास गरे, धेरैले गरेनन्।

पत्याउने जतिले उक्त कुलिकको स्वत्वमाथि किंवदन्तीको पुच्छर गाँसेर अत्युक्तिको सीमा नघाउन लागे नागकन्या अथवा वासुकिको प्रतिमूर्ति भनेर। नपत्याउनेले त्यो विवरणलाई दृष्टिभ्रम ठाने।

खुद आफ्नै आँखाले देखेको सर्पणशील जीवजङ्गमलाई प्रमाणित गर्नका निम्ति लम्बेचौडे वादविवाद गर्नु व्यर्थ थियो। केवल घोक्रो फुलाउनु। सेर्बू आफ्नो बाटो लागी।

उक्त विवादित विषयको पुर्पक्षमा गरमागरम तर्क-वितर्क चलिरहेको। त्यस खल्याङमल्याङको अर्थ परदेशीले बुझेन। मात्र तिनको बोली नेपालको उत्तरपूर्वी पहाडी भेगमा बोलिने एक जातीय भाषा (तामाङ) भन्ने थाहा पायो। त्यसउपरान्त अरू केही जान्ने सरोकार राखेन। आफ्नो पिठ्यूँमा टाँसिएका पातपतिङ्गर टकटक्याउन थाल्यो।

टकटक्याहा काठमाडौँनिवासी हो। भीमसेन थापाको पतनपछि थापा खलकसँग सम्बन्धित व्यक्तिहरूका निमित्त समेत ठूलो सङ्कटकालीन स्थितिको सिर्जना भयो। यो बैँसदार पनि थापाको भानिज भएको कारणले सरकारी सेवाबाट खोसुवामा पर्‍यो। सर्वस्वसमेत हरियो।

यो सानो विपत्ति थिएन। बिहान-बेलुकी हातमुख जोर्न धौधौ। हरण भएको सम्पत्ति फिर्ता गराउन अनेक बिन्तीभाउ गर्‍यो। कतैबाट सुनुवाइ भएन। जीवन धान्ने सबै उपाय तिरोहित भएपछि जुवाको शरणमा पुग्यो खाइजिलोका निमित्त।

दुर्व्यसनले कसको फलिफाप भएको थियो र यो व्यसनीको भलो होस्! जुवा हार्‍यो, ऋणमा चुर्लम्म डुब्यो।

सापटी दिने साहूले धरपकड गर्न थाल्यो। यतिसम्मको नौबत आयो कि मूल सडकमा कठालो समातासमात। कहिले नालामा गाडिनुपर्ने, कहिले छिँडीको वास। यस्तो दरिद्रनारायण हालतको कारणले धन आर्जन गर्न मधेस झरेको हो चितवन – हात्तीखेदाका निम्ति। त्यस युगमा चितवन चारैतिर जङ्गलले घेरिएको अति उष्ण, औलोको प्रकोप भएको जिल्ला थियो। ज्यानमारालाई मृत्युदण्ड दिनुपरेमा पठाइने दमार। भारतको अन्डमन र निकोबार टापुसमान। त्यस्तो कालापानीमा हात्ती-सिकारको एकल प्रयास सफल हुन सकेन। त्यही विफलताको कारणले गर्दा राति मनमा नाना थरीका निराशावादी तर्कना खेलाइरह्यो, निद्रा परेन। बिहानीपख त्रिशूली लामिडाँडा आइपुग्यो। विश्रान्तिका निम्ति एउटा बुटेनबीच पल्टेको थियो। भुसुक्क निदायो। शिरमा गोमन बेरिएर बसेको चाल पाएन।

उसलाई यस जङ्गलको बाटोघाटोबारे राम्रो मेसो थिएन। अन्दाजको भरमा यात्रा गरेको। गोरेटो पनि ज्यादै घुमाउरो, साँघुरो, पदचिह्न हो कि होइन जस्तो। कतै त्यही क्षीण डोब पनि लोप। तसर्थ बटुवीको पछि लाग्न बाध्य भयो बटुवा।

पछौटेको विवशताबारे अनभिज्ञ छे अगुवी। उसको अनजान मनमा चिन्नु न जान्नुको केटो लिसोझैँ टाँसिन लागेको शङ्का पऱ्यो। निको लक्षण मानिन। त्यो आपत्तिको पुरियालाई हतोत्साहित गर्न ऊतिर फर्केर भुइँमा पिच्च थुकी, डोकोमाथिको आँसी थुतेर हातमा मुठ्याई हकार्ने मुखाकृतिले।

अग्रगामीको यस्तो सन्दिग्ध मनस्थिति बिलकुल थाहा छैन अनुगतलाई। बिनाशङ्का पछ्याइरह्यो। पुरुषको अपेक्षा स्त्रीको गति धिमा हुनु सहज प्रकृति हो। झन् सारो पिठ्यूँमा डोको। घाँसिनी लत्रिई।

सुस्त पादुकको पछि लागेर बेलडुबाइपूर्व ठेगानमा पुग्न असम्भव ठान्यो। शीघ्रगामीले डोकेनीलाई पछाडि छोडेर आफू लम्कियो। एकैछिनमा पर पुग्यो। कहिले बाटो भुलेर फर्किनुपर्दा मार्गदर्शक अगाडि हुन्थी, कतै पछाडि। छोटकरीमा यात्राको वर्णन गर्ने हो भने ती पादचारीले हिँड्ने प्रतियोगितामा प्रतिस्पर्धा गरेझैँ प्रतीत हुन्थ्यो।

यस्तो यात्राका क्रममा कुनै बस्ती नजिकको रूखमाथि पाकेको फल देख्नेबित्तिकै एक हिँडन्तेले अर्को हिँडन्तेलाई उछिनेर दाना टिप्ने, अनि लोभ्याउँदै खाने उल्लेखनीय चलन थियो। धेरै बटुवा भएको बखतमा यो उछिनपाछिनको

रसमले निकै होहल्ला मच्चाउँथ्यो। दगुरादगुर पर्ने, खोसाखोस, धक्कमधक्का। बाटोकटनीको एउटा हँसिलो सङ्घर्ष।

यही गाउँले रिवाजअनुसार सेर्बू कुदेर अम्बा चुँड्थी; कहीँ सलिफा, केरा। यो तँछाडमछाडको पहाडी प्रचलन सहरियालाई थाहा छैन। जान्ने चासो पनि थिएन। उसको बेवास्तालाई कमजोरी ठान्छे सेर्बू। फल टिप्ने होडबाजीमा आफूले लोग्नेमान्छेलाई उछिनेकी। त्यही विजयी घमन्डमा पराजिततिर फर्केर लोभ्याउँदै फल दार्न थाल्थी, तर मौन।

यस प्रकार ती मौनधारीको गति अगाडि बढ्दै थियो। बीचबाटोमा करिब ४० फिट चौडाइ भएको लमतन्ने खोँच तेर्सिन आइपुग्यो गमनमा अवरोध गर्ने हिसाबले।

खोच्याप्रोमुन्तिरको सोते बगरमा खहरे बगिरहेको छ्वाङ-छ्वाङ।

माथिबाट ५० फिटजति सिमसार भीर ओर्लनु-उक्लनुपरेपछि यस खोचिल्को पल्लापट्टि मजुवामा पुगिन्थ्यो। त्यसपछि पूरै पजलो।

सधैँ ओहोरदोहोर गर्ने अभ्यस्त बटुवाले बाहेक नौलो यात्रुलाई चिसमिरो पहरामा हिँड्न खतराले खाली थिएन। च्यापूले माटो खान सम्भव। नभन्दै त्यस्तै भयो, सहरियाको अननुभूत गोडा कराऌलो भीरको ओसिलो गगरानमा रड्कियो। शारीरिक सन्तुलन कायम राख्न सकेन। आर्द्र पाखामा सिलित्त चिप्लिएर थचारिन पुग्यो छोटो धोतीभित्रको ठाडो लँगौटीसमेत देखिने गरी।

८–१० कदम पछिल्तिर थिई घँसिनी। थच्काहाको उत्तानो टाङ, टोपी खसेको, टुप्पी ठाडो र लज्जित रातो मुख देखेर हाँसो थाम्न सकिन। खित्का फुत्काई खितित्त।

उत्ताने उत्तिनैखेरि हत्केला टेकेर उभियो। फिलामा टाँसिएको रुन्कारुन्की झार्न थाल्यो ओर्की-फर्की। शिरपोस लगायो।

उपहासक मुखभरि स्मित हाँसो पोतेर अघि बढी। अलि पर पुगेपछि हाँस्दै दगुरी– खितखित।

त्यस अट्टहासभित्र हिँड्ने प्रतिस्पर्धामा गाउँलेको आधिपत्य रहेको अहम् थियो। साथै केटाप्रति सहरिया ठेट्ना, पानीआन्द्रे, लाछी, बेकम्मा, अनुभवहीन खिसीटिउरी पनि।

गिल्लाको पात्र बन्नुपरेकोमा ज्यादै खट्किएछ उपहसितलाई। मरेतुल्य अनुभव गर्‍यो।

हँसी उडाइएको पलेसो लिने हेतुले सामुन्नेको खोँच करिब ३० फिट फराकिलोलाई एक फट्कामा नाघेर उपहासकभन्दा पहिले पल्लापट्टि डिलमाथि प्रस्तुत हुने आँट गर्‍यो आफ्नो सामर्थ्य प्रदर्शनका निम्ति।

त्यतिको लामो गल्छी नाघ्नु मानवजातिका लागि मुस्किल मात्र होइन असम्भव। तैपनि 'तँ आट्, म पुर्‍याइदिन्छु' दैवी कथनमा भरोसा राखेर आँटीले दुर्लङ्घ्य दर्रा फड्कने जमर्कोमा छाती फुलायो, टोपी राम्ररी लगायो नखस्ने गरी। शरीरमा स्फूर्ति ल्याउन दण्डबैठकी गर्न थाल्यो।

बसउठको अन्तरावधिमा हत्केलाको लपेटाले तिघ्रामा प्याट्ट ताली ठोकेर डोल्सीको चौडाइलाई ललकार्न जमिनमाथि सतहमा उफ्रन थाल्यो– बुर्लुक-बुर्लुक।

यस्तै किसिमको कसरत गर्दै प्राकृतिक अवरोधमाथि विजय प्राप्त गर्न धेरै पल्ट पूर्वाभिनय गर्‍यो।

सेर्बू तल खोलो तर्दै थिई, माथि डिलमा व्यायामीको ताउरमाउर देखेर उसको सोते नाघ्ने परलक्षित मनसाय बुझी। आँखामा परेको टड्कारो सूर्यकिरणको प्रखर तेजलाई ओझेल्न निधारमाथि हर्थुङ्गो खुम्च्याएर अनपत्यारको नजर उँभो तिखारी केटाको ताइँ हेर्न।

ठिटाको छाँटकाँटलाई मनोविकृति ठान्छे, नियति बिग्रेको। साथै सहयात्रीको अपहत्ते देख्नुपर्ने परिपाटी मिल्दै आएकोमा चिन्तित भई।

उसको अन्तस्करणबाट स्वतः मनोभाव सुरु हुन्छ– 'कस्तो कालले कुतकुत्याएको हरिलट्ठक होला? अघि सर्पले डसेको भए यतिखेर मरिसक्ने थियो, कुन दैवले बचायो?' एकालाप अघि बढ्यो– 'अब फेरि यो अल्लारेको कस्तो दुर्दशा हेर्नुपर्ने हो?' पानीबीच ठिङ्गिई। 'यसको मर्ने मन हुँदो हो त अन्तै गाडिएको भए पनि हुने। किन मेरो सामुन्ने काल खोज्न आ'को हो?' ओठ लेप्राएर अपानवायु फुस्कने पाराले घिनलाग्दो पिरिरि...रि...रि...री... मुखोच्चारित व्यङ्ग्य आवाज प्रकट गरी खिज्याउन।

उता केटो कार्यसिद्धिका निमित्त अन्तिम कसरत गर्दै छ। यताउति हेऱ्यो – जतातत‍ै बोटबिरुवा, झाडी, रूखैरूखको समुद्र। 'लेकै फुल्ने लालीगुराँस, बेँसी लालुपाते' देख्छ। कतै काफल पाकेको; कहीँ ऐँसेलु, बयर, निबू; पदेल, अमारी, दमाहागेडी, किम्बू आदि लटरम्म फलेका।

उत्तर क्षितिजमा मनोरम श्रीपेच लगाएर ढसमस्स विराजमान छ सगरमाथा – सर्वोच्च हिमशिखर। अन्य श्वेत शृङ्खला, नीला पहाड, हरिया जङ्गल, सघन वन, त्यस आबादीरहित क्षेत्रमुन्तिरका पाटा-पाटा परेका कान्ला, खेतसँगै जोडिएका स-साना गाउँमध्ये एक हो बुङताङ – सेर्बूको मावल। तर यतिखेर नजरले राम्ररी पहिचान्न सकिँदैन। केवल अनुमान मात्र हुन्छ। रसिला पाखा-पखेराबाट झर्ना झरिरहेका।

खोलानाला-खहरे तेज गतिमा सुसाइरहेका– स्वाँ-स्वाँ।

झ्याउँकीरी कराएको झ्याउँ-झ्याउँ, टिर्र-टिर्र।

बटुवाको आवतजावत छैन। चकमन्न स्थिति।

कहिले मन भरङ्ग हुने, कहिले रमाउने। उँभो नीलो नभ, तितरी पङ्क्ती। उँधो मार्गदर्शीको परिहासपूर्ण मुख गोचर। परन्तु परिहासकको तलतिर फर्किएको अधरबाट निस्किएको निन्दाभाव प्रकट गर्ने अनधिकृत आवाज पिरिरी ... पिरिरी ... सुनिँदैन।

जे होस्, केटीको व्यङ्ग्यपूर्ण हाउभाउले केटाको पहाडी चेपो नाघ्ने दृढता झन् सारो बढ्यो। आफूलाई खिसी गर्ने आइमाईको सेखी झार्नका निम्ति पनि आँटिको कामबाट विमुख भएन। पटुका दुईतीन हातजति फुकायो। पुनः बेस्सरी कसेर बाँध्यो। कछाड माथि स्याहाऱ्यो। 'जय गोरख!' ठूलो पुकारका साथ खोँचको एक किनारबाट उफ्रिएर फटक्क फड्को माऱ्यो। अलिकति पर बाँसको झ्याङ थियो। त्यसको निउरमुन्टी टुप्पालाई गाँजेर दुईचार पटक मच्चियो पिङ खेलेझैँ। अन्तिम फेरको चचहैमा निकै माथिसम्म हुत्तिएर हात छोड्यो। दुवै बाहु समानान्तर स्थितिमा फैलाएर हनुमान्ले क्षारसागर पार गरेको पाराले भनूँ अथवा उडुवा लोखर्केको ढाँचाले आकाशमार्गबाट कन्दराको पल्लो डिलमा टेक्न सफल भयो।

'क्याबात सहरिया!' घँसिनीको मस्तिष्कमा सराहनी सिर्जना भयो। देखतभुलीमा परी। मनमनै गुन्न लागी– 'यो केटो इन्द्रजाली हो या यो मेरो सपना?' चारैतिर नजर घुमाई पल्याकपुलुक।

उही परिचित कानन, विकट भौगोलिक स्थिति, डाँडाकाँडा, टाकुरा, साना-ठूला आबादी, पाटा-पाटा परेका कान्ला, खेत, रसिला पाखापखेरा, बुङताङ पनि आफ्नो पुग्नुपर्ने ठाउँ। तब बिपनाको वास्तविकतामा विश्वस्त भई।

नजानिँदो तरिकाले उसमा स्वतः केटाबाट पराजयको ढब्बुपन छायो। साँच्चिकै नाक काटिएको अनुभव गर्न थाली। घाँसको भारीभन्दा विस्मय र 'क्याबात सहरिया!', 'स्याबास!' आदि प्रशंसाको बढी बोझ बोकेर उकालो लागी – हम्मे-हम्मे।





# ३

तरुनीप्रति आकर्षित हुनु तन्नेरी स्वभाव हो, खास गरेर एकान्त ठाउँमा। यो विलङ्घनवा मात्र किन अपवाद हुन्थ्यो। उदाहरणार्थ गोरेटो धागो तानेको जस्तो सिधा आयो। केही फराकिलो पनि, साथै विशाल रपट। यतिखेर परदेशी आफ्नो बाटो लाग्नुपर्ने हो खुरुखुरु। उसभित्रको पुरुषत्वले त्यसो गर्न दिएन। सहगामीलाई पर्खिरह्यो।

अन्दाजी २० मिनेटको उकालो चढेपछि डोकेनी देउरालीमाथि आइपुगी पसिना पुछ्दै। डोको अड्याउने सजिलो ठाउँ छानेर भारी बिसाई। त्यही बिसौनी-अभिमुख प्रतीक्षक पनि आसन जमाउन प्रस्तुत भयो सुस्ताउने निहुँ गरेर। वास्तवमा ऊ आफूलाई हाँसोमा उडाउन खोज्ने उपहासकको अनुहारमा आफ्नो भीषण कार्यसफलताले मेख मरेको क्लान्त प्रतिक्रिया हेर्न चाहन्थ्यो, कर्के आँखा गाढेर निहारिरह्यो।

सेर्बूलाई मामा-माइजूको साथ लागेर चाडपर्वमा घ्याङमा छ्याङ खान जानुपर्दथ्यो; रोधीघरमा नाच्न, रोपाइँमा तमाङसेलो गाउन। त्यस पर्वोत्सवमा बूढापाकाले उसको बिहेबारीको कुरा चलाउँथे। यो किशोरी सुन्न मन नपराउने। केटाप्रति एकौटा खोट देखाएर नाक चाउरी पार्थी, भाग्थी। त्यस्तै निन्दनीय दृष्टिकोण यो परदेशीप्रति पनि राख्दै आएकी थिई बाटोभरि। त्यो नकारात्मक सोचमा अपर्झटको सकारात्मक बदलाव आएको छ। साटिएकी जस्ती।

उसको विचारशक्तिमा सहरिया ठेट्ना भन्ने अघि जुन तुच्छ भावना थियो त्यो विषाक्त हेला अब रत्तीभर छैन। दोषाग्रही एकाएक प्रशंसकमा परिणत भइसकी। त्यहाँ भारी बिसाउनुको कारण पनि विश्रामका निम्ति मात्र नभएर केटाको विषयमा जान्ने उत्सुकता पनि हो। परिचयात्मक छड्के नजर गाडेर उसको मुखमा हेर्न थाली।

धेरै राम्रो आकृतिको थिएन केटो 'वाह! वाह!' तारिफ गर्न सुहाउँदो। 'छिः! नराम्रो' खोट देखाउन पनि नमिल्ने।

मोटो न दुब्लो, मध्यम कोटिको। कद अन्दाजी पाँच फिट छ इन्च। गोरो वर्ण, तेजिला आँखा, ठूलो निधार।

एकक्षणअघिसम्म यो पिछलग्गूलाई घृणाले खकारेकी थिई। भिरालोमा चिप्लेर थचारिँदा परिहास गर्न मनमनै 'खुच्चिङ, खाइस्' को कोखेसोसमेत बजाएकी। तर यतिखेर विधिको विडम्बना हो वा त्यस लक्का जवानले देखाएको पुरुषार्थको परिणाम, दैव जानून्। पुरुषार्थीलाई विलक्षणको दृष्टिले हेर्न थाली, स्तुत्य। चौपट्टै मन पराई।

बामे सर्न लागेकी सानी नानी अग्निकुण्डमा आकर्षित भएझैँ गाउँकी स्वच्छन्द बाला पहिलो भेटमै भनौँ या प्रथम देखादेखमा सम्मोहित भई। एकाएक सशक्त प्रेमपथमा पाइला टेक्न पुगी।

यो काँचो वशीकृतलाई मायापिरतीको डगर उबडखाबड छ ईर्ष्या, द्वेष, लाञ्छना, गलतफहमी, घात-प्रतिघातको। यस्ता आत्मनाशी निर्माणलाई अँगाल्न खोज्नु त्याग-तपस्या, बलिदान र निष्काम कर्म अनि तड्पनको विस्मृतिसिबाय केही हात नलाग्ने दुःखदायी अनुभव छैन।

बरा, यो निश्चेष्ट वशीभूतको निधारमा एक ट्याप टीका पनि नास्ति। सहरिया कोरीबाटीसँग अपरिचित।

धेरैजसो माटोमा मुछिएर काम गर्नुपर्ने। गत राति ढिकी-जाँतोको अनन्त पिसानले राम्ररी निदाउन नपाएकी। एकाबिहानैदेखि चुलोचौको र गोठेधन्दामा व्यस्त।

दैहिक रूपले अग्लिन नसकेकी तर गान्टी होइन, दर्बिली। घामले डढेकी। मुखको आकारप्रकार मङ्गोलियन भए पनि ठूला-ठूला आँखा। बान्की परेका ओठ। त्यस्तै नाक।

स्वभाव पखिनी, खालि हातले सिँगान पुछ्ने। जथाभाबी पिच्च थुक्ने। दाँत कोट्याउने। कपाल कन्याउने। खित्का छोडेर हाँस्ने। उफ्रँदै हिँड्ने। दगुर्ने। पुट्ठा ठटाएर हर्ष प्रकट गर्ने। जिब्रो टोकेर त्रास व्यक्त गर्ने।

फुटेका हातखुट्टा, चिरिएको ओठ। धूवाँगन्धे लुगा। आङबाट खुकुन्डीको हरक आउँछ।

यस्ती गन्धेनीको अपरिष्कृत आनीबानीमाथि परिष्कृत जवानीको लाज पचिनसकेको। कलकलाउँदी कली।

समय अघि बढ्दै गयो, तैपनि ती पदगामी एकअर्काको मन कोट्याउन अघि सरेनन्।

कसकी छोरी हो? कसकी बुहारी? विवाहित पनि हुन सक्छे। अन्य पुरुषको मुखै नहेर्ने असांसर्गिक। वार्तालापको श्रीगणेश गर्नेबित्तिकै हँसिया उज्याएर काट्न आइलाग्ने पो हो कि?

मनपेट पाउन नसकेकाले कुराकानीको सुरुआतका निम्ति आफूलाई अत्तो नलाग्ने किसिमको शिलिष्ट मङ्गलाचरण गर्न थाल्यो केटो।

त्यस्तै निरर्थक वाक्यको रचना गर्ने मनोवृत्तिमा नत छे नवप्रेमिका। जवानीको नौलो अनुभवले डराएकी, काँपेकी, जिब्रो सुकाएकी, निधारमा पसिनाका बुँद उम्रिएका मुख रातोपीरो।

लाजले काज नबन्ला जस्तो ठान्छे। मायालुको मुखमा स्नेहाङ्कुर नजरले पुलुक्क हेरी।

धक विलिप्त, शिर ठाडो गर्न सकिन, पुनः घोप्टिई। दुवै हत्केलाभित्र रक्तिम चेहरा लुकाएर छोपी, उन्मुक्त हाँसो हाँस्न लागी– हा ... हा ... हा ...।

उत्साहित भयो केटो, तैपनि कामुकी प्रस्तावनाका निम्ति स्वेच्छाचारी हात बढाउन सकेन, न प्याच्च मुख फोर्न।

समसामयिक विषयलाई आधार बनाएर चोखो वार्ता आरम्भ गऱ्यो संयमसँग– 'यहाँबाट बुङताङ गाउँ पुग्न कति समय लाग्छ बहिनी?'

बहिनीलाई राष्ट्रभाषा कुन चराको नाउँ हो, थाहा रहेनछ। उसले निरीह अवलोकन तिखारेर आफ्नै बोलीमा खेद प्रकट गरी– '*खै, डुब्बे खस ग्यात आसें।*' (खै, म खस कुरा जान्दिनँ) पुनः निहुरिएर उन्मुक्त हाँसो खित्काउन थाली– खितखित।

वास्तवमा त्यो आत्मीय खित्का हाँसो थिएन। राष्ट्रभाषा नसिकेको पछुतोको रोदन र क्रन्दन थियो। छाती पिटी-पिटी गरेको बिलौना। एकातिर त्यस्तो ताल न मालको रुन्चे हाँसो, अर्कातिर तामाङ बोलीमा तालव्य व्यञ्जन बढी हुने भएकाले अधिकतर अभिव्यक्ति चड्का सुनिनु स्वतःसिद्ध छ। अतः गाउँले केटीको मुखबाट

निस्किएको अपरिमार्जित कण्ठध्वनि सहरियाका कानमा बादल गड्याङगुडुङ गरेको जस्तो गर्जन गुञ्जायमान हुन पुग्यो। अझै भन्ने हो भने चट्याङ परेको विनाशकारी गड्काइजस्तो। फलत: केटाको मनमा ती कर्कश वाक्योच्चारणको उल्टो अर्थ सिर्जना भएछ – केटी रिसाएकी, बोल्न मन नगरेकी, गिज्याएकी, हप्काएकी, झर्केकी।

मानसिक प्रवृत्तिले ऊ स्त्रीलम्पट थियो। दुई खुट्टामा उभिएकी भए पुग्ने। साथै यस्तो स्थितिमा केटी मान्छेको मुखतोड, ततर्कोफतर्कोमाथि विजय पाउन खली खाएको बेसुल्लो। त्यही नैतिक कमजोरीको कारणले गर्दा ऊ आफ्नो बाटो सुरुसुरु प्रस्थान गर्न छोडेर यहाँ पर्खिबसेको वनयात्राको लाभ उठाउने दुराशयमा।

परन्तु दुराग्रही तामाङ भाषा जान्दैन। तामाङ्नीको नेपाली बोली रैमटू। कसरी फकाउनु? फकौटेको लालसामाथि तुषारापात भयो। फलत: यो अनकन्टार जङ्गल र षोडशीसितको जीवन्त सामीप्यलाई आकाशवृत्ति अनुभव गर्न थाल्यो। बिनसित्तिको मनकल्पाइ, समयको बर्बादी, बदनामीको घर।

यस्तो निरर्थक अवस्थालाई प्रलम्बित राख्न उचित देखेन। मन मारेर जुरुक्क उठ्यो प्रस्थानार्थ। उता मनोवाञ्छित वरले आफूलाई मन नपराएको, जान लागेको भ्रममा परी वाहनिक। ऊ पनि यात्रा आरम्भका निम्ति डोको-नाम्लो समेट्न थाली निराशाको हात थरथर कँपाउँदै। दुवै पदचारी बाटो नाप्न थाले – अस्पृह पाइला!

केही कदमअगाडि थिई घँसिनी, भारीको बोझले लच्किएकी। नागबेली आकारमा डोलिएको नितम्बविम्ब, नुहिएको कम्मर। खन्जनचरीको फ्याक-फुरुकलाई पछिल्तिरबाट अवलोकन गर्ने रहरले नजानिँदो तरिकाबाट पछाडिएको थियो गुन्डो कात्तिके कुकुरझैँ। संयोगवश डोकाको प्वालबाट झारपातको भारीभित्र अँगेरीका दुईचारवटा सिम्कना देख्यो पाउलोसहित। त्यो सेतो वा नीलो रङ्गको स-साना फूल फुल्ने एक किसिमको बुटो, धेरै मात्रामा बस्तुभाउले खाएको खण्डमा नजाती असर गर्ने। छाद्ने, मर्न पनि सम्भव। यस्तो हानिकारक चाराको जानकारी दिनका निम्ति दुराचारी लम्क्यो। अगुवाको करिब पुगेर खतराको घण्टी बजाइदिने मनसायले डोकाको दुलोबाट अँगेरीको हाँगो हलुका हातले थुतेर सुस्तरी हल्लायो डोकेनीको ध्यान खिच्न।

तामाङ बोलीको अभावमा सूचना दिनका निम्ति यसो गर्नुसिबाय अर्को विकल्प थिएन। परन्तु यो उक्ति जति निष्परिग्रह र भलो मनसितको भए पनि अँगेरीको डाँठपातले विशुद्ध नितम्बमा छुन पुग्यो।

'भालुको मन खनिउँमाथि' भनेभैँ उसको दोषी मनमा भ्रम पऱ्यो आफ्ना दुई तिघ्राको जोर्नीमुनि केटाले पछाडिबाट औँलो ठोसेको, इतरिन खोजेको। आङ जिरिङ्ग भएछ। 'आप्पै!' झस्किँदै पछाडि फर्केर हेरी मुसुक्क हाँसी। त्यति बेला डोकाबाट दुईचार सिटा झरे। ती सिम्कनालाई जतनसित उठाएर ठोसुवाले यथास्थानमा राखिदियो।

वनिका खुसी भई। ओठमा कुरकुरे मुस्कान अनायास फक्रियो– मुसुक्क।

यो मुस्कुराहट स्त्रीलम्पटका निम्ति सानो आकर्षण थिएन। चुम्बकमा फलाम टाँसिने तरिकाले लिप्सिन पुग्यो रतिभाव प्रकट गर्दै।

'के खोज्छस् काना आँखो' झैँ भयो छोरेटीलाई पनि। तर ऊभित्रको नारीसुलभ लजालु मनोवृत्तिले, सायद अप्रौढताको कारणले पनि बीचबाटोलाई लसपसका निमित्त उपयुक्त थलो ठहऱ्याइन।

प्रेमपाशबाट फुस्केर लीलोद्यानको खोजमा जङ्गलतिर भागी देखौवा आँखा तर्दै। त्यो भृकुटीचढाइ स्त्री-स्वाङ हो या आलेकाँचोपना अथवा साँच्चिकै नकारात्मक प्रतिक्रिया, बुझ्न असमर्थ छ नौजवान। मुठीभित्रकी चरी उम्किएको अनुभव गर्छ। खिस्स पऱ्यो, अतृप्त नजर तिखारेर भगुवीतिर हेरिरह्यो।

पलायित निकै पर पुगी, वनभित्र पस्ने बखतमा पछाडि फर्केर हेरी, मुसुक्क हाँसी। मन्द मुस्कानको आभ्यन्तरिक अर्थ थियो पूर्णतया आत्मसमर्पणको मायालु निमन्त्रणा।

निम्तालुले प्रस्ट चाल पायो। परन्तु ऊ लरतरो चोटले यहाँ आइपुगेको थिएन।

चितवनको हात्तीखेदा विफल भएपछि पुनः भाग्य अजमाउन लाहोर जान हिँडेको पन्जाबी सेनामा भर्ती हुन। येनकेनप्रकारेण दुई दिनमा ठोरी नेपाल-भारत सीमा पुग्नुपर्दछ। पर्सि सोनपुरको रेलगाडी नसमाती हुँदैन। अन्यथा पल्टनमा भर्ना गराउने गल्लावालसँग भेट्ने कार्यक्रम रद्दीको टोकरीमा मिल्किने।

यस्तो चूडान्त स्थितिमा केटीसँग बिहिलिँदै जङ्गलतर्फ लाग्नु कि तोकिएको समयमा भर्ती केन्द्र पुग्नका निम्ति यथाशीघ्र मुगलान भासिनु।

दोमन भयो उम्मेदवार रिकुटेको। असमञ्जसमा उभिइरह्यो अस्थिर मनले, निर्णयहीन।

उता आफ्नो स्नेहपात्र दुबिधामा परेको चाल पाएकी छैन प्रेमिकाले। प्रियतम पछि लागेर आउने कुरामा विश्वस्त छे। आङभरि रतिरागको कामुक प्वाँख उम्रेको नौलो अनुभव गरेकी। सुनौलो अनुरागको नीलो नभमा उडेकी, आनन्दमासमा पुग्र बिभोर।

जताततै रनबन फुलेको देख्छे, प्राकृतिक विविधता। कतै गुराँस, कतै चाँप। कहीँ डाँफे नाचेको, मुनाल उडेको, कस्तूरी मृग बुर्कुसी मारेको।

उत्तरतिरको क्षितिज छर्लङ्ग खुलेको। लौकिक वैभवले सिँगारिएको नीलगिरि, माछापुच्छ्रे, अन्नपूर्णा हिमशृङ्खला स्पष्ट अपूर्व मानसिक उत्तेजनमा कण्ठभरि ...को हा ... हा ... हा ... स्वर सुनाउँदै बाक्लो जङ्गलको दाहे गौँडामा पुगी। त्यहाँनिर बघिनीको ओढार रहेछ। मनुष्य-हरक पाउनासाथ बूढी माउ गुफाबाहिर निस्की। रागेपाटे शरीर, खैरा आँखा।

आङ ढक्क फुल्यो सेर्बूको, सतर्क भई। हुन त विगतका दिनमा पनि यसरी हिंसक जन्तुसँग जम्काभेट नभएको होइन। कहिले लुक्थी। कहिले जन्तु आफैँ पाखा लाग्थ्यो। यस पल्ट त्यसो भएन, अनाहक प्रवेशकसँग चार आँखा हुनेबित्तिकै बघिनीले आक्रामक रूप धारण गरी डुर्र नङ्ग्रा फुलाएर ह्वाङ्ग गर्जी।

गर्जकका आँखामा आँखा जुधाएर तामाङ भाषामा हप्काई– 'यो बघिनी किन जोरी खोज्छे? जा आफ्नो बाटो!'

बघिनीले बच्चा पाएकी रहिछ। मानिन। डमरुको संरक्षणार्थ रिसाएकी हो कि या हँसिया देखेर? अथवा केटी निषिद्ध कार्यका लागि आएको कुत्सित मनसुवा थाहा पाएर। हुन सक्छ भोकाएकी पनि।

दुवै पन्जा फुलाएर भुइँ खोस्रिन थाली। छिनभरको कोतऱ्याइपछि पुच्छर डोलाएर एकै गाँसमा निल्ने बडेमानको व्याघातसहित झम्टी ह्वाङ्याङ्ग।

'आच्या!' आक्रान्तको होसहवास ठेगानमा रहेन, वस्त्र न हँसिया। एकाएक उफ्रिएर कटुसको हाँगामाथि चढ्न पुगी। डोको-नाम्लो भुइँमा झऱ्यो।

आवेशमा थियो जन्तु। सिकारलाई गाँज्न राम्रो भेउ पाएन। डोकामाथि जाई लाग्यो। चिथोर्न थाल्यो, हन्ड्याङहुन्डुङ पाऱ्यो।भित्रका झारपात छरपस्ट भए।

डोको पाँच सय फिट तल खोलामा खस्यो, बग्न थाल्यो।

पानीका निम्ति एक बिहानभरको बाटो खोलो धाउनुपर्थ्यो। केही गरी त्यस सिलसिलामा गाग्रो फुट्न गएमा वाहक छाती पिटेर रुने गर्थ्यो। विरहले छाक छोड्ने। अझ बैकिनी वाहक परेमा त्यस्ती बिगारसिंह पुतारीलाई हम्मेसी घरदैलोभित्र छिर्न निषेध गरिने। यस्तो दैन्य सामाजिक परिवेशमा घँसिनीले सजिलैसित डोको माया मार्न सकिन। त्यसको बचाउका निम्ति रूखबाट ओर्लन पनि भएन। बघिनीले निलिहाल्ने।

आफ्नै बोलीमा 'लौन दाजुभाइहो! डोको छेकिदिनोस्। मावलीबाट पेवा आएको हो। नयाँ छ। त्यो नभए म घर नफर्के पनि हुन्छ' चिच्च्याई, रुन-कराउन लागी।

अकुलित आवाज वनभित्र रुमल्लिन थाल्यो। खोला, खहरे, पाखा-भित्तामा प्रतिध्वनित हुँदै परदेशीका कानमा पुग्यो।

उसले बाघको गर्जन सुनिसकेको थियो। जननी आर्तनादको लाक्षणिक करुण क्रन्दन पनि ठम्यायो, तर वाक्यसमूह बुझेन। एक त आफूसँगसँगै आएकी हिँडुवी, त्यसको अतिरिक्त मायालु निमन्त्रकलाई सङ्कटापन्न स्थितिमा अलपत्र छोड्न मनासिब ठानेन। फेरि ऊ सिकारको औधी सोखिन। त्यही वधिक चित्तवृत्तिको कारणले होला वधक धपाउने ठूलो स्वर गर्दै सहयात्री कराएको दिशातिर हान्नियो– 'हा ... हा ... हा ... हा ... हा ...!'

मनुष्य-हुङ्कार बघिनीका कानमा पऱ्यो। टेरपुच्छर लगाइन। आपत्ग्रस्त महिलालाई तरुकोटरबाट झार्ने ताकमा वक्रदृष्टिले मास्तिर हाँगामा हेर्दै थिई। सिकारी केटो आइपुग्यो। मृगराजलाई खेद्ने चेष्टामा दापबाट खुकुरी थुतेर नचाउन थाल्यो– 'हा ... हा ... हा ...!'

चिच्च्याहटको हिंसक पशुमाथि कुनै असर परेन। झन् सारो सेर्बूतिर जाई लाग्न आँटेको तत्परताबाट फर्किएर खुकुरीधारीउपर आक्रमण गऱ्यो; ह्वाङ्ग्राङ्ग ढाडमा बाघ-लपेटा हान्यो।

शस्त्रधारी पेसेवर मारक रहेछ। काटमारमा पटु। बाघपन्जाबाट फुत्कियो। दोस्रो खेपको मुठभेटमा भुजेङ्गली यति छिटो चलायो कि त्यसको तेजिलो चोटले बघिनीका दुवै बाजु ठुन्काइदियो। तेस्रो पटकको छप्काइमा थुतुनो ताछेर बङ्गारा

भार्‍यो। घायल बघिनी भन् क्रुद्ध भई। डुँडुलो पाखुराले जथाभाबी अचेट्न, चिथोर्न प्रयत्न गरी।

दुईखुट्टे र चारखुट्टेको मल्लयुद्ध सुरु भयो।

मुटु छियाछिया भएको अनुभव गर्छे सेर्बू। आँसु र पसिनामा डुबी। घाँटी सुक्ने गरी कराइरहेकी छ बघिनीलाई तर्साउन, साथै द्रुत गतिमा जलप्रवाहमा बगेको डोको बचाउनका निम्ति।

प्रारम्भमा अखडाभित्र बुङ्ग धूलो उडेको थियो। यतिखेर भारपात माडिएर रगतले पोतिएको – बलिवेदीसमान।

दुवै प्राणी एकनास जुधिरहेका मर्नु र बाँच्नुको दोसाँधमा। अन्तमा चौपायाको मुटुभित्र खुकुरीको टुप्पो रोपिन पुगेछ। दर्दनाक चीत्कारसहित लडी– डङरङ्ग।

अपगत चौपायाको गिँडले दोपायाको तिघ्रा थिचिएको थियो। आफूमाथि सोत्रिएको सिनो पन्छाएर दुईखुट्टे जुरुक्क उठ्यो।

सेर्बूले करतलध्वनिद्वारा हर्ष प्रकट गर्नुपर्ने हो, तर गाउँघरमा थपडी मार्नुको अर्थ खिज्याउन, उपहास-निन्दा आदि तिरस्कार जनाउन निकालिने अपमानजनक सङ्केत भएकाले ताली बजाइन। रूखको निकै माथि टुप्पोमा पुगेकी रैछ। चुपचाप ओर्लन थाली। विजेताको दीर्घ श्वास बढिरहेको थियो चालू खलाँतीजस्तो स्वाँ-स्वाँ, तैपनि हतियारमा लागेको रगत सिनोमाथि पुछ्यो चारपाँच पटक। अस्त्र दागरहित भएपछि दापभित्र थन्कायो।

अब उसले सर्वप्रथम सहयात्रीको खोजी गर्नुपर्ने हो, अनि प्रणयसम्बन्धमा जोसिनु। त्यस्तो उच्छेलीतिर मन ढल्काएन। आफ्नो जीउमा लागेको चोटपटकबाट छुरो रगत बगिरहेकोमा पनि खास चासो लिएन।

साधारण खालकी बघिनी होइन रैछ। अनौठो नस्लकी। थुतुनो गोमुखी, थेप्चो नाकको डाँडी केही मास्तिर उठेको। पुच्छर निक्खर कालो, टुप्पामा गाईबस्तुको जस्तो झ्वाप्प रौँ उम्रिएको।

यस्तो अप्राकृतिक ऐरो राजप्रासादमा महत्त्वपूर्ण नजराना हुने कुरा यो जन्मजात दरबारिया शुश्रूषुलाई थाहा थियो। पूर्वकालमा उसका हजुरबा भू. पू. सेनापति रामकृष्ण कुँवरले श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहलाई यस्तै अद्भुतको भेट चढाएर साथै अनेकौँ जमामर्दी देखाएर रिझाएका थिए।

बाबु बालनरसिंहले पनि यस्ता सुनौला मौका चुकाएनन्। तिनैको प्रशिक्षणमा परेको यो तालिमे पनि प्रशिक्षकको पदचाप अनुगमन गर्न किन बिराउँथ्यो? छोटकरीमा भन्ने हो भने उसले बघिनीको मृत कायमा आफ्नो उत्तरोत्तर प्रगति-उन्मुख भविष्य देख्यो।

श्री ५ राजेन्द्रलाई सम्झियो।

एकचित्तले सिकारको लम्पसार कायालाई निहारिरह्यो– अन्यमनस्क।

क्षेत्रपति रिझिने। आफ्नो तायदाती सम्पत्ति फिर्ता पाउने। साथै सरकारी सेवामा पुनर्नियुक्तिको तृष्णामा उसको महत्त्वाकाङ्क्षी चित्तवृत्ति उडेर काठमाडौँ, हनुमानढोका पुग्यो।

तत्पश्चात् बघिनीको लासजाँचलाई प्राथमिकता दियो। सिनोको लम्बाइ, चौडाइ, उचाइ आदिको परिमाण ओल्टाई-पल्टाई लिन थाल्यो। १४ हात एक कुरेत लामो। चौडाइ पाँच हात एक बित्ता चार अङ्गुल।

नापजाँच सकेपछि बघिनीको गुँड निरीक्षण गर्ने याद आएछ। विजयी शोभायात्रामा जाने सानले बघिनीको गुफाभित्र प्रस्थान गऱ्यो। सेर्बू डोको खोज्न भौँतारिएकी थिई। खहरेतिर आँखा लगाइरहेकी।

मावल कोसेली लान सञ्चित झारपात यत्रतत्र छरिएको देखी। ती वनस्पतिलाई पूर्णतया मायाः मारेर चुपचाप जेता योद्धाको पछि लागी।

हँसिया कम्मरमा घुसारी। कुममा रूखको हाँगाले दरफऱ्याएको थियो। निधार पाछेको। फरिया च्यातिएको। श्रान्त शरीर। मुहार श्रीहीन।

विजयीले देख्यो, संवेदनशील मनस्थितिमा घाइतेनिर पुग्यो ढाडस दिन।

भाषाको समस्याले गर्दा वाक्यद्वारा खेद प्रकट गर्नु व्यर्थ थियो, बुझ्ने होइन। लाटालठेब्राप्रति दुःखजनाउ गर्ने पाराले मुख गुहाभित्र तालुमा जिब्रो पड्काएर मानसिक पीडाको संवेदनशील स्वर च्च ... च्च ... सुनायो। हुन त स्वयम् उसको गति पनि बीभत्स थियो। ढाडमा दौरा च्यातिएको, आङमा नखक्षत, मुखमा रगतको छिटा, लुगा पसिनाले ल्याफल्याप्ती। देह बाघे हरकले डुङ्ग गनाउने। गालामा किर्नु टाँसिएको। प्रेमीको यस्तो क्षतविक्षत स्थिति हुनुमा आफूलाई दोषी ठान्छे प्रेमिका। निकृष्ट अपराधी, किनकि अघि प्रेमालिङ्गनबाट फुत्किएर एकान्तको खोजमा जङ्गलतिर नअनमरेकी भए हुने हुनामी मूल बाटैमा सम्पन्न हुने थियो –

झाडीभित्र या रूखमुनि। बघिनीको मुख पर्नु नपर्ने। न आफ्नो आराध्यदेवलाई यस्तो घातक बबालको नौबत।

यो महाभूलका निम्ति ऊ क्षमायाचनासँगसँगै आफूलाई बघिनीको कालरूपी आक्रमणबाट जोगाइदिएकोमा कृतज्ञता प्रकट गर्न चाहन्छे। परन्तु उही राजभाषाको अड्को।

यतिखेर ऊ आफ्नो जिह्वा मनुष्यवत् नभएर गाईबस्तुको जस्तो अभिव्यक्तिहीन मासुको लेग्रो भएको अनुभव गरी। मनमा गुम्सेको त्यो तापलाई नेत्राम्बुबाट पोख्न चाहन्छे धुरुधुरु रोएर।

रुने, कराउने, थकथकाउने, बह र वेदनामा खेर फाल्ने समय छैन। न संयोग-शृङ्गारको शारीरिक स्थिति।

त्यहाँ एउटा डमरु रहेछ। त्यस छाउरालाई च्यापेर विजयी बाहिर निस्कियो थुतुनो र ढाडमा चुम्मा खाँदै।

यथार्थमा त्यो लाडप्यार बाघको बच्चाका निम्ति थिएन। त्यसकी आमाको खाल राजदरबारमा नजराना चढाई पठाउने मृगमरीचिकाका निम्ति थियो। धमाधम म्वाइँ खान थाल्यो।

सिनु खाल्नुपर्‍यो। त्यो काम जनबल र समयको अभावले गर्दा एउटा समस्याका रूपमा खडा भयो। अर्को जटिल अडङ्गा थियो राजपरिवारबीचको कलह।

युवराजाधिराज सुरेन्द्र मात्र अर्द्धसिल्ली होइनन्। उपेन्द्र पनि तरङ्गी, बतासे कुरा गर्दै हिँड्ने।

दुई छोराको मानसिक सन्तुलन क्षतिग्रस्त भएको पीरले श्री ५ राजेन्द्र पनि मन्द मनस्थितिले पीडित हुन पुगेका थिए। यस्तो दुर्भाग्यपूर्ण अवस्थाले गर्दा श्री ५ जेठी महारानी साम्राज्यलक्ष्मीदेवीका बाहुलीमा शासनसत्ताको सर्वाधिकार पर्न आयो।

एकातिर राजकाजको झमेला साथै सौतासित सधैँको तोयमोय, अर्कातिर लोग्ने र छोराहरूको दुर्गतिले गर्दा उनको स्वास्थ्य गिर्‍यो। दीर्घरोगी भइन्। आजभोलि नै परलोक सुधार्लिन् जस्ती। जिन्दगीको यही अनिश्चितताको कारणले उनी पोइलाई काशीवास पठाएर छोरालाई आफ्नै जीवनकालमा राजतिलक दिलाउने ताकमा छिन्। परन्तु भीमसेन थापा थुनुवामा भए पनि उनको प्रचण्ड व्यक्तित्वका सामुन्ने

राजा राजेन्द्रको गद्दी सुरक्षित थियो। कुनै शक्तिले पनि मौसुफको इच्छाविपरीत काशीवास पठाउन असम्भव। त्यसका अतिरिक्त जनमानसमा राजभक्ति घटेको थिएन। न शासनव्यवस्थामा प्रभाव कम। तर जलाजु स्वभावले गर्दा जोइटिङ्ग्रे भएका थिए राजा सुरेन्द्र। जेठी महारानीको कुरा सुन्दा उनकै लैलैमा लाग्ने। कान्छी महारानीको कुरा सुन्दा उनकै होहोरेतिर पल्टने। लोग्नेको यस्तो पीपलपाते मनस्थिति कान्छी महारानीलाई राम्रो अनुभव थियो। सौताको राजनीतिक दुरागमको पनि भेउ नपाएकी होइनन्। तसर्थ उनी भीमसेन थापाको आसन्न विपत्तिमा उनलाई मदत गरेर गुण लगाउन चाहन्छिन् आफ्नो पक्षधर तुल्याउन, कथङ्कदाचित् सधैँको थाङ्थाङे जेठी महारानीको मृत्यु भइहालेको खण्डमा सुरेन्द्रलाई पागल घोषित गरेर आफ्नो छोरा रणेन्द्रलाई राजगद्दीको प्रथम उत्तराधिकारी बनाउन।

राजालाई पत्नीहरूको दाउपेच अत्तो न पत्तो। पहिले जेठी महारानीको भनाइमा लागेर प्रधानमन्त्री भीमसेन थापालाई जेल हाले। उनको स्थानमा रणजङ्ग पाँडेलाई नियुक्त गरे। पछि कान्छी महारानीको अतिशय आग्रहबाट थापालाई बन्धकमुक्त गरिदिए ससम्मान। रणजङ्गलाई खोसे।

यसरी आफ्नो इच्छाविपरीत काम हुन गएकोमा जेठी महारानी रिसाइन्। लोग्नेलाई घुर्की देखाउन राजदरबार परित्याग गरेर पशुपति देउपाटन गई बसेकी छन्। रणजङ्ग पाँडे महारानीको चाकडीमा त्यहीँ धाउँछ।

राजा पनि रानीलाई फकाई-फुल्याई फिर्ता ल्याउने प्रयासमा दिनहुँ देउपाटन जान्छन्। धेरैजसो समय त्यहीँ बिताउने।

यस्तो दरबारिया प्रतिस्पर्धा, वैमनस्य र कलहको डामाडोल परिवेशमा व्याघ्रचर्म हनुमान्ढोका पठाउने कि देउपाटन? निर्णय गर्न सकेन उपहारकले। निकै बेर तुलबुलिइरह्यो। त्यही माथापच्चीसीको स्थितिमा उसको नजर पुनः सेर्बूमाथि पर्‍यो। यस पल्टको दृष्टिपातको कारण थियो, दरबारमा भेट चढाई पठाउने समस्याको समाधान खोज्ने। परन्तु सेर्बूजस्ती गौप्राणीलाई कुन महारानीको सवारी कहाँ छ? कसको अभ्युदय कहिले हुने हो, कसको पतन? केही थाहा छैन। केवल मोहपाशमा फसेकी छ, प्रेमरसास्वादनमा हतारिएकी।

'प्रेम अनुराग हो, दैवीय देन; तृष्णा होइन' भन्ने सहज ज्ञानको आत्मीय नजरले प्रेमीको गालामा किर्ना टाँसिएको देखी। सिकसिकाई। त्यो डल्लो कीरो

हत्तपत्त टिपेर फालिदिनका लागि प्रियतमको मुखतिर विलासित आँखा तिखारेर कामुक्त पौजा बढाई – देब्रे।

बायाँहाते आइमाई अलच्छिना मानिने रूढिवादी भएकाले केटो पछि सऱ्यो 'नाइँ' को छुनुमुनु मुन्टो हल्लाएर। तब कुलच्छिनालाई आफ्नो विसङ्गतिजन्य दुर्गुणको सम्झना आएछ। दाहिने लपेटो अघि सार्दै छुनुमुनेतिर पुनः बढी किर्ना टिपिदिन।

तिनीहरूको भाषा मिल्दैन। जात फरक। सामाजिक परिवेश बेग्लै। अलग जीवनस्तर। यस्तो पृथक् स्थितिको बाबजुद अघि मूल बाटोमा भएको कामुक स्पर्श र अहिलेको अतृप्त नयनाकृतिको भावात्मक कर्के हेराइको साटासाटले संयोगात्मक मिलनका निम्ति कालपाश जुट्दै आएको थियो। तर अपसोच! Unfortune never comes alone (दुर्भाग्य एक्लै आउँदैन) अङ्ग्रेजी उखानअनुसार ती कर्महारालाई अर्को प्रतिकूल परिस्थितिले पर्खिरहेको रहेछ।

किर्नु टिप्ने प्रक्रियामा ती दुई जनाको पाकस्थली र त्यस मुनिका अवयव एकअर्कासँग जुध्न थाले – अन्यमनस्क। तब छातीमा बोकिएको डमरु स्वभावतः 'साँढेको जुधाइ, बाच्छाको मिचाइ' मा पऱ्यो। अर्थात् दुइटा पेटबीच च्यापिएकाले डमरु बिच्कियो, उफ्रन थाल्यो। संयोगवश उफ्राहाको खुट्टाको नङ्ग्रा बोकुवाको जनैमा अल्झन पुगेछ। दुईचार डोरा चुँडियो।

शिखाधारीले अवलम्बन गर्दै आएको धर्मशास्त्रअनुसार अब उसले अर्को नयाँ शिखा धारण नगरेसम्म ऊ उच्छिष्ट मानिने भयो। कसैलाई छुन नहुने। बोल्न नहुने। थुक निल्न पनि निषेध। परापूर्वकालदेखि चल्दै आएको उपर्युक्त धार्मिक प्रथाविपरीत आचरण गरेमा 'पाप लाग्छ, नरक परिन्छ' भन्ने अन्धविश्वासरूपी कुहिरीमण्डलले हिन्दू जगत्लाई डम्म ढाकेको थियो। कहिल्यै नउघ्रने गरी। त्यस्तो दिनौँधीमा यो एउटा नेपाली, त्यही पनि अनपढको कहाँबाट ज्ञानचक्षु खुलोस्।

उसलाई परम्परावादी धर्मपरायणताले औँला ठड्यायो। खबरदार! अब तैँले सेर्बूलाई छुन हुन्न। त्यो मदमुखी हो। किर्नु टिप्ने निहुँ गरेर तँलाई स्पर्श गर्न आँटी। पछि हट् थप्यो, किर्नाले टोके टोकोस्।

कट्टर सनातनी आफ्नो धार्मिक अनुक्रमलाई निरन्तरता दिन एकाएक पछाडि सऱ्यो। अँगालोभित्रको जलौदोलाई उति नै खेरि भुइँमा फ्यात्त फाल्यो। मानौँ जनैको साथसाथै त्यो आस्तिकभित्रको मानवता पनि छिनेको थियो।

सेर्बूलाई नयाँ परिस्थिति अभिभूत भएको जानकारी छैन। एक्कासि बाघमाराको गतिमा ढिलोपन देखेर जिल्ल परी।

जिल्लारामलाई जनै चुँडिनाले तत्क्षण आइपरेको आपतित बेहोरा बुझाउनका निम्ति नैष्ठिकले बोल्न भएन। चुँडिएको यज्ञोपवीत चुपचाप देखायो। आर्यहरूमा चलिआएको प्रथाअनुसार अर्को जनै फेर्नका लागि नुवाइधुवाइ गरेर प्रायश्चित्त गोदानद्वारा चोखिनुपर्ने धार्मिक विधिको छोटो व्याख्या गऱ्यो हातको भाउले।

पिरती गाँस्नलाई बोल्नैपर्छ भन्ने बाध्यता रहेनछ। साङ्केतिक भाषाले काम चल्ने। ती बकहीनका नाक, कान, आँखा, ओठ आदि अङ्गप्रत्यङ्ग प्रियोक्तिको प्रश्नोत्तरमा सक्रिय भए– 'गाउँले नानी, तिमी मलाई साह्रै राम्री लाग्यो। हामीसँग आउने हौ?' सहरियाले ठट्यौली इसारा गऱ्यो मन चोर्न।

ग्रामीण बालाको मन अघि नै चारिइसकेको थियो। कलियोको आवश्यकता थिएन। तुरुन्त स्वीकृतिको मुन्टो हल्लाई होस्ल्याङ्दो पाराले। साथै रहरलाग्दो हाँसो पोखी खितित्त।

यो मनखुसी हाँसोको स्वच्छन्द प्रस्तुतीकरण निःसन्देह निमुखा गाउँले केटीको कोरा अन्तरात्माबाट निस्किएको सरल अभिव्यक्ति थियो। तर सहरियाको कपटपूर्ण अन्तरात्मालाई रुचिकर भएन। उच्छृङ्खल ठान्यो।

खास गरेर यो परदेशी 'नाइँ, छिः! डर लाग्छ' नखरा गर्ने, स्वाङ पार्ने आइमाई मन पराउँथ्यो। मोटीघाटी र दोहोरो आङ्की, डम्म जीउ लागेकी, पुट्ठा कस्सिएकी, दुई छाती पुक्क उठेकी, अग्ली, बैँसले मदमस्त।

यो सिकुटी, सोझेरीलाई केवल 'अड्कोपड्को तेलको धूप' का निम्ति पछि लागेको। तर अब छातछुत गर्न हुने अवस्था छैन। अतः नजराना दरबारमा चढाई पठाउने सोचमा डुब्यो। यही चिन्तन मनमा खेलाउँदै पुनः बाटो लाग्यो घोरिएर।

निमुखा ग्रामीण कन्याको मनमा पनि डोको बगाएको विषयलाई लिएर जौ-तिल पाकिरहेको थियो। त्यो मानसिक तापका अतिरिक्त घोऱ्याहा केटाको मुखमुद्रामा अचानक विचारशील परिवर्तन आएको देखेर यात्रा खल्लो अनुभव गर्न थाली।

एक बिसौनी हिँडिसकेपछि सोधी– 'तपाईंको घर कहाँ हो?' हातको इसाराले।

एकसुरेको घरबार सर्वस्वहरण भएकाले थातथलो निश्चित छैन। तैपनि 'काठमाडौँ' भन्ने पूर्व दिशाकाशतिर औँल्याइटोपल्यो।

पहाड, पर्वत, मधेसका निवासीलाई काठमाडौँ कहाँ अवस्थित छ? साधारणतया जानकारी हुँदैनथ्यो। उनीहरू राजधानीलाई 'नेपाल खाल्डो' भन्दथे। त्यही अज्ञानताको कारणले पोखरामाथिको हिमशिखर माछापुच्छ्रेलाई लक्ष्य गरेर कान्तिपुर सहर भौगोलिक रूपमा जोमसोमतिर भएको गलत साङ्केतिक सवाल गरी सेर्बूले– 'त्यता हो क़ाठमाडौँ?'

उति नै खेर नकाऱ्यो केटाले मुन्टो दायाँ-बायाँ हल्लाएर। काठमाडौँ रहेको क्षितिज पूर्वोत्तर दिशाकाशतिर पुनः अङ्गुली निर्देशन गऱ्यो।

उद्दष्ट कोणप्रति दृष्टि दिँदै सहर जान पाउने उमङ्गमा खुट्टा उचालेर हिँडेकी थिई सेर्बू। ठेस लागेछ, कराई– 'आथाम्ले!' थचक्क बसेर बूढी औँलो समाती रुनु न हाँस्नुको मुखाकृतिमा।

'म्ले' शब्द बुङताङेको मुखमा झुन्डिएको अश्लील फलाको हो। काठमाडौँलीले नबुझे पनि आहतको कष्टप्रद लाल चेहरा देखेर उसको शारीरिक मर्म थाहा पायो। संवेदना प्रकट गर्न नजिक पुग्यो।

सेर्बू रुन्चे हाँसो हाँस्दै उठी। समदु:खीको छातीतिर चोर औँलो तेर्स्याई, सानले सोधी– 'तपाईंको काम कहाँ छ?' आफ्नो निधारमा पाँच औँलासहितको खुल्ला हत्केला राखेर– 'मान के हो?'

आफू खोसुवा खालीमा परेको बेहोरा बोध गराउनका निम्ति खोसुवाले तानामाना च्यातिएको भाउ देखाउन थाल्यो। त्यसो गर्दा उसको मुखमण्डलमा मार्मिक भावुकता उदाउन-अस्ताउन लाग्यो।

त्यो दु:खदायी अनुभूति प्रेमिकाका निम्ति असह्य भएछ। तब विषयान्तर गरेर केटाको जौजहानबारे प्रश्न गर्न थाली।

आफ्नो बालविवाह आठ वर्षको उमेरमा भएको सत्य बेहोरा अवगत गरायो केटाले। एक छोरो, एक छोरी जन्मिएको लुकाएन।

'दुई जोईको घर पक्का, तीन गोरुको हल पक्का' उखान व्याप्त थियो। त्यस्तै 'जति उच्च घराना उति नै धेरै जोई, नामर्दको कोही न कोही' अर्को लोकप्रिय टुक्का थियो। धेरैजसो मर्दले दुईवटी विवाह गरेका हुन्थे। कसैले तीनचार पनि। जेठीमाथि

सौता बस्न पाउनु स्वास्नीमान्छेका निमित्त अहोभाग्य मानिन्थ्यो, किनकि कान्छी स्वभावले प्यारी हुने। त्यसका अतिरिक्त दुईमाथि तेस्री सौता हाल्ने सम्भावना कम।

सेर्बू खुसी भई।

परदेशीलाई विदेशमा चुलोचौकाका निम्ति एउटी चुलेत्रीको आवश्यकता पर्ने, स्वास्नी पनि हुने। 'एक पन्थ दुई काज' का लागि मन परे पनि, नपरे पनि यो घुच्छ्रेलाई अपनाउने निष्कर्षमा पुग्यो। तर अहिले यो दिवालिया स्थितिमा साथ लाने हबिगत थिएन। हिन्दुस्तानमा नोकरी पाएपछि झिकाउने अथवा लिन आउने आश्वासन दियो।

प्रेमिका दुःख भई। तर साथ छोड्न मानिन। डोकोबिनाको रित्तो हात घर फर्केमा दैलोभित्र छिर्न नदिने रामकहानी भाउ लगाएर सँगसँगै बिदेसिन तम्सिई। जिद्दी गर्न लागी।

'आफू त महादेव उत्तानो पर्, कसले देला वर' उक्तिझैँ रिकुटे हुन जानेका साथमा कानाकौडी छैन। केवल जङ्गली कन्दमूल र कट्याङकुटुङको भरमा हिँडेको। यस्तो टाटले अर्को यात्रीलाई बाटोखर्च जुटाउनु पल्लो फालको कुरा थियो। अवाक् मुख भयो हल्लनदासको। समस्या विचरणमा हरायो, निहुरिएर हिँड्न लाग्यो।

'मेरा निम्ति चिन्ता लिनुपर्दैन,' सेर्बूले प्रेमीको उल्झन बुझिछ, अङ्गचेष्टा सुरु गरी– 'तपाईं जसो भन्नुहुन्छ त्यसो गर्छु।' मुखनेर मुख पुऱ्याएर इसारा गरी– 'अब चित्त बुझ्यो?' मुस्कुराई।

केटो मक्ख पऱ्यो। वनपथको छेउछाउमा उम्रेका जडीबुटी देखाएर एकले अर्कालाई चिनाउन लागे। हिङ्गुवाको रूखलाई औँल्याएर केटाले त्यसको फललाई पेटको खराबी र गर्भसम्बन्धी रोग निको पार्ने रामबाण रसादिसँग तुलना गऱ्यो। औषधी निर्माण, प्रयोग, प्रक्रिया आदिका सम्बन्धमा विस्तृत व्याख्या पनि। त्यति मात्र होइन, ती वनस्पतिको विनिमय-व्यापारबाट तुरुन्त नयाँ डोको उपलब्ध हुने तरिका सिकायो, बजार पनि देखायो।

मौन प्रश्नको मौन प्रत्युत्तरमा सिकाउने र सिक्ने दत्तचित्त थिए।

सुन्दर डाँडाकाँडा, नदीनाला, झर्ना, स-साना बस्ती छिचोल्दै अघि बढे – साङ्केतिक छलफल गर्दै। समय बितेको पत्तै भएन। त्रिशूली आइपुग्यो। पश्चिम

दिशातिरका उच्च तुहिनालाई विपन्न रविले अँगालिसकेको बेला। वास बस्ने चराचुरुङ्गीको गुञ्जन।

मेलाबाट फर्केका हरुवा, चरुवा, भैँसाला, कोदाले दिनभरको नाराइमा थाकेका गोरु अघि लगाएर घर फर्कन लागेका।

मन्द हावा, सरिता शान्त। यस्तो गोधूलिको सुनसान वातावरणमा अशौची प्रायश्चित्त स्नानका निम्ति नदीभित्र पस्यो।

उसका लुगामा लागेको रगतको टाटो पखाल्न बसी सहयात्री। हातगोडा धुन, कुल्ला गर्न थाली। दृष्टि चाहिँ प्रेमीको छातीमा उम्रेको रौँको दायाँ भुमरीमा छ। भगवान् विष्णुको वक्षमा अङ्कित भृगुको पैताला-चिह्न हो त्यो पुरुषको छातीमा कदाचित् पाइने। त्यो श्रीवत्स चिह्न साह्रै राम्रो लागेछ, अनजान आँखा गाडेर लोभलाग्दो गरी एकटकले हेरिरही।

प्रायश्चित्तले नुहाइधुवाइ सकेपछि खुकुरीको खिस्साबाट बटारिएको एउटा तन्तु थुत्यो, छ-डोरे जनै। त्यो ब्रह्मशिखाको ग्रन्थिलाई राम्ररी दुई हातमा सँगालेर विधिवत् धारण गऱ्यो, गायत्री मन्त्र जप्दै कछाड फेऱ्यो। लँगौटी फुकाल्यो। पटुका बाँध्यो। टोपी लगायो। खुकुरी भिऱ्यो।

तत्क्षण भारतीय मूलको स्थानीय मारवाडी व्यापारी अर्को पानीघाटबाट सन्ध्याकालीन पूजापाठ सकेर वापस जान लागेको रहेछ घोडामा। सेर्बूलाई मात्र देखेछ। एकान्तको फाइदा उठाउने लालसाले ऊ भएको ठाउँतिर मोडियो।

ठिटीहरूसँग एक्लैदोक्लै इवास्स मुखामुख भएमा ऊ सधैँ पछि लाग्थ्यो। सेर्बू भाग्थी, लुक्थी। अहिले परदेशीको उपस्थितिमा त्यस्तो छलप्रपञ्चको आवश्यकता ठानिन। काममा आतुर रही।

महाजन करिब ५०–५५ को हुँदो हो धम्मरधुस, लेनदेनमा लगानी गर्ने। यही साहूसँग सापटी लिने विचारले आगन्तुक यस गाउँमा आएको। भेट नहोला भन्ने त्रासमा थियो। निर्धक्क भयो। जनै चुँडिएदेखि मौन। अब धार्मिक बन्धनबाट मुक्त छ। मुख खोल्यो– 'अहो, रामकृष्ण साहूजी!'

साहूजीले आवाज आएतिर पुलुक्क हेऱ्यो। स्नातलाई चिन्यो। सेर्बूलाई पट्याउने उमङ्गमा थियो। डाक्रेलाई कवाबमा हड्डी ठान्यो। 'हिस्स बूढी खिस्स दाँत', तैपनि अनजान बनेर हर्ष प्रकट गऱ्यो– 'अहा! गए राति राम्रो सपना देखेको थिएँ।

तपाईंसँग भेट हुने रहेछ, हा ... हा ... हा ....!' सोध्यो– 'हाम्रो गाउँमा कहिले पाउकष्ट गर्नुभएको?' सानो अभिवादन चढायो– 'सलाम काजी!'

'काजी' सम्बोधन सरकारबाट मान पाएको दर्जा होइन। खास गरेर तराई र काठमाडौँ-निवासीले पहाडियालाई सहृदय बोलाउने लोकाचार मात्र हो। त्यो अन्तर्जातीय रीतिरिवाज सेर्बूलाई पनि ज्ञान छ।

साहूजीलाई भेटेर ढुङ्गा खोज्दा देउता मिलेजस्तो भयो। काजी पनि चाप्लुसीमा हटेन– 'तपाईं गाउँमा हुनुहुन्न कि भन्ने डर थियो। झन् यहीँ बीचबाटोमा भेट भयो।' त्यही सासले कुरा बिछ्यायो– 'तपाईंलाई अलिकति झिँजाउन आएको।'

'ओठ चल्यो, कुरा बुझ्यो' महाजनले। आगन्तुक ऐँचोपैँचोका लागि आएको।

ऊ निकै नजिक प्रस्तुत भइसकेको थियो। आगन्तुकको पाखुरामा आँखा तिखारेर सोध्यो– 'केको चोटपटक?' भन्यो– 'खै हेरौँ।'

जखम देखाउँदै थियो घाइते। साहूले चिन्ता व्यक्त गऱ्यो– 'काजी, तपाईंलाई धेरै घाउ लागेको छ।' घोडाबाट ओर्लिएर काजीको गोडादेखि शिरसम्म सविस्तार निहाऱ्यो, गर्धनमा अन्तर्छाला देखिने गरी कोपरिएको रहेछ। पिँडौला फुटेर रानीमासुबाट रगत रसाइरहेको।

जखमीले उत्तर दिन पाएको छैन। साहूले घाइतेको निधार छाम्यो। निकै तापमान बढेको पायो। देह काँपेको। तथापि हँसमुख।

हँसुवा बाघ मारेको सामर्थ्य रोचक तरिकाले वर्णन गर्न थाल्यो।

घाउको मूल कारिणी त्यही गाउँकी घँसिनी भएको बारेमा एक शब्द उच्चारण गरेन। गोप्य राख्यो।

घँसिनीको पनि यतिखेर प्रेमोद्घाटन नगराउने इच्छा थियो, खास गरेर महाजनसमक्ष। अतः भुइँमा उड्कला मारेर लँगौटी पछार्न लागी। मानौँ आगन्तुकसँग चिनाजानी छैन, न प्रयोजन।

आफ्नो वरको बोलाउने उपनाम 'काजी' थाहा पाएकोमा महाजनप्रति कृतार्थ भई। अब उसको खास नाम, थर, वतन पनि जान्नुपर्ने हेक्का आएछ। कान थापेर वार्तालाप सुन्न लागी। कहीँ काजीको नामनामेसी प्रसङ्गमा आउँछ कि?

महाजनले काजीलाई अँगाल्यो। उसको क्षमताको मुक्तकण्ठले प्रशंसा गऱ्यो। उसलाई हिंसक जन्तुसँगको भिडन्तपश्चात् जीवित पाएकोमा ईश्वरप्रति आभार

व्यक्त गर्‍यो। घाउमा मलमपट्टी नगरेर नदीभित्र पसेकोमा उकुच पल्टने त्रास देखायो। निकै बेरसम्म सहृदय भावले 'कठैबरा!' चुकचुकाइरह्यो।

उसले मारेको अप्राकृतिक व्याघ्रचर्मलाई जङ्गलमा छोडेर आउन नहुने। डमरुसमेत ल्याउनुपर्ने मन्त्रणा दियो। वास्तवमा त्यो परामर्श गोहीको आँसु रहेछ। धनीले गरिबलाई शोषण गर्ने दाउ।

पछि त्यो करुणामय प्रतिक्रियाको रहस्योद्घाटन भयो जब उसले बघिनीको छाला, जुन अमूल्य निधिसमान थियो, लाई हत्त्याउने कुरा गर्‍यो। त्यसका लागि जङ्गलदेखि यहाँसम्म ढुवानी खर्च उपलब्ध गराउन तयार पर्‍यो। हारगुहारका लागि आफू पनि साथ जान कम्मर कस्यो।

वस्तुतथ्य उसको यो तत्परता एउटा सुदखोरको सापटी दिँदाको कबुलियत थियो जुन ऋणीका निम्ति बघिनीको दाह्रा र नङ्ग्राको चोटभन्दा दर्दनाक, किनकि बिहानदेखिन्को खाली पेट र लखतरान स्थितिमा त्यतिको लामो बाटो कसरी फर्कनु। तर 'दु:खकी रानी पिना खान्थिन्' उक्तिझैँ आर्थिक सङ्कटले गर्दा निर्दिष्ट हिदायत मान्नैपर्‍यो। अन्यथा वणिकले सापटी नदिने कुरा झिक्यो।

घोडामा काठी होइन, केवल जिनपोस कसिएको। त्यही आसनमाथि ऋणी चढ्यो। धनी पछाडिबाट सुस्तरी उक्लेर सवारसँग टाँसिन पुग्यो। सेर्बूले लुगा धुन लागेको छुप-छुप आवाज बन्द भयो। हातको पानी झटाझट झारेर गाला र भृकुटीतिर खसेको केशकुन्तल सोहोर्दै पछाडि जुरो पारी। जुरुक्क उठेर घोडचढी गएको दिशातिर चोर आँखा तिखारी।

त्यो हेराइले संवेदना प्रकट गरिरहेको थियो – दिनभरको थकाइपश्चात् अब विश्राम गर्नुपर्ने हो। चेतावनी पनि – धनीको धन जान्छ, कङ्गालको जीउ जान्छ।

अर्को पक्षबाट सान्त्वना – सुखले अघाइँदैन, दु:खले मरिँदैन। यति बेलासम्म प्रस्थित केही टाढिइसकेका थिए। तथापि त्यो स्थानमा भोलिपल्ट फर्केर भेट्न आउने प्रेमीको पुनर्मिलनको गोप्य इसारा प्रेमिकाले देखी।





# ४

ढ्याङ्ग ... ढ्याङ्ग ...! आपत्कालीन डङ्का हनुमानढोका मूल चोकमा बज्यो। पहरेदार चौकन्ना भए।

राजा दिनको चमेना गर्न थालेका। रुचि हरायो। खान छाडे। भयभीत स्वरले अराए– 'हेर त जेठी! केका निम्ति भयोत्पादक नगरा घन्केको।'

श्री ५ जेठी महारानी साम्राज्यलक्ष्मीको राजसी वेशभूषा थियो, करिब ६० हातको कपडाले बनेको फरिया-सुरुवाल। त्यो पहिरन माडको घोटले कक्रक्क पारिएकाले गल्थोको भाँजको पारस्परिक ठक्करबाट हरेक चलमलमा आवाज निस्कने– स्वाऱ्याङ ... स्वाऱ्याङ ...।

उक्त ध्वनि उनी झ्यालमा उभिन पुग्नुअघि तल चोकमा हाम फालिसकेको थियो।

द्वारपालेले उँभो हेऱ्यो– 'सरकार! बागी सेनाले प्रधानमन्त्री को घर घेरेका छन् रे। मन्त्रीहरूको त ध्वस्त पारेको खबर छ।' हात जोऱ्यो।

तत्क्षण विप्लवी सेनाको असन्तोषी खैलाबैला सुनियो।

'रणजङ्ग खै?'

रणजङ्ग प्रधानमन्त्रीबाट हुत्तिएपछि केही महिना कुनै पदमा थिएनन्। यिनै महारानीको अतिशय आग्रहले हालै मात्र प्रधानसेनापतिमा नियुक्त भएका। आफ्नो नाम महारानीबाट सम्बोधन हुनासाथै दगुर्दै देखा पर्न आयो– 'सरकार! ती विद्रोही सेना भीमसेन थापाका पिठ्यूँ हुन्। यहाँ दरबारमा पनि हूलहुज्जत मच्चाउन आउने तरखरमा छन्।' हात जोड्यो– 'तिनलाई ज्यान सजाय बक्सनुपर्छ।'

यथार्थमा महारानीलाई देउपाटनबाट दरबार फिर्ता ल्याउने बेलामा राजाले महारानीको सम्पूर्ण माग पूरा गरिदिने कबुल गरेका थिए जथाभावी कसम खाएर।

भाइभारदार, दरबारका कामदार, कोठारिन, सहरनिवासीसमेतले उनको फिर्ती सवारीमा धुमधामसित भावपूर्ण स्वागत गरेका आनन्दाश्रु बगाएर। त्यस दिनको भव्य नागरिक अभिनन्दनले महारानीको चुरीफुरी बढेको थियो। अहङ्कार शिखरमा पुगेको त्यही अहमत्याइँले लोग्नेलाई काशीवासका निम्ति दबाब दिन थालिन्।

यो कपटपूर्ण आयोजना कार्यरूपमा परिणत गर्नका निम्ति फौजमा असन्तोष र उपद्रवको भावना फैलाउन आवश्यक पऱ्यो राजालाई तर्साउन। त्यसका निम्ति तलब घटाइयो। पुरानियाँलाई अकारण खोसेर नयाँ भर्ना गरियो।

अहिले 'आफैँ बोक्सी आफैँ धामी' भएर षड्यन्त्रीले हुकुम गरिन्– 'रणजङ्ग, तैँले ती विद्रोही सेनालाई राम्ररी सम्झाई-बुझाई फर्काउनू। दरबारभित्र पस्न नदिनू। भोलि महाराजाधिराज टुँडिखेल सवारी भएर तिनको सबै माग पूरा गरिबक्सनेछ।' मुखले ठिक्क पारिन्। तर नजरको सानले बिब्ल्याँटो अर्थबोधको इसारा गरिन् – रुष्ट सेनालाई दरबारमा ल्याउने।

ओठ चल्यो, कुरा बुझ्यो बलाधिकृतले– 'जो हुकुम सरकार!' बिदा भयो।

राजाको सुस्त मनस्थितिमाथि सैनक विद्रोहको अमङ्गलकारी सूचनाले झन् बढी कमजोरी छायो। कमलपित्तको रोगीले सर्वत्र पहेँलपुर देखेको भाँती नेपालनन्दनले पनि हरेक गतिविधिमा सैनिक उत्पातको कुलक्षण आभास गर्न थाले।

डरले उनको मन अस्थिर भयो; केशपाशी ठाडो। देह काँप्यो, नाकमुख सुक्यो। निधारमा पसिना टल्कियो। छिनछिनमा तर्सने, जिब्रो टेक्रे; व्यङ्ग्यचित्रजस्तो देखिन थाले। श्रीहीन।

एक हूल सुसारे अर्को लङतिरबाट लामो बाटो पार गरेर खोपीबाहिर मटानमा आइपुगे। तिनका डोरिया-फरिया महारानीकै आकारप्रकारका थिए, तर त्यत्तिको स्तरीय होइन। वस्त्रको आवाज चाहिँ उस्तै स्वाऱ्याङ ... स्वाऱ्याङ ...।

त्यो कर्णकटु ध्वनिले महाराज अरू बढी तर्सिए। वाहिनीका क्रोधित जमात असन्तोष प्रकट गर्न माथि खोपीमा आउन थालेका ठानेछन्। स्वास्नीको पछाडि छेकिन पुगे।

तत्क्षण दासी-समूहभित्र पसे। एउटीको हातमा चाँदीको कोपरा, अर्कीकोमा सुनको सानो करुवा। तेस्रीकोमा भुवादार रुमाल र दाँतशोधनी सिन्का। चौथीकोमा रिट्ठाको धूलो बाहुली धुन। अन्य तीनवटीको खाली हात।

राजा कुल्ला गर्न थाले। मुखभित्र पानी हाल्दा थरथराएकाले बाहुली कहिले नाकतिर पुग्छ, कहिले नजरमा, कहिले गालामा। यस्तो आबा न काबाको हालतमा गुलाफ-पानीले ओठ मुसारे। रुमालले पुछे। उता सडकमा विद्रोही फौजको होहल्ला जारी छ।

राजाको निकटतामा चाकर्नीहरू हाँस्नु, मस्किनु, शिर ठाडो गर्नु, बोल्नु निषेध थियो। धेरै बेर रुमल्लिन पनि नहुने। काम भइन्जेल आँखाले भुइँ छेड्ने तरिकाले संलग्न रहे। सकिएपछि चुपचाप बाहिरिए यन्त्रमानवको पाराले।

खोपीभित्र प्रवेश गर्दा राजा अतालिएर रानीको पछाडि लुक्न पुगेको र शिखा ठाडो भएको देखेर दासीहरूको मनमा हाँसो उठेको थियो। अदब राख्नका लागि मुखविवर जबर्जस्ती बन्द गरेर गिल्ला पचाइरहेका। जसै बाहिर निस्किए, एउटी उरन्ठेउलीले हाँसो थाम्न सकिनछ, खित्का छोड्न थाली भुइँमा थच्चिएर– 'हा ... हा ... हा ...।'

खित्का महारानीका कानमा पऱ्यो। प्रहसनतिर फर्केर हेरिन्।

प्रहसित हाँसोको लाल मुद्रामा पेट समातेर निचोरिन लागेको देखिन्– 'हा ... हा ... हा ...।'

उनको पारा चढेछ। एक्कासि सिंहिनीको आक्रमण गर्ने तरिकाले हँसी उडाउने दासीउपर जाइलागिन् मुड्की उज्याउँदै। दासीको जीउमा छुन घिनाएर हात हालिनन्। जुत्ता फुकाल्न थालिन् पिट्न– 'कहाँसम्मकी साइँदुइनी यो चनमती!'

चनमतीले कर जोडी– 'बिराएँ सरकार!' उठेर भागी।

महारानीको रिस मरेछ। अभयदानको स्थितिमा पाउपोस लगाउन थालिन्। राजा क्षमा गर्ने पक्षमा भएनन्। बाहुलीमा लौरो र मुखमा प्राणदण्ड दिने सङ्कल्प बोकेर कसुरदार्नीको पछि लागे लखेट्दै।

भगुवीले ज्यान जोगाउन चाहिँदो ठाउँ देखिनछे। हतारमा शौचालयभित्र पसी लुक्न। राजा पनि क्रोधले तमतमाउँदै त्यहीँ गए काट्ने-मार्ने धम्की फट्कार्दै। ढोका थुनेर चुकुल लगाए।

'ड्याम ... ड्याम ...' पिट्न थालेको आवाज बाहिर सुनियो। बापती कहालिँदै रुन थाली– 'बिराएँ सरकार! अब हाँस्नेछैन।'

मारमुङ्ग्री सामन्तकालीन दरबारभित्रको दैनिक दिनचर्याजस्तो थियो। त्यस कारण लोग्नेको दनकबाजीमा स्वास्नीले विशेष ध्यान दिइनन्। दुर्बिन च्यापेर कौसीमा उक्लिन् विद्रोही सेनाको उद्दण्ड क्रियाकलाप हेर्न।

दूरवीक्षणको दृष्टिपात पुष्कर शाह र मन्त्रीहरूको घरतर्फ केन्द्रित नभएर ठमेल चोकतिर पुगेछ।

त्यस बस्तीमा हैजाको प्रकोपले मानिस भुतुभुतु मर्न लागेका. रुवाबासी भइरहेको छटपटी देखिन्। त्यो करुणाजनक दृश्य हेर्न मन नगरेर अर्को दिशातिर फर्किन् सैनिक विप्लवको क्षमता मनन गर्न।

उनका आँखासामुन्ने नरदेवी क्षेत्र पर्न आयो छर्लङ्ग। त्यस प्रतोलीको दशा झन् टिठलाग्दो थियो।

शीतलाको महामारीले केटाकेटी सोत्र्याम्म। पशुपतिको आर्यघाट, टेकू, बिजेश्वरी, शङ्खमूल र अन्य चिताभूमिबाट दाहसंस्कारको धूवाँको मुस्लो उडिरहेको आकाश छुने पाराले।

यिनै महारानीका ससुरा स्वर्गीय श्री ५ गीर्वाणयुद्धको पनि बिफरबाट असामयिक निधन भएको थियो १८१६ मा। मौसुफ गीर्वाणयुद्धकी मुमा कान्तादेवी पनि तिनै अधिष्ठात्री माईकै शरणमा दिवङ्गत भएकी।

शाही परिवारका दिग्गज रत्नहरू यस्तो सङ्क्रामक रोगको चपेटामा पर्दासमेत औषधोपचारको राम्रो प्रबन्ध हुन सकेन। सर्वसाधारण जनताका लागि वास्ता गर्ने को?

केवल धामी-झाँक्रीको बाहुल्य। अछेता मन्छाउने, पन्छाउने, फुकफाकको चलन। दरबार आपसी स्पर्धा, वैमनस्य र कलहमा फसेको। भारदाहरूको दाउ सिर्फ राजाको नजरमा धूलो छर्ने। कुर्ची हत्याउने। राष्ट्रकोषको सम्पत्ति कुम्ल्याउने। एक भारदारको खलकले अर्को खलकलाई खाडलमा खनेर पुर्न खोज्ने। जनतालाई पाल्तू कुकुरसमान पछि लगाएर जी-हजुरी गर्नमा बाध्य तुल्याउने। स्वास्थ्य चौकी छैन। न पाठशाला, कलधारा, बिजुली। सार्वजनिक पाइखानाको अभाव।

जतातते मलमूत्र त्याग गर्नेको ताँती। कोही घरपछाडि, कुनै बारीको डिलमाथि, गल्छेडामा पनि।

महारानीको दृष्टि आतङ्ककारी सेनाले भत्काएका मन्त्रीहरूका क्षतिग्रस्त घरमा पुग्यो।

झ्यालको ऐना फुटेको, ढोका भत्किएको, खापा भाँचिएको, आँगनको पर्खाल लडेको। अनि देखिन् बागी फौजलाई अघि लगाएर रणजङ्ग दरबारभित्र आउन लागेको। खुसी भइन्।

साथै अर्को दृश्य बेखुसीको थियो – प्रधानमन्त्री पुष्कर शाह र अन्य मन्त्रीहरूको घरबाट सुसारेहरू भागेको।

राजदरबारमा जस्तै भारदारको घर-घरमा पनि नाचगान-बजानको तालिमे जमाइन्थ्यो भजनकीर्तनको निहुँमा। खास व्यवहारमा घरमूलीको यौनेच्छा पूर्ति गर्न।

ती कर्मखोटीलाई आफ्नो मन परेको केटो रोज्ने सौभाग्य थिएन। न स्वच्छन्दले घरबाहिर यताउति घुम्न पाइने।

अहिले मन्त्रीको घरको पर्खाल भत्किएको छ, कम्पाउन्ड ह्वाङ्ग। भागे पिँजडाको सुगा फुत्केको पाराले। कोही आफ्नो घर जान वनकाली जङ्गलतिर लागे। धेरैजसो सहरको घना बस्तीमा मिसिन पुगे लुक्न।

ती फुकान्तलाई देखेर महारानीको मनमा आफ्नी तालिमे चनमतीको याद आएछ – चर्पीभित्र पिटाइ खान लागेकी। दुर्बिनको दृश्य-साधन बन्द गरेर तल खोपीमा फर्किन्।

अझसम्म पनि चर्पीभित्र उही मारमुङ्ग्री चलिरहेको छ। ड्याम्म...ड्याम्म...। साथै राजाको गर्जन। चनमतीको दुःखपूर्ण चिच्च्याहट– 'बिन्ती ! बिराएँ ...।'

चनमती हर्फनमौली थिई। सङ्गीतज्ञ, वाद्यशास्त्री, अभिनेता, अभिनेत्रीको भूमिका खेल्ने। हास्यव्यङ्ग्यमा पटु। यस्ती टपर्टुइयाँको अङ्गभङ्ग भयो अथवा मरेकी खण्डमा दरबारको नृत्यमण्डलीमा अपूरणीय क्षति हुने सम्भावना। साथै नारीहत्याको पाप लाग्ने। ज्यान मारेको बदनामी पनि।

यस दुरन्त झमेलाको मुख्य सम्बन्धित व्यक्ति आफैँलाई ठान्छिन् महारानी, किनकि उनी चनमतीलाई हाँसेबापत पिट्न जाई नलागेकी भए यो फौजदारी

काण्डको सृजना नहुने। त्यसै कारण चर्पीभित्रको प्रत्येक सोठ्याइ र राजाको गर्जनतर्जनमा उनको मन पश्चात्तापले खिन्न हुन्छ। सुन्न नसकेर कान थुन्छिन्।

अन्ततः असह्य भएछ। पिटुवी केटीप्रति समदुःखी भाव प्रकट गर्न चाहिछिन्। सम्भवतः पिटाइ रोक्न पनि। सुस्तरी मेचउपर उक्लेर ढोकाको माथिल्लो कोपाको धाँजोबाट चर्पीभित्र चियाइन्।

उनले कल्पना गरेकी थिइन्, चर्पीभित्र राजाले चनमतीलाई भकुरिरहेका होलान्। चनमती अधमरो हालतमा होली। धुकधुकी मात्र बाँकी, परन्तु अन्तखण्डमा विपरीत स्थिति देखिन्।

चनमतीको अधरमा गुठिल कुरा भुन्डिएको स्मित मुस्कान छ। मुखबाट दुरुस्त राजाको स्वरजस्तो नक्कली आवाज निकालेर आफूप्रति लक्षित गाली बकिरहेकी लाजभाँड शब्द प्रयोग गर्दै। हातमा राजाको लौरो। त्यही लट्ठीले ड्याम-ड्याम भित्तामा ठटाइरहेकी। पिटाइको मार आफूमाथि परेको अभिनय गरेर उफ्रन्छे, कराउँछे– 'बिन्ती! मरेँ बाबा, बिराएँ! माफ पाऊँ! अबदेखि म हाँस्नेछैन।' मुस्कुराउँदै सबै दन्त देखाएर।

प...र झ्यालमा राजाको दशा भिन्दै छ। शिखा ठाडो। त्रासले जिब्रो टोकिएको। मुख रुन्चे। निधारमा पसिना। भीमसेन थापाको घरतिर हतप्रभ नजरले हेरिरहेका। चनमतीको अर्थपूर्ण अङ्गसञ्चालनपट्टि उनको ध्यानै छैन। न आलाप-विलापतिर।

यो अनुतापको कारण रानीको मनमा आफूले रचेको फौजी चक्रव्यूहमा लोग्ने फँसे, अब डराएर चाँडै राजत्याग गरेर हिन्दुस्तान भाग्छन् भन्ने पऱ्यो। खुसी भइन्।

खुसीयालीमा फुर्कंदा उनको फूली र टपबाट निस्केको स्फुलिङ्ग-प्रतिविम्ब चर्पीको मड्किलो भित्तामा प्रतिविम्बित हुन पुग्यो।

चनमतीले देखी।

मालिक-नोकर्नीका आँखा जुधे। दुवै साङ्केतिक भाषामा कुरा गर्न लागे।

'चनमती, तँ के गर्दै छेस्?'

'राजाले यसै गर्नू भन्ने हुकुम भएको छ।' भित्तो ठटाउन लागी।

'किन रैछ?'

'मौसुफ सरकारमा भीमसेन थापालाई बिगारिबक्सेकोमा न्याउरी मारी पछुतो परेको जस्तो बुझ्छु।'

'हो र?'

'हो त नि! त्यसैले हजुरलाई झुक्याउनका निम्ति मलाई पिटेको जस्तो गर्न भित्तामा लौरो ठटाउन लगाइबक्सेको। उहाँको आफ्नो नजर चाहिँ बागमा छ।'

'बागमा के नजर भाको?'

'यहाँ दरबारभित्र बागी सेना प्रवेश गरेमा भीमसेन थापालाई बोलाएर ती विप्लवी सेनालाई नियन्त्रणमा रखाउन।'

कथङ्कदाचित् चनमतीको सङ्केत सत्य साबित हुन आएको खण्डमा नेपालको राजनीति उल्टन सम्भव। अर्थात् भीमसेन थापा पुनः प्रधानमन्त्रीमा नियुक्त हुने। थापाहरूको स्वयमेव खाँडो जाग्ने। पाँडेहरूको चपरीमुनि वास। साथै जेठी महारानीको पुर्पुरोमा हात। सुरेन्द्र र उपेन्द्रको चिल्लीबिल्ली! कान्छी महारानीका आमा-छोराको भाग्योदय।

यस प्रकारको 'आफू ताक्छु मुढो, बन्चरो ताक्छ घुँडो' को दुर्भाग्यपूर्ण भविष्यलाई गर्भमा तुहाउनका निम्ति राजा र भीमसेन थापाका चार आँखा हुन नदिन आवश्यक पर्‍यो। अतः राजाको ध्यान बागतिरबाट अन्यत्र पन्छाउनका निम्ति महारानीले स्वर पारिन्– 'हैन सरकार! चनमतीलाई भित्तामा लौराले हान्न लगाइबक्सेर झ्यालबाट के नजर भाको?' कुर्चीबाट ओर्लिन्।

साँच्चिकै रुष्ट सेना आतङ्क मच्चाउन दरबारभित्र आएको खण्डमा राजालाई काशीवासको निहुँले भाग्नुपर्ने परिस्थिति आउने थियो या थापाको शरणमा जानु। त्यसै कारण नजर झिमिक्क नगरेर बागतिर हेरिरहेका थापालाई देखेमा उनीसित साँठगाँठ मिल्‌ उन। आफ्नो त्यो आभ्यन्तरिक ईप्सा महारानीले थाहा पाएको शङ्का पर्‍यो राजाको मनमा, भयभीत भए। त्यो चिन्तित मानसिक स्थिति लुकाउन झ्यालबाट फर्किए, पत्नीले सुन्ने गरी भ्रामिक वाक्यसमूहको स्वर पारे– 'भीमसेन थापाको ढाड नभाँची भएको छैन। मेरो छोरो मराउनेलाई म जिउँदो छोड्न सक्दिनँ। त्यसैले भीमसेनेलाई चुटाउनका निम्ति चनमतीलाई ताडनाको पूर्वाभ्यास गराउन लागेको।' नारी निमोठ्दै– 'ठोक् चनमती! भीमेलाई भुतुक्क पार्नुपर्छ।' बेस्सरी चिच्च्याएर स्वाङ पारे पत्नीलाई झुक्याउन। पत्नी किन पत्याउँथिन्?

छोरा सुरेन्द्र राजा हुन्छु भनेर आमासित दिनहुँ जिद्दी गर्ने, झगडा गर्ने, रक्तपात मच्चाउन पनि बेर नलगाउने। यस्तो अघोरपन्थी छोराको माग पूरा गरिदिन पाएको खण्डमा राजकाजको झमेलाले उसको दुर्जन मतिमा सुधार आउँछ कि भन्ने सोचेर आमाले फौजी विद्रोहको नाटक रचेकी हुन्। तर भीमसेन थापा जीवित रहेसम्म राजा राजेन्द्रविरुद्धको षड्यन्त्र सफल हुन असम्भव भन्नेमा अझ बढ्ता विश्वस्त भइन्। अतः विद्रोही सेनालाई फर्काउन रणजङ्गकहाँ आदेश पठाइन्।

यो असफलताले उनको नुर गिऱ्यो, साह्रै हतोत्साहित भइन्, मूर्च्छा परिन्। राजाको तत्कालीन मारकेश टऱ्यो।





'सरकारको दर्शन गर्न प्रधानसेनापति पाल्नुभा छ।'

'माथि डाक्।'

श्री ५ बडामहारानी साम्राज्यको प्रात:कालीन शृङ्गारको समय। ऐनासामुन्नेको मेचमा विराजमान। चोलो र पेटीकोट लाएकी। केश तलासमा सुसारेहरू व्यस्त।

'महारानी सरकारको जय होस्! प्रताप बढोस्!' प्रधानसेनापति रणजङ्ग भऱ्याङ उक्लन लागेको पदचाप सुनियो।

महारानी खास्टो ओढेर गामगुम परिन्।

रणजङ्गको प्रवेश। पाँच पटक निहुरिएर अभिवादन चढायो।

नमस्कारको प्रत्युत्तरमा सधैँ बस्ने आदेश दिन्थिन्, अहिले वास्ता गरिनन्। हुक्का पिइरहिन्– ट्वार्र ... ट्वार्र ...।

ठूलाबडाले वार्ता प्रारम्भ नगरेसम्म आगन्तुक़ले मुख बाउनु, हलचल गर्नु, नितम्ब टेकाउनु दरबारिया अनुशासनको विपरीत आचरण हुने।

सेनाध्यक्ष चुप छ। कर जोडी उभिएको।

केशकर्मी परिचारिकाहरूलाई बाहिर जाने आज्ञा गरेर महारानी आफ्रै हातले कपाल कोर्न थालिन्।

एउटा बाहुलीमा केशको मुठो, दोस्राले त्यस आँठोमाथि काँगियो चलाउन लागिन्। एकछिनपछि मौसुफको मुहारमा बिस्मातको रुन्चे रेखा प्रतिविम्बित भयो। नजरमा आँसु टिलपिलायो।

नेत्रजल शारीरिक पीडाको निष्पत्ति हो कि या मानसिक दु:खको? केही थाहा पाएको छैन रणजङ्गले। एकाएक सहानुभूतिमा छाती पिट्दै विरहसागरमा

डुबेको अभिनय गऱ्यो। नआएको आँसु पुछ्यो। पलक फुलायो। नेत्रकोस रातो पाऱ्यो। मुख मलिन।

'हेर् न रणजङ्ग!' महारानी मनको बह पोख्न थालिन्– 'महाराजाधिराजको त्यो भीमसेनमाथि अझै निगाह छ।'

'अहो!' बीचमा तर्सियो रणजङ्ग– 'त्यस्तो बालहत्यारा पापीमाथि अनुकम्पा!' बुद्रुक्क उफ्रेर दाह्रा किट्यो– 'यो त अनर्थ भयो। सुन्न पनि महापाप!' कान थुन्यो– 'राम-राम...!'

वास्तवमा यी दुवै वार्ताकारलाई भीमसेन निर्दोष भएको जानकारी छ। तर उसलाई ज्यानमारा मुद्दामा फसाउनका निम्ति मरेका कान्छा शाहज्यादाबारेको विगत प्रसङ्ग खोतल्दै रुन थालिन् महारानी। पाँडे किन पछि पर्दथ्यो। युवराजको मरणको दोष थापामाथि थोपर्दै पटुकाले मुख छोपेर घुँक्क-घुँक्क निचोरिन लाग्यो। यथार्थतः ऊ अहिले दरबार आएको कारण थियो महारानीबाट सैनिक विद्रोह रोक्न पठाइएको प्रति-आदेशबारे जानकारी लिन। हात जोड्यो– 'अस्ति ... किन सरकार ...!'

आँ गऱ्यो, अलङ्कार बुझिन् सरकारले। बीचमा कुरा काटेर चनमतीले स्नानघरभित्र लौरो ठटाउन लागेको र राजाले बागतिर नजर तिखारेको घटना आद्योपान्त सुनाइन्। साथै त्यस दिन बागी सेना दरबारभित्र प्रवेश गरेको खण्डमा राजाले हताशामा भीमसेन थापालाई बोलाएर प्रधानमन्त्री पद बक्सने सम्भव भएको जानकारी दिइन् धूम्रपानको लामो-छोटो सर्कोबीच। त्यस नियुक्तिको भयङ्कर नराम्रो परिणाम निस्कन सक्ने गाँठी कुराको भविष्यवाणी पनि गरिन्।

तत्पश्चात् हालै मात्र प्रधानमन्त्री भएको रङ्गनाथ पौड्यालबारे चर्चा चल्यो।

यथार्थतः थापाहरूको एक्कासि पतनले भारदारहरूको मनमा चिसो पसेको थियो। कुनै बेला आफ्नो पनि थापाहरूकै नौबत हुने। अतः रङ्गनाथको थापाहरूप्रति विशेष कृपादृष्टि पर्न थाल्यो। ऐनमौकामा भीमसेन थापाको ओठ बोलेर ढाकछोप गर्ने। त्यो अनुग्रह रणजङ्गलाई औंधी खड्किएको थियो। कृपाकाङ्क्षी रङ्गनाथका विरुद्ध पनि चुक्ली गर्न लाग्यो बढाइचढाई।

आँसुले लतपतिएको गाजल पुछ्दै महारानी बोलिन्– 'गुरुज्यूले राजीनामा पठाउनुभएको छ। यस्तो दुई दिनको प्रधानमन्त्रीबारे के कुरा गर्नु?'

यो सुयोग किन गुमाउँथ्यो पाँडे। आफूलाई सर पर्नेतिर प्रसङ्ग घुमायो– 'ताबेदारलाई प्रधानमन्त्री बक्सेमा यो काम सफल गर्न सक्छु।' कुम ठोक्यो।

कहिले ऐनामा, कहिले रणजङ्गको मुखमा हेर्दै चुल्ठो गाँठो पारिसकिन् महारानीले। अब दुवै वेणी पछाडि ढाडमा हुत्त्याएर पूरा दृष्टि रणजङ्गतिर गाडिन्– 'तँलाई मैले प्रधानमन्त्री दिन नखोजेको हो र?' लाचारी प्रकट गरिन्– 'महाराजाधिराजलाई सौताले टुनामोहनी गरेर एकोहोऱ्याएकी छे। उसैको मात्रै कुरा सुनिबक्सिन्छ, मसित दर्शनभेट नै छैन। धेरै भइसक्यो।' कान्छी महारानी बोक्सी भएको प्रमाण एकपछि अर्को पेस गर्न थालिन् पिरोलिएको मुखाकृतिले भुतभुताउँदै।

अधिकतर भारदार वशीकरण विद्यामा दृढ आस्था राख्थे। त्यही अन्धविश्वासमा छ यो पाँडे पनि। कान्छी महारानीको तन्त्रमन्त्र विफल पार्नेतिर मगज लडाउन थाल्यो। जादूटुना, मरणका निम्ति पूजापाठ, अनुष्ठानको सिफारिस गर्न लाग्यो। महारानीको कार्यसिद्धिका निम्ति देवीदेवतालाई भाक्यो कतै कालो बोको, कतै पञ्चबलि चढाउने।

महारानी रात्रि पहिरनमा भएकीले धेरै समय अल्प वस्त्रमा बस्न कुरीकुरी लागेछ, संवाद नलम्ब्याउन छोटकरीमा भनिन्– 'तेरो कुरा बुझेँ। अब तँ जा।'

पाँडे जयघोष गर्दै उठ्यो। भित्तामा टाँगिएका देउदेउताका पटतिर जम्ला हात र नयन बन्द गरेर राजारानीको मिल्तीका निम्ति पुनः कामना गऱ्यो। अनि बाहिरियो।

महारानी लुगा फेर्न उठिन्।

बट्टाई, कुखुरा, भेडा लडाउने; परेवा, चङ्गा उडाउने; पासा र गन्जिफा खेल काठमाडौँलीका दिल बहलाउने प्रमुख होडबाजी थिए। त्यसको प्रभाव राजदरबारमा पनि पऱ्यो। जेठी महारानीका माहिला पुत्र उपेन्द्र मुठीभित्र बट्टाई च्यापेर प्रवेश गरे। तोते बोलीमा 'बडीमुमा, मेलो बत्ताईले घोलाको जस्तो लात हान्न सक्छ।' पान चपाइरहेका थिए। मुखको पिक मुठीभित्र च्यापिएको बट्टाईको आङमा पिच्च थुके।

यो पानमुठको प्रथा बडीमुमाको माइतीघर (भारत, यू. पी.) बाट काठमाडौँ आएको हो। त्यसैले उनी पनि किशोर अवस्थादेखि लोग्नेको लैलैमा लागेर बट्टाई लडाउने सोखमा नबरालिएकी होइनन्। तर यतिखेर आमाको हैसियतले छोरालाई

हतोत्साहित गरिन्– 'धत्तेरी माहिला, के यस्तो फोहोरी काम गरेको?' हँसिला आँखा तरिन्।

माहिला साहेबज्यूको आकृति ग्याँचे थियो। कपाल जरिएको, हातमुख धूलेफागु खेलेर आएजस्तो। पोसाक खम्च्याङखुम्चुङ।

लबेदाको माथिल्लो तुना चुँडिएको। इँजारको लुँदो झुन्डिएको। एक गोडामा मोजा। त्यसको जोडा लिएर धाई दगुर्दै आइपुगी हाँपझाँप गर्दै।

आफ्नो उत्तराधिकारीको विकृत रङ्गढङ्ग देखेर महारानीको मातृस्नेह पग्लन थाल्यो। लुगा फेर्न उठिसकेकी पनि पुनः बसेर छोरालाई काखमा लिइन्– 'कठै माहिला! तिमी लडेको हो?'

माहिलाको ढाडमा लागेको धूलो झारिदिइन्। नाक-मुख पुछ्ने काम भयो। टीकाटाला।

कान्छी महारानीका ज्येष्ठ पुत्र रणेन्द्र शाह आइपुगे विमातृ दाजु उपेन्द्रको खोजमा। उनी दाजुहरूजस्ता हावा खुस्केका थिएनन्। थिए सुबुद्धियुक्त, स्वस्थ, सग्ला।

उनको तगेको लबेदा-सुरुवालमा सुनौला कार्चोपी भरिएको थियो। किनखाबको कोट। बेलायती जुत्ता, मोजा र शिरपोस।

कानमा हीराको टप। गलामा मोतीको माला। रत्नजडित औँठी। सफासुग्घर-सुकिलो कोरीबाटी।

उनी जहाँ जान्थे अत्तरको सुवास त्यहीँ पुग्थ्यो। आभूषणको चमक पनि। सौताको छोरालाई 'हुने बिरुवाको चिल्लो पात' देखेर डाह लाग्छ महारानीलाई। त्यही ईर्ष्याको प्रतिफल रणेन्द्रले दण्डवत् गरेकोतिर ध्यान दिइनन्। आफ्नो छोरालाई लुगा फेराउने काममा लागिरहिन्। अन्तमा मनाउने स्वरमा वात्सल्य आदेश गरिन्– 'माहिला, पर्खालमा चढेर चङ्गा नउडाउनू। भण्डारखालको बगैँचाभित्र खेल्नू।'

लोग्नेमान्छेले भन्दा आइमाईले पानमुठ गरेको बट्टाई बढी चङ्ख हुने जनधारणा थियो। त्यसो गरेमा छोराको हातमा पान पिकको फोहोर पनि नलाग्ने, बट्टाई बलियो हुने। 'एक पन्थ दो काज' का निम्ति आमाले पुनः सल्लाह दिइन्– 'माहिला! सुसारेलाई मुठ गर्न देऊ, तिम्रो बट्टाई बढी दह्रो हुन्छ। बुरुज छोडेमा हार्दैन।'

'हस् बडीमुमा!' उपेन्द्र खल्र्याङखुट्टीमा उफ्रँदै निस्किए। भाइ पछि लागे।

द्वारपाल-दासी हतारिँदै भित्र प्रवेश गरी 'महाराजाधिराजको सवारी हुन लागिरहेको छ' हात जोडी।

त्यहाँको क्रियाकलापमा एक्कासि जागरूकता छायो। हुक्किनीले हुक्का बाहिर लगी।

धाईले उपेन्द्रले फेरेको मैलो लुगा गुटमुट्याएर बाकसभित्र कोची। महारानीले पनि झटपट चोलाको तल्लो फेर पेटीकोटभित्र घुसारेर इँजार बाँधिन्। नेत्रकोसमा पुनः सुर्मा मिलाउन ऐना हेरिन्। दर्पणमा रणजङ्गको प्रतिच्छाया स्मरण भयो। कारण अघि भर्खर उसले राजारानीको भेटघाट, मेलमिलाप, उठबस र मायापिरतीका निमित्त देवदेवीसँग भाकल अर्चना गरेको थियो। त्यही कामनाको प्रतिफल राजाको पदार्पण हुन लागेको ठानिन्। रणजङ्गप्रति आभार व्यक्त गर्न मुसुक्क हाँसिन्। सन्तोषको मुस्कान। तब आफ्नो केशविन्यासमा लागिन्।

उनको वर्ण गोरो थियो। ठूला-ठूला आँखा। शिरपछाडि दुईवटा आँठा। अगाडि निधारमा अलख। २४-२५ वर्षकी। मोटी न दुब्ली, ठिक्कको शारीरिक संरचना।

हीराको फूली बिहानको झुल्केघाममा टल्किरहेको। कानको टपमा त्यस्तै स्फुलिङ्ग। नाडीमा नवरत्न र काँचका चुरा टम्म।

राजाको पदचाप सुनियो। उनको दर्शनार्थ रानीले पोसाक फेर्ने समय पाइनन्। उही रात्रि फेरुवामा विनीत उभिइन्।

राजाको आगमन।

तगेको भोटो-सुरुवाल थियो उनको। पस्मिनाको ओढ्ने। भू. पू. प्रधानमन्त्री पुष्कर शाह र मन्त्रीहरूको घर तोडफोड गर्ने बबन्डरी सेना दरबारभित्र पनि बबन्डर मच्चाउन आउन लागेको उत्पात टरेको दिनदेखि उनमा आत्मविश्वास बढेको छ। शरीरमा वसन्तबहार।

परन्तु उपर्युक्त दिनमा सैनिक उपद्रव हुने उत्तेजित बमफसेलबाट महारानीको सातो गएकाले त्यस दिन मूर्च्छा परेकी भन्ने उल्टो भ्रममा छन्। ओठभरि सहानुभूति थुपारेर स्वास्नीछेउ प्रस्तुत भए। उठी-उठी गोडा ढोगाउने चलन थिएन, खाटमाथिको डसनामा पुट्ठा अड्याएर पाउ उचाले।

त्यही मास्तिर उठाइएको पादमा शिर छुवाएर पत्नीले चरणामृत खाइन्।

उनी मूर्च्छा परेको दिनदेखि पुनः तङ्ग्रिन् कि बिरामी छिन्, सोधपुछ गर्न आएका हुन् राजा। 'तिमीलाई कस्तो छ जेठी?' चिन्ताकुल भावले जिज्ञासु भए।

'जे दुखेको थियो अस्ति नै दुख्यो। अब त सन्चो भइसक्यो,' आफ्नो आरोग्यको बेहोरा जाहेर गरिन् रानीले।

मायालु नजरले हेरेर पुनः सोधे राजाले– 'अस्ति अचैतन्य अवस्थामा तिमीलाई कहाँ दुखेको थियो?'

षड्यन्त्र विफल हुन गएको, निराशाले महारानीलाई हल्का हृदयाघात भएको हो।

भीमसेन थापाकाण्डमा राजवैद्यहरू मुछिएको दिनदेखि जान्ने चिकित्सक दरबार जान 'चेत बाबा काशी' थिए। झारफुके र अनाडी वैद्य गिरीले महारानीको मुटुको रोग खुट्याउन सकेनन्। गानो गएको गलत निरूपण गरे।

धेरैजसो मानिसलाई मुटु छातीको बायाँपट्टि हुन्छ भन्ने जैविक ज्ञान थिएन। महारानीले पनि आफूलाई पीडा भएको बेलामा खास कुन-कुन अङ्ग प्रभावित थिए थाहा पाइनन्।

शरीररचनाविज्ञानको जानकारीको अभावमा त्यस दिन उनलाई दुखेको स्थानका सम्बन्धमा गलतफहमी थियो। त्यही भ्रमात्मक सोचाइले गर्दा छातीमा देखाउनुको सट्टा नाइटोमुनि औँल्याइन्– 'झन्डैले मरेकी थिएँ।' लोग्नेको चौडा छातीमा टाउको अड्याएर घोप्टिइन्, विरक्त।

पत्नीको मर्मस्पर्शी वाक्यबाट द्रवित भए पति। रानीले देखाएको काछआसपासको हिस्सामा सहानुभाव प्रकट गर्दै सुमसुम्याउन थाले। सुमसुम्याइ अघि बढ्यो। सीमा नाघ्न थाल्यो। लोग्नेलाई केको हदबन्दी? किन आचारसंहिता? त्यसमा पनि उमेरको दृष्टिले गधापच्चीसी पार नगरेका जोईपोइ।

कामोत्तेजक मांसपिण्डमा स्पर्श हुन पुगेपछि रोमाञ्चित प्रतिक्रिया हुनु स्वाभाविक हो। पात्तिन थाले स्पर्शी।

महारानी थङथिली। भर्खर मुटुको रोगबाट तङ्ग्रिएकी। पुत्रशोकले विह्वल। सौताको अनिष्ट गराउनका निम्ति मारण र उच्चाटन, लोग्नेलाई वशमा राख्नका लागि मोहन, वशीकरण तथा स्तम्भन यी पाँचवटा जादूटुनाको विफलताले जीवनसित

हार मानेकी। यतिखेर उनमा न पुलकावली छ न अनुराग। तथापि राजनीतिक स्वार्थवश जीउ छोडिन्। मुख खोलिन्– 'सरकार! रङ्गनाथको राजीनामा स्वीकार गरिबक्सनुपर्‍यो।'

'हुन्छ।'

भीमसेन थापाको पतनपछिको विपत्तिपूर्ण नेपालबाट भारत भाग्न सफल भएका थिए माथवरसिंह थापा – ज्यान जोगाउन। त्यो भगुवा र सौताको संयुक्त प्रयासबाट भविष्यमा युवराजाधिराज सुरेन्द्रलाई अनासीन पार्ने त्रासले महारानीको मनमा सधैँ ढ्याङ्ग्रो ठोकिरहन्थ्यो। 'वनको बाघले खाओस्-नखाओस्, मनको बाघले खाने' सम्भावित खतरा आफ्नै जीवनकालमा निर्मूल पार्न भीमसेन थापा र माथवरसिंहलाई एउटै चिहानमा गाड्न चाहन्थिन्। त्यसै कारण महारानीले सोधिन्– 'सरकार! माथवरसिंहलाई सरकारको नाममा बडापत्र पठाएर यहाँ झिकाऊँ है!'

'हुन्छ।'

महाराज राजेन्द्र नेपाल-अङ्ग्रेज सुगौली सन्धिसित सन्तुष्ट थिएनन्। त्यो सम्झौता खारेज गराउन सक्ने खुबी रणजङ्ग पाँडेमा बाहेक अरू भारदारमा नभएको पैरवी गरिन् महारानीले।

'हो,' समर्थनमा बोले राजा।

महारानीको खुराफात अघि बढ्यो। सौतालाई बोक्सी बात लगाइन्, एक नम्बरकी भेदी। उनको टुनामुनाले सुरेन्द्र र उपेन्द्रमा विकार आएको दोषारोपण गरिन्।

'हो,' महाराजाले सही थापे।

अर्को हाँसोलाग्दो प्रसङ्ग थियो। ब्रिटिस राजदूत हागसनलाई प्रारम्भमा नेपाली पर्दाप्रथाको जानकारी थिएन। अज्ञानतावश उनी कान्छी महारानीसितको दर्शनभेटमा बेलायतकी साम्राज्ञीलाई गरिने शाही अभिवादनअनुरूप घुँडा बङ्ग्याएर निहुरिए, हात मिलाउन अघि बढे। महारानी लजाइन्, सङ्कोच मानेर पछि हटिन्। तैपनि राजदूतले महारानीको बाहुलीनेरको खाली सतहमा भक्तिपूर्वक चुम्बन चढाए मुस्काएर।

प्रत्यक्षदर्शीले तिलको पहाड बनाएँ। कान्छी महारानीको बाहुली अङ्ग्रेजले प्रेमपूर्वक तानेको, चुमेको, हाँसेर छिल्लिएको घुइरो-घुइरो हल्ला चल्यो। त्यही

अपवादलाई हतियार बनाएर जेठी महारानीले सौता र राजदूतबीच कुत्सित सम्बन्ध भएको चुक्ली गर्न लागिन् बढाई-चढाई।

त्यो सौतेनी पोललाई लोग्नेले तुरुन्त नकार्नुपर्ने तर उन्मादको चित्तविभ्रममा हुने सञ्चारी भावले त्यसो गर्न दिएन। काखकी पत्नीसित चोचोमोचो मिलाएर होमा हो गरे। पाखाकी पत्नीलाई खुतुकी ठहऱ्याए।

सौभाग्य बिहानी। खोपी मनोभावन। भोटे गलैँचा बिछ्याइएको डम्म।

द्वारको दायाँ-बायाँ पानस। झ्याल-ढोका बन्द। भित्ता मल्लकालीन अति उत्तम चित्रकारिताले सुशोभित। ठूलो ऐनामा आफ्नो नग्न प्रतिविम्ब देखेर वराङ्गना लजाइन्। आँखा चिम्लिइन्।

यही आँखा-मिचौनीको विस्मरणमा रणजङ्ग पाँडे अद्वितीय राष्ट्रनेता ठहरियो। प्रधानमन्त्री हुने टुङ्गो लाग्यो।





# ६

दोस्रो पटक रणजङ्ग पाँडे प्रधानमन्त्रीमा नियुक्त गरिए। यसरी राजदम्पतीको तातो बिस्तरामा सृष्टि भएको महामात्यको दिमाग रचनात्मक कार्यपट्टि नजानु स्वाभाविकै हो।

'सबै छोडी पुच्छरमा हात' झैँ सत्तामा पुग्नेबित्तिकै विपक्षी निर्मूल पार्ने तरखरमा लागे पाँडे। उनी स्वयम् र महाराजाधिराजका तर्फबाट अनेक प्रलोभन देखाएर माथवरसिंह थापालाई काठमाडौँ झिकाउने प्रयत्न गरे – मार्न। तर नआएर थापाले ठूलो बुद्धिमानी देखाए।

तत्पश्चात् अर्को दुस्साहसपूर्ण कार्य भयो भीमसेन थापाले दुई वर्षअघि सफाइ पाइसकेको शिशु युवराज दिवेन्द्रलाई विष खुवाइएको मुद्दा उल्ट्याउने। यस पल्ट नवनियुक्त मुख्यमन्त्रीले इजलासमा भीमसेन थापाविरुद्ध प्रमाणस्वरूप नयाँ कागजपत्र पेस गरे किर्ते र बिनासबुतका। ती जालसाजीको खण्डनमा आरोपितले आफ्नो निर्दोषिता प्रकट गर्न अकाट्य तर्क प्रस्तुत नगरेको होइन, किन्तु बहस व्यर्थ सिद्ध भयो, किनकि मन्त्रिमण्डलमा इनसाफ र न्यायको आडम्बर देखावटी मात्र थियो। अभियुक्तलाई आजन्म कारावासको सजाय तोकियो।

मन्त्रिमण्डलबाट गरिएको फैसलामा लालमोहर लाग्नका निम्ति दरबारमा मिसिल पठाउने चलन थियो। अनि स्वकीय सचिवालयबाट स्वतः सदर भइआउने। तर यस मुद्दामा त्यसो भएन। श्री ५ महाराजाधिराजबाट आफ्नो अगाडि तहकिकात गराउन चाहिबक्सेकाले 'मिसिल कागजातसहित भीमसेन थापालाई हाम्रा हजुरमा पेस गर्नू' भन्ने ठाडो तोक लाग्यो।

हनुमानढोकाको ठूलो बैठक। भुइँमा नीलो चिनियाँ गलैँचा बिछ्याइएको। माथि दलिनमा मखमली चँदुवा। त्यसमुनि ठूलो राजसिंहासन। दायाँ-बायाँ भद्रासन।

साना आसनमध्ये एउटामा श्री ५ जेठी महारानी साम्राज्य, अर्कोमा श्री ५ कान्छी महारानी राज्यलक्ष्मी क्रमश: विराजमान।

दुवै राजमहिषीको पहिरन एकै स्तरको। रङ्ग फरक। जेठीको कक्रेजा। कान्छीको गुलाबी पृष्ठभूमिमा साना-ठूला पुतली बुट्टा, सेता। गहनाको बान्की पनि बेग्लै।

अगाडि प्रधानमन्त्री उभिएका। उनको पछाडि कनकसिंह पाँडेले कानमाथि सरको कलम घुसारेको। पटुकामा स्याहीदानी। त्यस मसिनीभित्र लत्ता कोचिएको मसी नपोखिने हिसाबले। हातमा कागजातको मुठो। कुनै पाना काखी च्यापेको, अलिकति पत्र भुइँमा।

चारपाटे लम्पटमाथि रङ्गनाथ। सेतो सुरुवाल र तासको सुनौलो जामा लगाएका। बिर्के टोपी, रातो मोजा।

अर्को लङतिरको लामो चोटा पार गर्दै श्री ५ राजेन्द्र र युवराजाधिराज सुरेन्द्र आउन लागेको सङ्केत कर्णगोचर भयो। बाबु-छोराले श्रीपेच लगाएका घुमाउसहित।

सुरेन्द्र– 'बुबा हजुर! कान्छा भाइलाई विष खुवाएकै हो।'

राजेन्द्र– 'कसले भनेको?'

सुरेन्द्र– 'मैले आफ्नै आँखाले देखेको। झन्डै मैले पनि पाचक भनेर खाइसकेको, नपत्याए सोधिस्योस् न जङ्गेलाई।'

राजेन्द्र– 'हो र?'

सुरेन्द्र– 'हो, एकदेवले हत्तपत्त मेरो हातबाट विषको पुरिया खोसेर पो म बाँचेको!'

दिवेन्द्र शाहको मृत्युशय्यामा आफूले वैद्यराजको पोकाबाट अफिम र धतुरोको पुरिया झिक्न पुगेको विगत घटना सुनाए।

बाबु-छोराको बैठकभित्र प्रवेश।

महारानीलगायत सबै सभासद् उठिसकेका। गुरुपुरोहितले स्वस्तिको आशीर्वाद चढाए। जयजयकार गुन्जियो।

सबै बसे।

मुद्दामा छलफल सुरु भयो।

प्रधानमन्त्री रणजङ्ग पाँडेले भीमसेन थापाको कायलनामाको कागज पढेर सुनाए जसमा थापाले सम्पूर्ण राजपरिवारलाई विष खुवाएर मार्न आँटेको कुरा पनि उल्लेख थियो।

तत्क्षण धाई-सुसारेको महिलादीर्घाबाट मृत दिवेन्द्र शाहको सम्झनामा रोएको साँक्क-सुँक्क स्वर सुनियो। युवराज सुरेन्द्र पनि आफ्नै पाराले दरबारमा विष ल्याएको आरोपलाई समर्थन गर्दै थिए।

प्रधानमन्त्रीले अघि बिन्ती गरे– 'कान्छा युवराजलाई विष ज्युनार गराएको देख्ने-सुन्ने, गवाह र अरू प्रमाणका कागजपत्र हामीसँग छँदै छन्। विष सनाखत भइसक्यो।' बरामद औषधीको पोकाबाट एक जहरको पुरिया निकालेर प्रदर्शन गर्दै अगाडि भने– 'मुद्दाको अङ्ग पुगिसक्यो. अब फैसलामा लालमोहर लगाएर अपराधीलाई जेल चलान गरे भइगयो।' व्यङ्ग्यात्मक तवरले थपे– 'बिचरा दोषारोपितलाई यहाँ माथि ल्याउनु मरेकालाई मार्नुजस्तो हुन्छ।' आफ्नो साबिकवालामाथि सहानुभूति देखाएको नौटङ्की गरेर तल गारतबाट थापालाई जेल पठाइएको खण्डमा निजको लाज बच्ने कुरा झिके। पछि करबद्ध बिन्ती गरे– 'सरकारको जो हुकम ...!'

हुकुम बक्सनुअघि सरकारले सभ्यहरूको राह-बिराह बुझ्न तिनका मुखमा एक-एक गरेर नजर गाडे। महारानीहरूले पनि त्यसै गरे।

सबै पार्षद करबद्ध चुप। तर भू. पू. प्रधानमन्त्री रङ्गनाथले राय बझाए सानो स्वरले– 'हैन प्रधानमन्त्रीज्यू! सबैको रोहबरमा पुर्पक्ष भएको खण्डमा दूधको दूध पानीको पानी' इनसाफ हुन्छ। दोषीको पनि चित्त बुझ्ने। बूढा भीमसेनलाई एक पटक यहाँ माथि कच्चहरीमा उपस्थित गराउनु बेस। महाराजाधिराजबाट पनि यही इच्छा गरिबक्सेको जस्तो लाग्छ।'

राजा राजेन्द्र– 'हो।'

पहिले कुलराज पाँडे तल गयो थापालाई माथि ल्याउन। अन्य दुई अफिसर ओर्लिए।

फलामे साङ्लाको पारस्परिक ठक्करबाट निस्किएको आवाज सुनियो– छल्र्याङ-छल्र्याङ ...। ध्वनितिर राजाको ध्यान गयो। सबैले भर्‍याङतिर हेरे। निःस्तब्धता छायो।

भू. पू. प्रधानमन्त्री भीमसेन थापालाई कैदीका रूपमा हाजिर गराइयो।

८० वर्षे, सेतै फुलेका, लबिधरे, नेल-हतकडी-सिक्रीमा जकडिएका।

उज्जर कुर्ता-सुरुवाल। शिरमा टोपी छैन। खाली गोडा। राजालाई देख्नेबित्तिकै दुवै हातले दर्शन गरे– 'जय महाराजाधिराज! जय धर्म-औतार! सरकारको प्रताप बढोस्!' दुवै राजपत्नीलाई पालैसित अभिवादन चढाए अनि युवराजाधिराजमा।

'प्रभु!' राजासमक्ष हात जोडेर घुँडा टेके, 'ताबेदारलाई साह्रै अन्याय पऱ्यो. इनसाफ पाऊँ।'

'पहिले मलाई,' बीचैमा बोले राजा, 'तँमाथि न्याय परेन कि भन्ने शङ्का लागेको थियो। त्यसैले तँलाई बोलाएको हुँ। तर होइन रहेछ। तैँले अपराध स्वीकार गरेको बेहोरा सबैले सुनिसके।' थपे– 'हामीलाई मारेर तँ राजा हुन खोजेको? पाजी!' रिसाउन थाले।

तथाकथित पाजीलाई आफ्नो साबिते लेखोटबारे केही थाहा छैन। जिल्ल परे– 'के कायलनामा? कुन?' मुटुमा सुइरो रोपिएको भाँती दर्दनाक आँसु बर्र झारे, राजाको मुहारमा टुलुटुलु हेरिरहे– 'प्रभुलाई कुममा बोकेर हुर्काएको हुँ। सरकारको दिसा-शुचि खाएको छु। त्यसको गन्ध मेरो हातबाट अझै राम्ररी पखालिएको छैन।' दुवै बाहु देखाएर रोए– 'यस्तो तीन पुस्तादेखिको सेवकले यो वृद्ध अवस्थामा सरकारको कुभलो कसरी चिताउन सक्छु?' घोप्टिए– 'ममाथि विवेक रहोस्! अन्नदाता, म निर्दोष छु।' बर्र आँसु खसाले, बोल्न सकेनन्।

राजाले पटरानीतिर हेरे, कहीँ उनको झोलीमा थापाप्रति दयाको भिक्षा छ कि? नदारद!

राजा थापातिर हेरेर बोले– 'तैँले सबै अपराध स्वीकार गरिछस्, फेरि निर्दोष छु भन्छस्। तँ दुईजिब्रेको कुराको केही ठेगान भएन।'

'ताबेदारले केही कसुर गरेको छैन। मबाट कुनै बिरामको अङ्गीकार लिने काम हुन सक्दैन सरकार! मेरो विरुद्ध धोकाबाजी भइरहेछ,' थापा कराए घाँटीको नसा फुल्ने गरेर।

राजा द्विविधामा परे, बोलेनन्।

जेठी महारानीको आकाङ्क्षाको बाटोमा भीमसेन थापाको मुक्ति ठूलो अवरोध थियो। त्यस रोकावटलाई सदाका लागि पन्छाउनका निम्ति पुत्रशोकमा डुबेको

अभिनय गर्नुपर्‍यो आमाले। छाती पिट्दै 'मेरो छोरो मार्नेलाई म त्यसै छोड्दिनँ। तँ पापी होस्, ज्यानमारा,' थापातिर औँलो ठड्याएर 'तँलाई नमारी मेरो कोखको घाउ शान्त हुँदैन। ज्यानको बदला ज्यानै लिन्छु।'

'सरकार! म त बाख्री बूढीको छोरो हुँ। मेरो जीवनको केही मूल्य छैन। तर अन्याय गरिबक्सेकोमा सरकारको बदनामी हुन्छ। भविष्यमा कालो अक्षरले इतिहास लेखिन्छ। बडामहाराजधिराज पृथ्वीनारायण शाहबाट सानो मिहिनेतले आर्जिबक्सेको मान, मर्यादा, इज्जत हैन सरकारको। यस्तो पवित्र गद्दीमा सिंहासनारूढ राजाले 'ऐरेगैरे नत्थूखैरे' को कुरा सुनिबक्सेर अन्याय गरिबक्सनु हुँदैन।' रणजङ्गतिर लक्ष्य गरेर फेरि कराए– 'कीराले हीरा बिगार्छ।' थपे– 'राजाको सय नजर र हजार कान हुनुपर्दछ ...।'

'सरकार!' रणजङ्गले बिथोले, 'यो बूढाले 'कीरो' शब्दको प्रयोग गरेर मलाई होइन, सरकारबाट बक्स भएको प्रधानमन्त्रीको मानमर्यादामाथि चोट पुर्‍याएको हो।' फेरि जोड दिँदै भने– 'यो बेइज्जतीका निम्ति सजाय बक्सनुपर्दछ।'

जेठी महारानी– 'हो त नि! प्रधानमन्त्रीको प्रतिष्ठाको ख्याल नराख्नेलाई दण्ड दिनुपर्दछ। मेरो छोरो मारेकोमा बिराएँ भन्नु त कहाँ हो कहाँ, पश्चात्तापको एक लवज पनि छैन। झन् चरचरी बाइने? हाम्रा प्रधानमन्त्रीलाई भारेभुरे भन्ने?'

थापा– 'कान्छा युवराजको स्वास्थ्यलाभका निम्ति हामीले सकेसम्म प्रयास गरेका हौँ। केही सीप लागेन। विधाताको खटन त्यही रहेछ। अब समवेदना प्रकट गरेर के गर्नु? हाम्रो नसिब फुटिहाल्यो ...।'

जेठी महारानी जुरुक्क उठेर धाई-सुसारेको अनुकरणमा रुँदै पाखुरा निमोठ्न थालिन्– 'हेर् भीमसेने! तेरो भाग्य फुटेर पुग्दैन, खप्पर फोर्न बाँकी छ। छ महिनाको रक्तेलालाई मार्दा तँलाई चित्त दुखेन?' जथाभाबी मुख छोड्न थालिन्– 'विष तैँले दरबारमा ल्याएको मेरै छोराले देखेको।'

कान्छी महारानीलाई थाहा छ, केही गरेर सौताको कपटपूर्ण योजना सफल भएको खण्डमा पागल आमा-छोराले उनलाई बाँकी राख्दैनन्। नेपालमा उधुम मच्चिन्छ। अतः सौतालाई सान्त्वना दिने र भीमसेन थापालाई दोषमुक्त गराउने हेतुले सानो स्वर पारिन्– 'होइन दिज्यू! रसादिमा विषको मात्रा पर्छ रे। त्यसैले औषधीमा मिलाउनका निम्ति वैद्यराजहरूले अफिम र धतुरो ल्याएका होलान्।'

'भीमेको धुइरो उठेर तैँले मलाई केही नाप्न सक्दिनस्,' एक्कासि जेठी महारानी चड्किइन्। 'राजकाजको अभिभारा मलाई सुम्पिबक्सेको छ। म जेठी हुँ। मेरो छोरो युवराजाधिराज ...।'

सुरेन्द्र बिस्तारै आसनबाट उठेर राजसिंहासनमा कोचिएर बस्न पुगे, आमाको समर्थनमा मुन्टो हल्लाउन थाले मुख बिगारेर।

आमाको हौसला बढ्यो। थापामाथिको गालीगलोज झन् तीव्र पारिन्।

ती दुर्वाच्यको तीखो घोचपेचले कान्छी महारानीलाई पनि ग्वाम्म रोपिन पुगेछ। सहन नसकेर खोपीतिर रिसको पाउ बजार्दै गइन्। त्यहाँबाट छोरालाई ल्याएर बाबुको काखमा थचारेर बसाइन् आफ्नो पनि छोरो भएको फुइँ देखाउन।

जेठी महारानीले ठाडै विरोध गरिन्– 'बच्र्योट! राजसिंहासनमा जो पायो ऊ बस्न पाउँदैन।' नाडी निमोठिन्।

'बाबुको काखमा छोरो नबसे कहाँ बस्छ?' ओंठे तर्क भयो कान्छी महारानीको– 'कि त छोरो हैन भन्नुपर्‍यो!'

सौता-सौताको निम्न स्तरको चड्काचड्की पर्‍यो। यतिसम्म कि दिदीले बहिनीको चरित्रहत्या गर्नका निमित्त अङ्ग्रेज राजदूतसितको कुत्सित सम्बन्धबारेको अफबाह कोट्याउन थालिन्। बहिनी पनि कम मुखाले थिइनन्। 'सनकी, पागल बस्न हुने गद्दीमा; मेरो छोरो सद्देले एकछिन टुसुक्क पुट्ठा अड्याउन किन नपाउने?'

गालमुखाल लोग्नेलाई सह्य भएन. 'दुई जोईको पोइ कुना पसी रोइ' उखानझैँ छोरा रणेन्द्रलाई अघि लगाएर 'लौ' पत्नीहरूतिर लक्ष्य गर्दै 'तिमीहरू बाझिरहो, म गएँ।' बैठक परित्याग गरे।

कान्छी महारानी पछि लागिन् आँसु बोकेर।

न्यायिक निकायमा सन्नाटा छायो।

चकमन्नतामा जेठी महारानीको सिंहनाद सुनियो– 'यो पाजी भीमेलाई मेरो सामुन्ने कहिल्यै नल्याउनू। यसलाई देख्यो कि मेरो छोरो कान्छालाई सम्झन्छु।' सुरक्षा सैनिकतिर हेरेर हुकुम गरिन्– 'यस भीमेलाई लैजाओ। तलतिर घोक्र्याइदेओ।'

भीमसेनलाई घर्तीकाला लागेको दिनदेखि पाँडेहरूको चकचकी बढ्न थालेको थियो। झन् आजभोलि सम्पूर्ण दरबार पाँडेमय भएको प्रतीत छ। पाले, पहरा, हाकिम, कारिन्दा खलिकपुर पाँडे नै पाँडे।

थापाको ३१ वर्षको शासनकालमा दामोदर पाँडेका उत्तराधिकारी र तिनका आज्ञापालक कुनैलाई पनि सरकारी उच्च पदमा राखिएन। कसैले काराकष्ट भोग्नुपर्‍यो, कसैले देशनिकाला।

'अचानाको पीर खुकुरीले जान्दैन' उक्तिझैँ थापाको विगत अत्याचार पाँडेहरूले भुलेका थिएनन्। महारानीको हुकुम पाउनासाथ सजायाफ्ता घोक्रेठ्याक... परे थापा। धरमराउँदै सँघारठेलोमा हत्केलाले टेक्न पुगे। राम्ररी थिहिरिन पाएका थिएनन्। अर्काले सोपानित कुनामा लत्यायो। त्यहाँबाट भकुन्ड्याउँदै तल नासलचोकमा झार्‍यो।

बूढाका निमित्त कुनै आधार रहेन। सिबाय देवीदेवता पुकार्नु। हनुमानढोकाभित्र अवस्थित तलेजु मन्दिरतिर दृष्टि दिए। मल्लकालीन राजाहरूले ती देवीहरूको प्रस्तर मूर्तिसित कुरा गर्ने, पासा खेल्ने, दुःख परिआएको अवस्थामा रायसल्लाह, आशीर्वाद माग्ने गरेको जनश्रुति थियो। त्यही किंवदन्ती हृदयङ्गम गरी तुलजासित हात जोडे– 'हे जगज्जननी! म भ्रामरीको दशामा परेको छु। यो विपत्तिबाट पार पाऊँ!' आफूमाथि वज्रपात भएको बेहोरा बरबराए मनमनै।

प्रार्थयिताका आँखासामुन्ने मन्दिरको छानामाथि चतुर्बाहु स्त्री देवी प्रकट भइन् शङ्ख, चक्र, गदा, पद्मधारी।

अनुनयी आशावादी भए– 'हे माता! इनसाफ पाऊँ!' पुनः करबद्ध वन्दना गरे।

प्रार्थीको कर्णकुहरमा आकाशवाणी पर्‍यो– 'हे जेठा बोहरा! तिमीहरूले अपनाएको शासनव्यवस्थामा इनसाफ खोज्नु मूर्खता हो।' वाणी अघि बढ्यो– 'तेरो वादी जेठी महारानी छिन्। इनसाफकर्ता पनि उही। आफ्नो झगडियाबाट तैँले कसरी न्याय पाउने?'

देवीवाणीसँग सहमत भएनन् बूढा, राय बझाए– 'बहुजनसुखाय बहुजनहिताय ... को उद्देश्यले प्रतिपादित राज्यप्रणाली हो यो, 'इनसाफ नपाए गोर्खा जानू' भन्छन्।'

देवीवाणीबाट युक्तिपूर्ण उत्तर आयो– 'त्यो भनाइ द्रव्य शाहको पालाको हो। ज्यादै पुरानो भइसक्यो। सुधारको आवश्यकता छ।'

थापालाई चित्त बुझ्दैन।

देवीवाणीले अबुझलाई राम्ररी बोध गराउन अतीतको बिस्कुन सुकाउन थाल्यो जसमा भू. पू. प्रधानमन्त्री दामोदर पाँडेलाई यही दरबारमाथिको भऱ्याङबाट यिनै थापाले खँगार्न लगाएर नासलचोकमा पछारेको अनि निज पाँडेका बाबु-छोरालाई टुँडिखेलस्थित भद्रकालीस्थानको छेउमा काटेको खास बुँदा उल्लेख थियो।

'त्यो हत्या,' थापा बीचमा बोले, 'रणबहादुर शाहको हुकुमबाट भएको हो. मैले होइन।'

देवीले भनाइ जारी राखिन्– 'रणबहादुर शाहको वधपछि पनि यही नासलचोकमा बसेर तैँले आफ्ना समर्थक फौजद्वारा दरबार घेर्न लगाएर विरोधीहरूलाई सखाप पार्ने मौका छोपिस्। त्यस हत्याकाण्डमा ५० भन्दा बढी उच्च सैनिक अफिसर, नरसिंह काजी एवम् त्रिभुवन काजीका साथै चौतरिया विदुर शाही पनि परे। त्यस दिन पाल्पाली राजा पृथ्वीपाल सेनलाई उनका समस्त सैनिकका साथ मृत्युशय्यामा सुताइस् ...। ती अकालमृत्युमा परेकाका नाताकुटुम्ब कङ्काल स्वरले रोएका थिए। बेस्सरी छटपटाएका थिए।' पुनः थपिन्– 'तिनीहरूले पनि अहिले तैँले जस्तो सहयोगका निम्ति प्रार्थना गरेका थिए, तर मैले केही मदत गर्न सकिनँ ...।'

तत्क्षण सुरक्षा सैनिकले थापालाई मूल ढोकाबाहिर निकाले। द्वारको खापामा उनले केही वर्षपूर्व सुनको मुलम्बा गराउन लगाएर 'सुनढोका' नामकरण गराएका थिए। त्यस चम्किलो फग्लैँटोमा उनले उहिले कटाएका भारदारहरूको रगत र आँसुको पोखरी दृष्टिगोचर भयो. तर्सिए। रक्तिम तलाउमाझ उनी आफू पौडिरहेको देखे. तब आत्मरक्षाका निम्ति तर्क पेस गरे– 'राष्ट्रिय एकीकरणका निम्ति अलिकति रक्तपातको आवश्यकता परेको थियो ...।'

'थिएन.' बीचमा कुरा काटिन् देवीले. 'एक नेपालीले अर्को नेपालीको हत्या गर्नु महापाप हो. गोत्रहत्या!' फ्रान्सेली राज्यक्रान्ति र बेलायतको प्रजातान्त्रिक प्रणालीबारे तुलनात्मक विश्लेषण गर्न लागेकी थिइन्। भीमसेनलाई सैनिकले अघिल्तिर डोऱ्याउन थाले हतकडीको सिक्री तानेर।

नौतले दरबारमाथिको एउटा उत्कृष्ट काष्ठकलाको झ्यालमा राजा राजेन्द्र र कान्छी बडामहारानी राज्यलक्ष्मी विराजमान थिए। भीमसेन थापाको दुःखित

स्थिति देखेर महारानीको चित्त चुँडिएछ– 'कठै! बिचरालाई अनाहकमा त्यस्तो कष्ट भेल्नुपर्‍यो।' चुकचुकाइन्।

'हाम्रो छोरो मराउनेलाई केको कठैबरा?' राजाले आँखा तरे हँसिलो चित्ताकृतिमा। रानीले पनि नजर बङ्ग्याइन्– 'कालले मर्ने सबै भीमेकै दोष?' ठुस्सिइन्।

'विष सनाखत भएको छ।'

'विष सबै वैद्यराजको पोकामा हुन्छ। औषधीमा मात्रा मिलाएर उपचार गर्न।' महारानीले भनिन्– 'भाङ, धतुरो, अफिम आदि जहरबिना रसादि नै बन्दैन रे।'

'खै, भीमेको कर्तुतबाट कान्छाको ज्यान गएको भन्ने तिम्री दिदीको जिद्दी छ।'

'छोराहरूको पीरले दिज्यू आफैँ पनि बहुलाइसक्नुभयो। नत्र बाबु छँदाछँदै छोरालाई राजा बनाउने कुरा कोही गर्छ?' छुस्केरा राजाको चित्तमा गद्‌दछ, ... भए, बोलेनन्। भीमेलाई फिर्ता लाने सैनिक समूहतिर विचारपूर्ण मुद्राले हेरिरहे। पछि तिनको ध्यान खिच्नका निम्ति जोडसित ताली बजाए।

कुले र थापाले पछाडि फर्केर हेरे– 'जय सरकार!' कुले करायो सहरै थर्कने गरी। त्यस्तै उच्च स्वरबाट राजभक्तिको द्योतक अभिवादन चढाउन तयार थिए थापा पनि। तर डोरिया सैन्यहरूले त्यसो गर्न दिएनन्, अघिल्तिर ताने।

वसन्तपुरको डबलीबाट कुले दगुर्दै दरबारभित्र पस्यो।

माथि झ्यालमा राजदम्पती साउती गरिरहेका। कुलराज त्यहीँ हात जोड्न पुग्यो– 'सरकारको जय होस्!'

राजा-रानीबीचको कानेखुसी टुङ्गिएको थिएन– 'भीमसेन थापालाई छोडिदिइबक्सनुपर्‍यो महाराज! त्यसको केही कसुर छैन।'

कान्छी बडामहारानीको मुखसार अगाडि बढ्यो– '३० वर्ष प्रधानमन्त्री भएर काम चलाएको व्यक्तिले वृद्ध अवस्थामा विष खुवाउने काम कसरी गर्‍यो होला? पत्याउनै सकिँदैन। त्यस्ता आधारहीन कुरामा तीन पुस्तादेखिको सेवकलाई बेफ्वाँकमा दुःख बक्सन मनासिब परोइन!' कुलराजतिर फर्केर– 'कसो कुले?' समर्थन पाउने आशामा मुख बाइन्– 'महाराजको पाउमा साँचो बिन्ती चढा।'

कुले एक नम्बरको दरबारिया थियो, महारानीको आशयमुताबिक हात जोऱ्यो– 'सरकारबाट दूधको दूध पानीको पानी इनसाफ पाएकै छन् रैती-दुनियाँले। थापाकाजी मात्र किन अन्यायमा पर्नुहुन्थ्यो?'

महारानीको मनमा कुले पनि थापाको पक्षधर भन्ने भ्रम पऱ्यो। थापाको वकालत गर्न पुनः लोग्नेतिर फर्केर– 'मेरी शत्रु जेठी महारानीले ममाथिको रिस त्यो बूढालाई पोखेकी हुन्। सरकार यति पनि बुझिबक्सन्न।' आँखाभरि आँसु थुपारिन्– 'सरकार र सरकारका बुबालाई काखमा खेलाएर हुर्काउने मान्छेले यो बुढ्यौलीमा यस्तो नचाहिँदो पाप कसरी गर्छ?' तरर आँसु खसालेर– 'मैले त देखेको कुरा बिन्ती गरेकी हुँ। झन् मैले पक्ष लिएँ भनेर सौताले थापाको खोइरो खन्न लागेकी हुन्।' आँसु पुछ्दै भावविह्वल मुद्रामा हात जोडिन्– 'बरु मलाई जे सजाय बक्सन्छ बक्सियोस्। मेरा शत्रुहरूको चित्त बुझोस्। त्यो बूढो निर्दोष छ। त्यसलाई माफी बक्सियोस्!' थपिन्– 'मेरा निम्ति त्यसले दुःख नपाओस्, बिन्ती छ। त्यसलाई छाडिबक्सियोस्।'

'तिम्री दिज्यूले चित्त दुखाउने हुन् कि?'

'त्यस्ती बहुलाहीको कुरा सुनिबक्सेर सांध्य हुँदैन,' सौताप्रति हेय भाव उत्पन्न हुने तरिकाबाट भए-नभएको सिकायत गरिन् कान्छी महारानीले। 'मलाई त कान्छी मुखिनीको पो पीर लागेको छ। त्यो बिचरी बूढी रुँदा-रुँदा मर्न लागिसकी ...।' पुनः बोलिन्– 'भीमे र वैद्यराजहरूको कायलनामा सबै किर्ते बनाएको रे,' दोहोऱ्याई-तेहेऱ्याई उल्लेख गरिन्।

'होला। तिमीले ठीक भन्यौ,' कान्छीको पच्चपोषक भए राजा। कुलराजतिर फर्केर– 'भोलि भीमेलाई हाम्रो हजुरमा हाजिर गराउनू। म आफैँ त्यसको मुद्दा हेर्छु। जेठी महारानीलाई बोलाउनुपर्दैन। रणजङ्गलाई पनि खबर नगरे हुन्छ। तैँले बिहान सबेरै त्यसलाई मकहाँ ल्याउनू।'

'जो हुकुम महाराज!'

भोलि हुने फैसलाको नतिजा अहिले नै अडकल काटिसक्यो कुलराजले, कानमा सुइरो रोपिएको अनुभव गऱ्यो, थरथर काँप्यो। महारानी प्रमोदित चित्तवृत्तिमा भइन्। झ्यालबाट बाहिर भीमसेन डोरिएको दिशातर्फ हेरिन्।

थापा निर्दोष भएको कारणले आज बन्धनमुक्त हुन सम्भव थियो। पुनः प्रधानमन्त्री बन्न पनि। त्यही सम्भावनालाई मध्यनजर राखेर उनी आउने बाटोमा स्वगत-अभिवादनका निम्ति फूलमाला लिएर अनुयायी उभिएका थिए। कोही बाटोको किनारमा, कोही रूखको आडमा, कुनै पसलभित्र। परन्तु आज पनि उनलाई कैदीकै रूपमा देखेर हातको गजरा लुकाए। साक्षात्कार गर्न डराए। देखे पनि नदेखेजस्तो गरी हिँडे। कोही लुके।

यस्तो मतलबी सामाजिक परिवेशमा कान्छी महारानीको पनि स्वार्थ बोल्यो– 'कुले तँ अहिले गएर भीमसेनलाई हाम्रो बीच भएको कुराकानीको बेहोरा सबै भनिदिनू।'

'जो हुकुम सरकार!' कुलेले कुटिल हर्ष प्रकट गऱ्यो साँढेले मुख बङ्ग्याउने पाराले।

महारानीले पुनः आज्ञा गरिन्– 'कुले! भीमसेनकी कान्छी मुखिनीलाई पनि ऊसँगै साथमा भोलि कचहरी बैठकमा ल्याए हुन्छ। बूढासँगै बूढी पनि घर फर्किऊन्।' लोग्नेतिर हेरिन्– 'हुन्न महाराज?'

'हुन्छ।'

'जो हुकुम!' कुलराज बिदा भयो।

उसलाई थापा बन्धनमुक्त हुने सम्भावनाले पोलेको छ। आङमा आगाको फिलिङ्गो खनिएको जस्तो। असहनीय जलनको कारणले गर्दा स्नायुविकारले छोएछ, आँखामा अन्धकार छायो। थापा डोरिएको दिशातिर जाने बाटो देखेन, गोडा पनि लागेनन्। विपरीत दिशापट्टि कदम बढायो।

राजप्रासादभित्र उसलाई कतै जान रोकटोक थिएन,, तैपनि चोटाकोठा चहार्दा एक जना साक्षी लिएर मात्र तलमाथि गर्थ्यो। अन्यथा केटीहरू जिस्कन आउने, बाटो छेक्ने। तर अहिले सङ्कटग्रस्त स्थिति छ। कम्पनशीलताले हडबडाएको, साक्षीका लागि बिलम्बिने समय पनि छैन। एक्लै कचहरी बैठकमाथि पुग्यो। त्यहाँ जेठी महारानी साम्राज्यलक्ष्मी र प्रधानमन्त्री रणजङ्ग पाँडे मात्र थिए। भीमसेन थापालाई दण्डसजाय तोकिएको फैसलामा राजङ्क लगाउन तयार।

महारानी मृत्युदण्ड दिन चाहन्थिन्। प्रधानमन्त्री आजीवन कारावासको पक्षमा, किनकि उनी थापालाई बिरालाले मुसो मारेझैँ खेलाई-खेलाई मार्न चाहन्थे।

यही मतभेदबारे छलफल भइरहेको।

कुलराजलाई अस्ताचलको सूर्यसमान मलिन देखेर रणजङ्ग भस्किए– 'क्या हो?' सानो स्वरले– 'त्यो बालहत्यारा बाटोबाट उम्कियो कि कसो?'

उत्तर दिनतिर लागेन कुलराज. रानीको दर्शन गऱ्यो भुकेर। अभिवादनको प्रत्युत्तरस्वरूप महारानीले मुख खोलिन्– 'त्यो पाजी बाग पुग्यो?'

अभ्र प्रश्नतिर ध्यान गएन कुलराजको। भीमसेन थापालाई राजाबाट भोलि दरबारमा बोलावट हुने भएको र कान्छी महारानीको उनीप्रतिको सहानुभूतिबारे विस्तृत वर्णन गऱ्यो निसास्सिँदै। साथै थापाको निकट भविष्यमा भाग्य चम्कने लख काट्यो।

त्यो अनुमानित प्रतिवेदनअनुसार महारानीले राजनीतिक दाउपेचको अखडामा आफूलाई सौताको धोबीपाट लागेको महसुस गरिन्. छिट्टै चार्राचित परिने।

उनी पनि कुटमल्लवृत्तिमा कम खली खाएकी थिइनन्। खतरनाक पनि। तुरुन्त सपत्नीको धोबीपाटको विरोधमा कालाजाङ्ग प्रहार गरिन्– 'आज राति नै भीमेलाई सिध्याउनुपर्छ, 'न रहे बाँस न बजे बाँसुरी'।' दुवै मुठी बटारेर गलहस्त मुद्राको साङ्केतिक भाउ देखाउँदै– 'त्यसले भोलिको सूर्योदय देख्न नपाओस्!' घाँटी निमोठेर मार्ने स्पष्ट हुकुम दिइन्।

यस्तै षड्यन्त्रद्वारा राजकुमार बहादुर शाहको हत्या गराएको बदनामी ताजै थियो रणबहादुर शाहमाथि। त्यही अनाच्छादित रहस्यमय मरण-तरिका पुनः दोहोऱ्याउँदा यी महारानीको पनि रणबहादुर शाहको जस्तै अपकृति फैलिन सम्भव देख्छन् प्रधानमन्त्री। निको मानेनन्। अर्को योजनाबद्ध तरिकाले दुर्बोध उपाय प्रस्तुत गरे। थापालाई बागबाट बाहिर निकालेर गोली ठोक्ने अनि 'थुनुवा थुनाबाट भाग्ने प्रयास गर्न लाग्दा प्रहरीको गोलीबाट मारिएको' भन्ने।

कुलराजको मुखबाट वैकल्पिक सुभाव चुहियो– 'हामीले पितृसमानको वयोवृद्धलाई मारेर किन पाप भोग्नु? ऊ आफैँले आफैँलाई मारोस्।'

'कसरी?'

'सेरिएर।'

महारानीको मुखारविन्दबाट पनि एउटा प्रश्न आफसेआफ बाहिर निस्कियो– 'के आत्महत्या गराउने?'

'हो!' कुलराज विश्वासका साथ बोल्न थाल्यो– 'बूढो ज्यादै निराश भएको छ। त्यस्तो चित्तविक्षेपको मनस्थितिमा अर्को एक निराशाजनक खबर उसका कानमा पुऱ्याउन पाएदेखि ऊ बाँच्न सक्दैन,' जोड दिँदै भन्छ– 'हतोत्साहित थापा टाउको फोरेर, घाँटी रेटेर, अग्लो ठाउँबाट हाम फालेर या पानीमा डुबेर अथवा भुन्डिएर प्राण त्याग्नेछ,' थप्यो– 'त्यसो भएको खण्डमा हामीलाई न पापको डर न अवगालको।'

यस्तो 'सर्प पनि मर्ने, लट्ठी पनि नभाँचिने' तरिका प्रतिपादन गर्ने दायित्व कुलराजलाई सुम्पिइयो।





# ७

बागको सानो कोठाभित्र थुनिएका भीमसेन थापाको निद्रा खजमजियो। ओल्टे फर्कन्छन्, कोल्टे फर्कन्छन्। सेपिलो प्रकोष्ठ र अपर्याप्त भोजनको कारणले निदाउन सकेनन्।

आफ्नो मुद्दा छलफलका क्रममा राजा-रानीहरूबीच चर्काचर्की परेको र पाँडेहरूले 'नयाँ रिस पुरानो खिस' पोख्ने मौका छोपेको घटना उनको स्मृतिपटमा एकपछि अर्को आइरह्यो।

कहिले नसिबलाई दोष दिन्छन्, कहिले नेपालले अवलम्बन गर्दै आएको राजनीतिक प्रणालीलाई।

उनको मुख्तियारीकालमा बेलायती पदवीअनुसार सैनिक व्यवस्था मिलाएका थिए। तालिम पनि अङ्ग्रेजी माध्यमबाट गराएका।

अङ्ग्रेजको राजनीतिक, सामाजिक र आर्थिक उन्नतिको लेखाजोखा गर्न थाले।

बिहानीपख आँखा लागेछ। थुनाबाट उम्किएर बेलायत पुगेको सपना देखे।

लन्डनको अलकत्रे सडक, चिल्लो, फोहोरमैला जथाभाबी नमिल्किने, ग्रहणकमा फाल्नुपर्ने चलन पनि थाहा पाए।

टोल-टोलमा विद्यालय, महाविद्यालय, दिवा पाठशाला खुलेका, कतै विश्वविद्यालय।

सबै नागरिक शिक्षित, विज्ञान विद्या, शास्त्र र हरेक विषयका विशेषज्ञ।

कलकारखाना, ब्याङ्क, चमेनागृह, भोजनालय इत्यादि गगनचुम्बी इमारत हेर्दा शिरको टोपी खस्न सम्भव। अर्थाभाव कतै छैन।

जतातातै कलधारा, पानीको छेलोखेलो, ग्यासबत्तीका खम्बा लहर लागेका, उद्यानभित्र हृदयहारी फूल ढकमक्क। चौर हरियो।

मजदुर, कालिगड, कलाकार, साहित्यकार, पत्रकार आ-आफ्नो काममा निरत असिनपसिन।

कतै ढल सफा गर्न लागेका, कतै नयाँ घरको निर्माण सुचारु रूपले चलिरहेको। हात खाली कसैको छैन, न टुसुक्क बस्ने फुर्सद। जम्मै काममा हतारिएका।

काँठ-देहाततिर खानी खन्ने काम भइरहेको। कतै पहाड फोर्ने। चारैतिर सृजनात्मक खोज-आविष्कार।

लोग्नेमान्छेको पहिरन सुट, प्यान्ट, टाई इत्यादि। आइमाईको स्कर्ट, ब्लाउज, लामखुरे जुत्ता, मोजा, पन्जा, नारीमा घडी। झुत्रेझात्रे कोही छैनन्। सबै ठाँटिएका। उज्ज्वल चेहरा, बान्की परेको नाक, त्यस्तै ओठ र नयन। चुच्चो छाती, झीनो कम्मर, कसिएका पुट्ठा। सुकसुकाउँदा वृन्द।

रोगी, माग्ने, अपाङ्ग र अशिक्षित एक जना पनि छैनन्। न मदविकृत।

जातभातको समस्या छैन। न लिङ्गभेद।

नेपालमा स्वास्नीमान्छेलाई, खास गरेर पछौटिएको क्षेत्रमा बोक्सीको बात लगाएर कुटी-कुटी मार्ने चलन थियो। त्यो अन्धविश्वासलाई तोडेर समाज अघि बढिसकेको त्यहाँ।

हिँडुवा-हिँडुवी कदममा कदम मिलाएर फड्को मारिरहेका – स्वतन्त्र, समचित्त र बराबरीका पाइला।

कसैले काखीमुनि पुस्तक च्यापेका, कुनैले ब्याग बोकेका।

कुनैका मुखमा लिपपोत छैन, न आभूषण; एकाधले कर्णफूल र औँठी लगाएका। त्यही पनि धातु, कागज र फूलको।

थापाको अगुवाइमा ब्रिटिस राजदूत ब्रन हागसन साथमा गएका थिए। उनीसित प्रश्न गरे थापाले– 'महामहिम! यहाँ गहना बन्दैनन्? महिलाहरूका नाककान बुच्चै देखिन्छन्। कसैले नक्कली लगाएका।'

श्रीमती कस्लर नामक वैज्ञानिकले बाइस्कोपको पारदर्शी पटमा कण्ठध्वनि हालेर वाक्चित्र बनाउने अनुसन्धान गरिहेको ताजा खबरले प्रसारप्रसारणी माध्यम ढाकिएको थियो, चारैतिर सनसनी।

त्यस्तै अर्को नारीसमूह सडकमा गुड्ने वाहन बनाउने कोसिसमा तल्लीन। कुनै आविष्कारक, कुनै डाक्टर, इन्जिनियर, शास्त्राचार्य, विश्वसुन्दरी, कलाकार, अभिनेत्री, विश्वविजेता खेलाडी, स्कुल, कलेज, विश्वविद्यालयमा प्रथम श्रेणीमा प्रथम उत्तीर्ण हुने देवीजीहरूलाई गहनाको आवश्यकता थिएन। अलङ्कारभन्दा तिनका कृति बढी चम्किला थिए। बरु सिँगारपटारले काममा बाधा पुग्न सम्भव। व्यक्तित्वमा ह्रास आउने।

उपर्युक्त विषयलाई खुलस्त परिभाषित गरेनन् गोराले, वैकल्पिक उत्तर दिए– 'यहाँका स्त्रीजाति ज्ञान-दक्षतामा विशेष महत्त्व दिन्छन् नकि जेवरमा। देख्नुभएन तिनीहरू काममा हतारिएका? त्यस्तै चटारोभित्र तिनको सौन्दर्य लुकेको छ, महानता, आदर्श, प्रतिष्ठा र आकर्षण।' अघि बोले– 'यहाँका जनी जात गहना बनाएर विदेशमा निर्यात गर्छन्, आफू लगाउँदैनन्।' प्रस्ट थपे– 'स्वास्नीमानिसको यही राष्ट्रिय भावनाले गर्दा अङ्ग्रेजी समाज उन्नतिको शिखरमा पुगेको छ जसको साम्राज्यमा सूर्य कहिल्यै अस्ताउँदैन।'

पाङ्ग्रे सवारी चारपाँच पङ्क्तिमा गुडिरहेका, साथै घोडे टापको निरन्तर आवाज, कतै हिनहिनाहट। प्रतीत हुन्थ्यो सहर दगुरिरहेको।

गृहणीले पाहुनालाई ठूलो प्रतिष्ठापूर्ण सम्मानसाथ राजदरबार बकिङहम प्यालेस लगी।

बच्छेबाजामा गौरव-गोरखा (Pride of the Gorkha) शीर्षक बोली बजिरहेको।

भुइँ बैठकमा प्रतीक्षकको जमघट, त्यहाँका प्रधानमन्त्री, मन्त्रीगण, ड्युक-डचेज, कमान्डर-इन-चिफ, संसद् सदस्य, विरोधी दलका नेता, भाइभारदार र नगरपाल। अझ आउने अभ्यागतको क्रम टुटेको थिएन।

प्रत्येक नवागन्तुक महिलाको उपागममा पुरुषहरू उठ्थे स्कुल-कक्षामा अध्यापक पस्दा विद्यार्थी खडा हुने पाराले। श्रीमती ब्रेन हागसन (ब्रिटिस राजदूतकी पत्नी) को प्रवेशमा अन्य लोग्नेमान्छेसँगसँगै उनका पति मि. हागसन पनि ठिङ्गिएको देखेर नेपाली आँखालाई उल्टो गङ्गा बगेको जस्तो लागेछ, अनौठो मानेर सोधे– 'महामहिम, तापाईं आफ्नी श्रीमतीलाई नचिनेर उनी आउँदा उठ्नुभएको हो कि

अङ्ग्रेजी समाजमा स्वास्त्रीलाई समेत मानसम्मान प्रदान गर्नुपर्ने, त्यही पनि यतिका मानिसको मुखिन्जेल?'

'स्वास्त्रीलाई मात्र हैन, समष्टिगत कमजोर लिङ्गप्रति उदारता बर्तनु मानवता हो। ईश्वरीय विवेक। त्यस सद्भावले मनुष्य र पशुको बीचमा रेखाङ्कन खिच्छ।' अगाडि भन्न लागेका थिए– 'नेपालीहरू स्वास्त्रीलाई जुत्तासमान ठान्छन्, त्यसै कारण प्रगतिपथमा पछाडि परेका हुन्।' तर बोल्नका निम्ति मुख बाउनुअगावै स्त्री पर्यवेक्षक आएर नेपालीलाई माथि शाही खोपीमा लगी।

त्यहाँ उपस्थित सबै समादरणीय व्यक्तिहरू बिस्तारै पछि लागे।

पाहुना भेट्ने कोठा विशेष किसिमको रहेछ। चित्रगुप्तद्वारा अति उत्तम कुचीबाट परिकल्पना गरिएको जस्तो– ऐना, तस्बिर, झाडबत्ती, पानस, कउच मेच कलात्मक ढङ्गले सजाइएका। अत्तरबास मगमग, फूल, माला र गुच्छा यथेष्ट।

गलैँचाको बेलबुट्टामाथि टेक्र हिचकिचाउनुपर्ने।

हागसनले अङ्ग्रेज बादशाहको ओजस्वी परिचय सुनाए– 'सम्राट् चतुर्थ विलियम बेलायतका बादशाह होइबक्सिन्छ। हिन्दुस्तान, क्यानडा, अस्ट्रेलिया आदि देशका सम्राट्।' साथै मौसुफमा थापाको चिनारी पनि चढायो– 'उहाँ हुनुहुन्छ नेपाल देशबाट आएका जर्नेल भीमसेन थापा।' ठट्यौली तरिकाले– 'हाम्रो एक नम्बरको विरोधी। ज्यानी दुस्मन।' हाँस्दै– 'यहीँ प्रथम नेपाली हुनुहुन्छ जसले हाम्रो लर्ड वेलेजलीको संरक्षणप्रथाको आभ्यन्तरिक अर्थ बुझ्नुभएको थियो र नेपाललाई हाम्रो दासत्वको जन्जिरबाट मुक्त राख्न सफल हुनुभयो।' अघि बोले– 'मेरो विचारमा हिन्द महासागरवरिपरि रणजित् सिंहबाहेक वर्तमान समयको कुनै यस्तो राष्ट्रनेता छैन जोसित यी जर्नेल थापाको तुलना गर्न सकिन्छ।'

स्वीकृतिमा सम्राट् मुस्कुराए, हात मिलाए। मजकुरबाट सोधनी भयो– 'तिम्रा राजाको नाम के हो?'

नेपालनन्दनको यश फैलाउने सुयोग किन गुमाउँथे थापा? प्रशस्तिको लामो भूमिका बाँध्न थाले– 'श्री श्री ... गिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविध श्री ... श्री ... श्री ... महाराजाधिराज राजेन्द्रविक्रम शाह।'

सम्राट्ले प्रश्न गरे– 'तिम्रो देशमा फलाम छ?'

'खानी होला। उत्पादन छैन।'

'नुन छ?'

'छैन, हिन्दुस्तानबाट झिकाउनुपर्छ।'

सम्राट्ले व्यङ्ग्य गरे– 'नेपाल स्वतन्त्र राष्ट्र भए पनि हाम्रै निमक खाँदा रहेछौ,' हाँसे– 'विद्युत्को स्थिति के छ?'

वैज्ञानिक प्रणालीद्वारा उत्पादन गरिने पनबिजुलीको नामै सुनेका थिएनन् थापाले, जिल्ल परे।

'कपासखेती छ?'

'छैन।'

हिन्दुस्तानमा कपासखेती लगाएर बेलायतलाई ठूलो आर्थिक लाभ हुन थालेको थियो। त्यसैले सम्राट् जिज्ञासु भएका हुन्, अर्को प्रश्न गरे– 'पेट्रोलियम पदार्थ?'

'छैन।'

'मट्टितेल?'

'छैन।'

जीवनयापनका लागि नभइनहुने वस्तुको अभावमा नेपालीको जीवनचर्या कसरी चल्न सम्भव भयो? छक्क परे सम्राट्, हागसनको मुखमा आँखा तानेर हेरे जुन प्रक्रियाबाट स्पष्ट थियो कि उनी सोध्न लागिरहेका थिए– 'बिनास्थापत्यकला नेपालमा घरहरू छैनन् होला। त्यहाँका बासिन्दा कहाँ बस्छन्, गुफाभित्र कि रूखमाथि?' तर उनलाई उछिनेर हागसन बोले।

उनी संस्कृतका प्रकाण्ड विद्वान् थिए। नेपाली इतिहास लेख्नमा अध्ययनशील, शुभचिन्तक पनि। अतः नेपालको नाक जोगाइदिने अभिप्रायले लिच्छविकालीन सभ्यता र त्यसपछि मल्लराजाहरूको अभ्युदयमा नेपालमा भएको वास्तुकलाको मुक्तकण्ठले प्रशंसा गरे। काठमाडौँलाई कला र मन्दिरको सङ्ग्रहालय भने। तेह्रौँ शताब्दीमा चीन जाने नेपाली कलाकार बलबाहुले चिनियाँ सम्राट् कुब्ला खाँको दरबारमा ठूलो सम्मान पाएको वर्णन गरे।

सम्राट्का साथमा अर्को एउटा अङ्ग्रेज अधिकृत रहेछ, चिनियाँ इतिहासको विशेषज्ञ। उसले बलबाहु उर्फ अरनिको तिब्बतको बाटो भएर चीन गएको सानो व्याख्याद्वारा आफ्नो ज्ञानको ठूलो प्रदर्शन गर्‍यो।

आतिथेयले हात मिलाएर अतिथिलाई हार्दिक बिदा दिए।

थापा बेलायत जानुको कारण थियो त्यहाँका राजारानीले पनि नेपालमा जस्तै मनपर्दी इनसाफ गर्दा रहेछन् कि 'दूधको दूध पानीको पानी' बुझ्न। त्यो पत्ता लगाउनका निम्ति राजदरबार बकिङ्हम प्यालेस जाने आवश्यकता पर्दो रहेनछ। सर्वोच्च अदालततिर लागे। त्यहाँको अदालती कारबाई तीनचार घण्टा अध्ययन गरेपछि मुद्दामामिलाको विषयमा नेपालको जस्तो राजदरबारबाट हस्तक्षेप नहुने देखे। न्यायपालिका र कार्यपालिकाको स्वतन्त्र अस्तित्वको आधारभूत सिलसिला बसेकोमा खुसी भए।

न्यायाधीशहरूले अवलम्बन गरेको प्रजातान्त्रिक नीतिको मुक्तकण्ठले प्रशंसा गरे। मुद्दामामिलाको निपटारा गर्दा अपक्षपाती परम्परा बसेकोमा हार्दिक बधाई पनि दिए।

प्रत्युत्तरमा– 'हामी मनुष्य निमित्तका मात्र हौँ.' येसू क्राइस्टको तस्बिरतिर औँल्याएर बोले न्यायाधीश 'सबै गर्ने-गराउने उनै भगवान् हुनुहुन्छ' बाइबलको म्याथ्यू ७/१२ मा उल्लिखित सुवर्ण नियम उद्धृत गरे, इसाप्रति समर्पणको शिर झुकाए।

क्रिस्चियनको मुखबाट निस्किएको वाङ्मय गुणनावर्णन र भगवद्गीतामा लेखिएको स्तोत्र मिल्दोजुल्दो सुनिन पुग्यो थापाका कानमा। स्वतः उनको दृष्टि नमस्कृत इसामसिहको चित्रतिर गयो। परन्तु त्यो फोटो इसाको नभएर तलेजु भवानीकोमा रूपायित देखे जुन उनले हनुमानढोकाको त्रिशूलचोकमाथि अवस्थित दर्शन पाएका थिए। शङ्ख, चक्र, गदा, पद्मधारी चतुर्बाहु देवी तुलजा।

'हे देवी!' थापाले मनमनै प्राञ्जली प्रश्न गरे, 'प्रभुबाट यहाँका जनतालाई न्याय बक्सिने, धन, सम्पत्ति, शिक्षा, मानमर्यादा, विनय, बुद्धि, विवेक शक्ति। नेपालीलाई खोइ?' अघि थपे– 'हामी अशिक्षित छौँ। खान-लाउन पुग्दैन।' पुनः सोधे– 'अङ्ग्रेज कसरी साख, नेपाली किन कुसाख?'

'त्यसको कारण हो तिमीहरूको राजनीतिक व्यवस्थाको कमजोरी। सामाजिक रीतिस्थिति पनि सङ्कुचित छ, पुरुषप्रधान, जातभात र छातछुतको। त्यसमा आमूल परिवर्तन गरेनौ भने घरका न घाटका हुनेछौ।'

'कस्तो परिवर्तन?'

'यही बेलायतको जस्तो।' देवी लोप भइन्।

थापाले नेपालमा सैनिक प्रशिक्षणको माध्यम अङ्ग्रेजी भाषाबाट सुरु गराएकोमा उनका विरोधीहरूलाई उनीप्रति अङ्ग्रेजी दलालको दोषारोपण गर्ने अवसर मिलेको थियो। अहिले पनि फौजी पहिरनमा छन् जर्नेल। चुस्त, छोटो कोट र दुईतिरको टुप्पो चुच्चो भएको टोप।

अर्को दिन जर्नेल थापा अगुवाका साथ हावाखोरीमा निक्लिएका थिए। तुम्लोत्सवको चौगिर्दाभित्र नग्न क्लब रहेछ। त्यसको विज्ञापनका लागि छानामाथिबाट खड्गेलीमा रुप्से झर्ना झरिरहेको।

क्लब घरभित्रबाट कोइलीको कुहुकुहुको कण्ठध्वनिलाई मात गर्ने ग्रामोफोनको श्रुतिमधुर धुन गुन्जिरहेको। त्यस युगको चमत्कारपूर्ण आविष्कार। बिजुली झिलिमिली। दीप मयूरनृत्य। कतै सेता-नीला चिम दगुरिरहेका, प्रदीप्ति। बल्ने-निभ्ने।

क्लबका सदस्य र तमासेहरू रङ्गशालाको अन्तर्खण्डमा पस्न ताँती लागेको देखेर अङ्ग्रेज अगुवाको मनमा नेपाली पर्यटकलाई त्यहाँभित्र लैजाने लहड चलेछ। दुईवटा टिकट किने, एउटा आफ्ना निम्ति, अर्को नेपालीलाई।

बाहिरपट्टि गोप्य शृङ्गारकोठाहरूको बेग्लाबेग्लै निर्माण थियो, लस्करै। कुनै कोठामा महिला, कुनैमा पुरुष लुगा फुकाल्न लागेका। तिनीहरू नाङ्गाभुतुङ्ग भएर मुख्य हलतिर पसे। अगुवाले पनि त्यसै गरे। जर्नेललाई उनको परम्परा, संस्कृति, मूल्य र मान्यताले निर्वस्त्र हुन दिएन; सङ्कोच माने, धकाए। अर्कातिरभित्र नगएमा त्यस्तोबिघ्न महँगो टिकट खेर जाने। अगुवाले मुस्किलसित प्राप्त गरेको प्रवेशपत्र रद्दीको टोकरीमा फाल्नु पनि बुद्धिमानी देखेनन्। द्विविधामा परे जर्नेल, भित्र जाने कि नजाने? छिनभरको सोचविचारपश्चात् जङ्गी पोसाकसहित अगाडि बढे भित्र पस्न।

द्वारपालले रोक्यो– 'महाशय! भद्र महिला तथा सज्जनवृन्दको नग्न जमघटमा लुगा लगाएर जान तपाईंलाई लाज लाग्दैन?' रङ्गशालाको खापा होड पारेर भित्रको चरिनङ्गन वस्तुस्थिति देखायो।

के पट्ठापट्ठी, के अर्धवयस्क, के बूढाबूढी, त्यहाँभित्रको गजमौरो बिनावस्त्र थिए। शष्प सफाचट।

महिलाको केशमार्जन अत्याधुनिक। मुखमा लिपपोत छैन। बहुसङ्ख्यक पुरुषले दाह्रीजुँगा काटेका, एकाधले पालेका।

कुनै रसिक गाउनमा मग्न। कुनै नाचिरहेका, हातेमालो नाच। कुनै प्लावित जलाशयको मनतातो पानीमा पौडिरहेका। पत्रपत्रिका पढ्नेहरू पनि थिए। धेरैजसो तासमा लट्टू।

खेलुवाको सामुन्ने गिलासभरि पेय। सानो चुस्की, ठूलो रामरमिता। मदिराक्ष नयन। तर मदविकृत कोही छैनन्। मुख लाल। अधरमा मुस्कान। हृदय स्वच्छ, रूपरङ्ग गर्बिलो। सफेद दन्त, कतै स्नेहाङ्कुर भिक्षाटन, कहीँ आमोदप्रमोदको खित्का, कतै काउकुतीको चस्का। कहीँ रोमाञ्चित हाँसोको फोहरा, कतै जैविक चाहनाको थालनी। कतै उग्र रूप। कतै विस्फोटनको घडी।

बेलायत जाडो मुलुक भएकाले त्यहाँका पुँजीपतिहरू धेरै समय न्यून वस्त्र या नाङ्गै घाम तापेर समय बिताउँथे ऐयासीका निम्ति। त्यसै कारण तिनको पुट्ठा र उपस्थमुन्तिरको सम्पूर्ण घेरा सूर्यपाकले डढेको हुन्थ्यो। त्यस किसिमको सूर्यस्नानको लङ्गडो सोखबाट वञ्चित थिए विपन्न वर्ग, किनकि तिनलाई कामको चटारोले पाहार ताप्ने फुर्सद हुँदैनथ्यो। दिनभर दसनङ्ग्रा खियाइमा जोतिनुपर्ने। घामको मुख देख्न नपाउने गरिबगुरुवाको जीउ डढ्ने कुरै भएन। श्वेत देखिने निक्खुर।

त्यसै कारण ध्वाँसे-कालो जाँघ, धनी र गरिब छुट्ट्याउने एक किसिमको पहिचान थियो। विपरीतलिङ्गीका निम्ति आकर्षणको निसानी पनि, किनभने कालो-श्यामल उपस्थ धनवान्को मात्र सम्भव थियो।

त्यही अमिरी कालो ऊरु चिह्नवाला न्यायाधीश मि. मार्क र उनकी धर्मपत्नी त्यहाँ रहेछन्, थापालाई भित्रबाट रङ्गभूमिमा बोलाए– 'जर्नेल, भित्र पाल्नोस्!'

जर्नेल झोक्किए– 'महामहिम! तपाईंहरू पनि यहाँ? लाज लाग्दैन?' आँखा चिम्लिए।

'आच्या!' दोभासेले जर्नेललाई नेपाली बोलीमा सम्झायो, 'नेपालका भारदारहरूको नाटक तालिमे खलङ्गाप्रथाको प्रतिरूप हो यो क्लब। फरक यत्ति छ कि तपाईंहरूको तालिमखानाभित्र घरमूलीको एकलौटी मनमानी चल्छ। बलात्कार पनि। यहाँ त्यसो हुँदैन। यो सार्वजनिक मनोरञ्जनको थलो हो, सरकारबाट स्वीकृति

प्राप्त।' थप्यो– 'यहाँ सबै नागरिक स्वतन्त्र छन्।' मुस्कुरायो– 'धनी हुन् या गरिब। केटा वा केटी।'

न्यायाधीश मार्क बाहिर निस्किएर हाँस्दै दोभासेलाई समर्थन गरे– 'मैले न्यायाधीश भएर अन्याय गरे लाज हुन्छ। तपाईं प्रधानमन्त्री भएर भ्रष्टाचार गरे लाज हुन्छ। तर यो क्लबमा हामीलाई नाङ्गिन लाज हुँदैन।' भने– 'यो मनोरञ्जनको थलो हो दिल बहलाउने। आँखा खोल्नुहोस्।'

बेलायतको निरर्गल स्थितिको समानता, मुक्त समाज, आफूखुसी विचार र स्वतन्त्र जिन्दगी, निजी हक आदि मानवीय स्वत्वका कुरा एक जना विशेष अधिकारवाला नेपाली भारदारलाई मन परेन। उनीहरू काठमाडौँमा आ-आफ्ना घरमा नाचको तालिमे जमाएर नाटक हेर्दथे सुरासुन्दरीको रसास्वादन गर्दै। त्यस्ता चखिला ८० वसन्त पार गरेका खप्पिस बूढाको एकलकाँटे नजरमा यो सार्वजनिक मनोरञ्जनको थलो आवश्यक प्रतीत नहुनु स्वाभाविक हो। छाडावाद ठाने। घृणाले आँखा चिम्लिरहे– 'छिः-छिः ...!'

क्लबकी नाइकिनी रसज्ञ थिई, हँसीदिल्लगीमा निपुण, भनी– 'यो नग्नतावादीको भेला हो। यहाँ स्वास्थ्यलाभ हुन्छ। दिमाग ताजा, हृदय स्वच्छ, मन चङ्गा त कटौरीमा गङ्गा!' ग्राहकको प्यान्ट र लँगौटी थुतेर हातमा लिन सफल भई 'हा ... हा ... हा ...!' खिल्लीको हाँसो उडाउँदै।

अब हुर्मतहारा जर्नेल सरमले नीलो-कालो भए। दुवै हत्केलाले लाज छोपे। उनको अनौठो गतिविधि देखेर अन्य नवागन्तुकलाई आश्चर्य लागेछ, रोकिए उदेकिलो वादविवाद सुन्न, अरू पनि झुम्मिए।

आफ्नो पाहुनाको असभ्य आचरणले त्यहाँको प्रशान्त जीवनपद्धतिमा अशान्ति मच्चिने डर परेछ अगुवालाई। तुरुन्त स्थिति सम्भाल्न बाहिर आए। आफ्नो शब्दकोशबाट छुराजस्तो कटु वाक्य छानेर प्रयोग गरे मुटु छेडिने गरी– 'जर्नेल! दुई हातले शरीर ढाकेर लाज बच्दैन। आफ्नो देशको अशिक्षा, गरिबी र पछौटेपन निर्मूल पार्न सके मात्र लाज बच्छ।' नेपाल गरिबीको रेखमुनि रहेको, नाङ्गो, भोको स्थितिको भन्डाफोर गर्न थाले।

जर्नेल सरमले मरेतुल्य भएछन् तलतिर छोपेको हात उठाएर मुख ढाके, अँध्यारो स्थानतिर हुर्रिए लुक्न।

जताततै चिरागको ज्योति, झलमल्ल उज्यालो। दियालो, तारपिनको तेल र उजेली काठ बलिरहेका। नदेखिने हुने ठाम पाएनन्। तब उनलाई आफ्नो देशको अन्धकारको सम्झना आयो।

म्लेच्छले छोएको नखाने हुनाले भोकाएका थिए, तिर्खाएका पनि। आफ्नो देशको ढिँडो, गुन्द्रुक र फापरको रोटी याद गरे, वाग्मती-विष्णुमतीको निर्मल जल नेपाली हातले दिएको। उनको रुन्चे हाँसो स्वतः मुखबाट निस्कियो– खित ... खित ...।

यही पिन्चे खित्का नै उनको जीवनको अन्तिम हाँसो थियो। सपना पनि आखिरी।





ट्वाक-ट्वाक! बन्द ढोका खटखटाएको आवाजले भीमसेन थापाको निद्रा भङ्ग भयो– 'को हँ?' मुखबाट सिरक हटाए।

'जर्साब! म कुलराज।'

दियो निभेको। मिर्मिर उज्यालो। निःशान्त समय।

बेला अन्दाज गर्ने तरिका थियो दिनमा सूर्यपथ हेरेर, प्रातःकालमा नाडीका रौँबाट। अहिले पनि बखत अडकल्न छामछुम गर्दै झ्यालमा पुगे जर्नेल। खापाबाहिर करपच्छ पसारेर नाडीका रौँमाथि आँखा तिखारे पूर्वप्रभातको अवस्था लख काट्न।

इन्धनको दुर्लभताको कारणले सहरवासी सूर्यास्त हुँदानहुँदै रात्रिभोजन सकेर बिस्तरामा गइहाल्थे। भोलिपल्ट कुखुराको पहिलो डाकमा उठ्ने। यति बेला किसान खेतमा पुगिसके कालीमाटी भिक्र।

दरबार र भाइभारदारका घरमा झ्याल-ढोका बन्द छन्। सबै सुकला।

आकाशमा तारा र पृथ्वीमा जूनकीरीको पिलपिलसिबाय केही देखिँदैन।

टुँडिखेलमा स्याल कराएको सुनिन्छ – हुइयाँ ... हुइयाँ ...। कुकुर भुकेको, कुखुरा बासेको, सदर जेलबाट 'खबरदार!' को चेतावनी।

थापाको चुङ्गाको खल्तीमा भुरो र चकमक थियो। ती आलोक-उपकरण प्रयोग गरेर दीपिका बाले।

कोठा उज्यालो भयो। भित्तामा लुगाफाटो भुन्डिएका। त्यसको मुन्तिर खराउ, त्यही पाउलो लगाएर जर्नेल ढोकामा गए। आग्लो सारेर फग्लेँटो खोले।

कुलराज मनको त्रास व्यक्त गर्न आँखाभरि नक्कली आँसु थुपारेर भित्र पस्यो त्रासको जिब्रो बाहिर निकाल्दै।

‘किन कुलराज?’ जर्नेल खाटमा फर्किए।

कुलराजको भयग्रस्त अनुहार देखेर अघिल्लो दिन श्री ५ बाट थपडीको सानले बोलाइबक्सेको वसन्तपुर घटनाको स्मरण भएछ, सोधे– ‘कुले! तँलाई हिजो महाराजाधिराजबाट किन बोलाइबक्सेको रहेछ? कान्छी बड्‌डामहारानीको पनि त्यहीँ झ्यालमा झलक्क दर्शन पाएको जस्तो लागेथ्यो। म यतातिर डोरिएँ। दर्शन गर्ने मौका पाइनँ। के हुकुम भयो?’

‘खै! मनले भनूँ-भनूँ जस्तो लाग्छ, मुखले बोल्न सक्दिनँ,’ रुन्चे स्वर पार्छ कुलराज। बरर आँसु झार्‍यो। खाट नजिक बसेर थुनुवाका गोडा समात्यो– ‘पहिले म पनि पाँडे भएको नाताले तपाईंको विरोधी थिएँ। त्यसमाथि दाइभाइको मन राख्नका निम्ति तपाईंलाई हातपात गर्नुपरेको हो। नत्र दरबारभित्र पस्न नपाइने,’ थप्यो– ‘त्यो तपाईंलाई थाहै छ।’

‘त्यो त हो। नोकरीमा बसेपछि बिँडो थाम्ने काम गर्नैपर्‍यो।’

‘अब त घोर अत्याचार हुन लागेको देखेर मेरो मन फर्केको छ,’ साधु बिरालोले चेपारे कुरा झिक्यो। ‘आफ्ना बन्धुबान्धवसँग विद्रोह गरौँ जस्तो।’

‘किन?’

‘यस्तै अतिचारको परम्परा रहेमा हामी कर्मचारीको भविष्यको के निश्चित हुने भयो र!’

‘कस्तो अतिचार?’ थुनुवाको विचारशील मुद्रा भयो– ‘ममाथि अझ अन्याय हुन बाँकी छ? खुलस्त भन् न कुले!’

‘भन्नै नसकिने कुरो छ। नभने पनि हुँदैन। म त्यस्तो धर्मसङ्कटमा परेको छु।’

‘कस्तो?’ आफ्नो घोक्रो रेटिने भाउ देखाएर– ‘हद होला ज्यान जाने कुरा।’ वाक्य अन्त गरे बूढाले– ‘म मर्न डराउँदिनँ, भन् कुले!’

‘मर्ने कुरा मामुली हो। अजम्बरी कसैले पाएको छैन। विधिविधानअनुसार आयु सकिएपछि यहाँ बस्न पाइँदैन। यही एक बारको चोलामा नरपशुले समेत गर्न नहुने काम गर्ने जिम्मेवारी आइलागेपछि बाँचेको के सार्थकता!’ अँध्यारो मुखाकृतिले फेरि बोल्यो– ‘मलाई पनि अब बाँच्ने मन छैन।’

‘किन? कुले, के त्यस्तो अनैतिक व्यवहार आइपर्‍यो तँमाथि?’

हाप्सिलो करायो विष्णुमती गडतीरमा। स्यालको हुइयाँ ... हुइयाँ ... सुनियो बाँसको झ्याङमा। सुनधाराको पेटीमा कुकुरहरू भुके एकोहोरो– घ्वाङ-घ्वाङ।

यी चारखुट्टेको भुकाइसित स्वर मिलाएको पाराले दुईखुट्टे धोकेबाज कुकुर भुकाइ गर्छ– 'जेठी महारानीले स्वर्गवासी कान्छा युवराजलाई सम्झेर छाती पिट्दै रुन लागिबक्सेको थियो। पछि बम्कँदै तपाईंलाई तथानाम गाली गरिबक्सियो। तपाईंविरुद्धको फैसला सदर भयो जसअनुसार अहिले बिहान तपाईंकी मुखिनीलाई टुँडिखेलमा नाङ्गै ल्याएर सिपाहीहरूलाई भण्डारा दिने रे। त्यही पनि तपाईंको नजरसामुन्ने।' ढोँगी अघि थप्छ– 'त्यस्तो अनुचित काम कार्यान्वयन गर्नमा म खटिएको छु।'

'के रे?' थापा सपेराको साँपले फणा फुलाएझैँ उठे– 'मेरी कान्छीलाई कुनै तिलङ्गनाले हात हाल्दैन।' सधैँ वात्सल्य प्रदान गर्ने कान्छी मुखिनीउपर स्नेही सिपाहीहरूको कुदृष्टि पर्न सक्ला भन्ने ठान्दैनन् बूढा, कड्किए– 'बरु ती पल्टनियाँले रणजङ्गको टाउको फोर्लान्!'

'रणजङ्गको खप्परमाथि श्री ५ राजेन्द्रको शिर रक्षाकवच भएर बसेको छ। त्यस पवित्र माथभित्र पृथ्वीनारायण शाहको रगत छ। गोरखनाथको आशीर्वाद!' ढोका थुनेर कानेखुसी गऱ्यो मुसुमुन्द्रेले–'यो देश अबला, दुःखीलाई मदत गर्ने होइन। बरु अरूको कमजोरीमाथि फाइदा उठाउन खोज्ने षड्यन्त्रकारीले भरिएको मुलुक हो। यहाँ कसैले गुण देख्दैनन्। सबै शक्तिका पुजारी छन्। महेन्द्रमल्लीमा बिक्रे। स्वार्थैस्वार्थले भरिएका। बेइमान, विवेकहीन ...।'

कुलेको बनावटी कर्णेजपमा विश्वास पऱ्यो थापाको, विचलित मनले हडबडाएर– 'अँ ... अँ, अब मैले के गरे बेस होला?' काँपेको स्वरले राय मागे– 'स्वास्नीको सतित्व हरण गरिएको कसरी हेर्नु?'

आडम्बरीसित पूर्वनियोजित वैचारिक युक्ति 'मुखमा राम-राम बगलीमा छुरा' थियो। घोरिएको ढोँग गरेर मुख खोल्यो– 'मेरो विचारमा तपाईं भाग्नु बढिया। मुखिनीको हुर्मत लुटिएको देखाएर तपाईंको हृदयको घाउमा नुन-खोर्सानी-धूलो छर्न खोजेका हुन् यी पापी रणजङ्गप्रभृतिले तपाईंलाई तड्पाई-तड्पाई मार्न। तर तपाईं गायब हुनुभएको खण्डमा मुखिनीले त्यस्तो दानवीय अत्याचारको सामना गर्नुपर्नेछैन, किनकि तिनको रिसइबी तपाईंसँग हो, मुखिनीसँग होइन।'

हतारिएको नाटक गर्‍यो– 'चाँडो उम्कनुहोस्।' फेरि बोल्यो– 'बिहान सबेरै मुखिनीलाई टुँडिखेलमा नाङ्गै ल्याउनू भन्ने हुकुम भएको छ। अनि तपाईंलाई।'

कपटीको कोखमा दाँत देखेनन् भीमसेनका बूढा आँखाले। उनलाई यस मामलामा कान्छी महारानीको प्रभावबाट सफाइ पाउने ठूलो आशा थियो। अहिले चकनाचुर भयो, स्नायुप्रणाली खलबलियो। जिब्रो सुक्यो। शरीर काँप्यो। निधारभरि पसिना आयो। रिँगटा लाग्यो। बाग घुमेको अनुभव गर्न थाले। धरहरा भत्किएको। सुनधारा घोप्टिएको।

आफूलाई श्री ५ जेठी बडामहारानी साम्राज्यको आकाङ्क्षाको बाटोमा तगारो बनेको ठान्दछन् थापा। साथै श्री ५ कान्छी बडामहारानी राज्यलक्ष्मीको सुरेन्द्रलाई पदच्युत गरी रणेन्द्रलाई युवराजाधिराज घोषित गराइने आशाको केन्द्रबिन्दु। थापा खलकको प्रतिष्ठाको आधारशिला। पाँडेहरूका बापबैरी।

यसरी नेपालको सङ्कटकालीन राजनीतिक जीवनमा त्रिदोष भएर बाँच्नु उचित सम्भेनन्। उनको अस्तित्व लोप भएमा जेठी महारानीको षड्यन्त्र सफल हुने, अनि कान्छी महारानीलाई नयाँ परिस्थितिसित सम्झौता गर्न बाध्य पर्ने। एवंरीतले थापाहरूको पनि पाँडेहरूसमक्ष त्वं शरणम्को बानी बस्ने, जसरी विगत कालमा भू. पू. अमात्य दामोदर पाँडेको वधपश्चात् पाँडेहरूको तुजुक सेलाएको थियो। थापाहरूको सामुन्ने घुँडा टेकेर ३२ वर्ष त्राहिमाम जीवनयापन गरेका। यसो भएको खण्डमा नेपालको राजनीतिले मेलमिलापको मोड लिनेछ। दरबार सौतेनी दागादागबाट मुक्त। थापा र पाँडेबीच आपसी सहिष्णुता कायम हुने। नेपालका लागि सही दिशाबोध।

यस्तो शान्तिमय भविष्यका निम्ति उनी भाग्न मात्र होइन, आत्महत्या गर्नेतिर ढल्किए।

अपहत्याको मनसुवा उनको चेहरामा प्रतिविम्बित देख्यो पाँडेले। नेल-हतकडी काटिदियो। आफू कार्यसिद्धिको आशा बोकेर बाहिर निस्कियो।

अब आयुर्दा सकिने मिति नजिक आएछ भीमसेन थापाको। झ्यालबाट उनलाई लिन अदृश्य यमदूत भित्र पस्यो।

मुड्कीले हानेर झ्यालको ऐना फुटाले उनले। त्यसको ठूलो टुक्राले घाँटी रेट्न थाले। गला क्षतिग्रस्त भयो। रगतको भल बग्यो। तर वृद्ध घाँटीको छाला धेरै

झोलिएकाले चाँडो सेरिन सकेन। भित्तामा रगतको छिर्का पऱ्यो। भुइँमा दह जम्यो। बत्ती निभ्यो।

भुइँमा लडेर उनी छटपटिन थाले।

यो हृदयविदारक खबर राजदरबार पुग्यो। प्रधानमन्त्री रणजङ्ग पाँडे र अन्य पाँडे भारदारहरू मनमनै 'हर्क डोली चढी लर्क' को स्थितिमा आए सहानुभूति प्रकट गर्न।

रङ्गनाथ गुरुज्यू साँच्ची विह्वल थिए।

श्री ५ महाराजाधिराज राजेन्द्रको पनि पदार्पण भयो। छातेको बुईमा चढेर भऱ्याङ उक्लिन थाले।

केही वर्षपहिले रिकुटे हुन मुगलान भासिएको जङ्गबहादुर फौजका निम्ति अयोग्य ठहरिएर घुम्दै-फिर्दै सिमला पुगेको थियो माथवरसिंहको प्रभावद्वारा कुनै आयमूलक धन्दा समात्न। तर लेखापढी नभएकाले उसको आशा निराशामा परिणत भयो। लेप्रेकान लगाएर नेपाल फर्कियो साथमा माथवरसिंहले राजालाई चढाई पठाएको बिन्तीपत्रसहित। उक्त प्रार्थनापत्र राजाको बाहुलीमा हस्तान्तरण गर्न दिनहुँ दरबार धाउँथ्यो। मौका परेको थिएन। संयमसाथ सुहाउँदो समय पर्खिरहेको थियो।

अहिले पनि बागको मूल द्वारमा कडा सुरक्षा छ, पाँडे भारदारबाहेक अन्य छिर्न नपाउने। पत्रवाहक बाहिरै रोकियो। यो रोक्का असह्य भएछ जङ्गबहादुरलाई। त्यति मात्र होइन, भीमसेन थापाले आत्महत्याका निम्ति सेरिएको अनिष्ट खबर घुइरो-घुइरो उसका कानमा परिसकेको थियो। साथै आफूले ल्याएको बिन्तीपत्र राजाको बाहुलीमा परेपछि थापाको राम्रो औषधोपचार हुने र मर्नबाट बच्नेमा विश्वस्त पनि। तर मौसुफको जुनाफमा कसरी पुग्ने?

'आगलागी झुपडी डेढ घडी भद्रा' होला भन्ने ठानेर धेरै सोचविचार गरेन। मुख गलबन्दीले छोप्यो। छद्मवेशमा बागको पर्खाल नाघेर क्याम्पाभित्र पस्यो। एवंरीतले उफ्रेर मूल घरको दुई तलामाथिको झ्यालबाट बैठकमा छिऱ्यो। लमकलमक लम्कँदै राजालाई पत्र टक्ऱ्यायो। फरक्क फर्केर भाग्यो।

'को हो त्यो?'

खल्याङबल्याङ हुँदै थियो। कसैले पत्रवाहकलाई चिने, धेरैले चिनेनन्।

राजाले रङ्गनाथ गुरुज्यूलाई चिठी दिए– 'ल पढ्नोस्।'

'चरणकमलेश!

'सेवक माथवरसिंह थापाको दण्डवत् सेवापूर्वक निवेदन पत्रम्। यहाँ कुशल, त्यहाँ कुशल भया। हाम्रो सबै बातको सम्भार होला। उप्रान्त नेपालबाट आएका चिठीहरू पढ्दा र मानिसहरूका कुरा सुन्दा फेरि जालसाजी र चुक्ली, असत्य, धोका, अन्याय, विवेकहीनता, निष्ठुरता र नीचताको आँधीबेरी रुमल्लिएर उथलपुथल भइरहेको यस सेवकलाई यतैबाट प्रत्यक्ष हुन्छ। यस्तो महाप्रलयको समयमा शुद्ध बाटो पहिल्याइबक्सन सरकारलाई साह्रै कठिन भइरहेको होला। त्यहाँ निःस्वार्थ मानिस चल्न-बोल्न सकोइनन्। यो एउटा ट्याढा बसिरहेको देशभक्त सेवकलाई नबिर्सिबक्सेला। चाँडो निर्णय नबक्सेला।

'पुराना सोझा बजिर भीमसेन थापाले अन्यायमा पर्नु नपरोस्। निरपराध भीम मल्ललाई भएजस्तै सरकारलाई पछुतो होला। हुकुम हुनासाथ पाउमा आएर यो माथवरसिंह दूध र पानीलाई छर्लङ्ग छुट्ट्याएर सरकारलाई नजर गराउनेछ। ज्यानको अलिकति पनि पर्बाह नगरेर यो सेवक मरेर पनि सत्यलाई बचाउनेछ। विवेकी सरकारमा अधिक के बिन्ती चढाउँछ। पाउकै आशामा छु।'

राजेन्द्र– 'गुरुज्यू! म त्यसलाई झिकाउँछु।'

सवारी भीमसेन थुनिएको छिँडीमा प्रवेश भयो। त्यहाँ रगताम्मे थापा खाटमाथिको ओछ्यानमा सुताइएका, विचेत।

राजा र भृत्यवर्गको आगमनले उनको होस आएछ। आँखा उघारे। अब मुखिनीको हुर्मत नलुटिनका निम्ति बिन्तीभाउ गर्नुपर्ने हो। त्यसबारे ध्यानै दिएनन्। नेपालमा जननिर्वाचित प्रतिनिधिद्वारा चलाइने राजतन्त्रात्मक प्रजातान्त्रिक पद्धतिको सिफारिस गरे। आफ्रो शासनकालमा त्यसो नगरेकोमा भूलका निम्ति माफी मागे, दुई हात जोरे।

घोक्रो प्वाल परेकाले उनको वाक्य प्रस्ट फुटेन। केवल क्षमायाचनाको जम्ला हात देखियो, मुखमा लाचारी र घाँटी रेटिएको धामा।

'सुन् रणजङ्ग! भीमेले के भन्न खोजेको?'

साबिकवालाको ओठनेर कान थापे बहालवालाले। सानो स्वर सुने– 'रणजङ्ग! तिमी-हामीले अवलम्बन गर्दै आएको राजनीतिक प्रणालीमा आमूल

परिवर्तनको आवश्यकता छ। अन्यथा तिमीलाई पनि भविष्यमा मलाई जस्तै पछुताउनुपर्ला। यथाशीघ्र बेलायतको जस्तो बहुदलीय व्यवस्था स्थापना गराउनू।'

चेतनात्मक उपदेश रणजङ्गका निम्ति भालुलाई पुराण थियो। सुन्न मन गरेनन्, राजातिर दृष्टि दिएर बिलकुलै भूट उत्तर चढाए– 'कान्छा युवराजलाई विष खुवाएर मारेकोमा माफी पाऊँ भन्छन्।' थपे– 'यिनको कायलनामामा पनि त्यही बेहोरा बिन्ती चढाएका थिए।' पुनः बोले– 'अन्त्य अवस्थामा बूढाको दोषी आत्मा थकथकाइरहेछ सरकार!'

सरकार एक कदम वृद्धतिर अघि बढेर– 'भीमसेन! तँलाई माफी दिने विचारले मैले आफैँ मुद्दा हेरिदिन्छु भन्न पठाएको हुँ कुलराजमार्फत तँकहाँ। कान्छी महारानीको धन्दा मान्नुपर्दैन भन्ने सन्देशको पनि तैँले आशय बुझ्नुपर्ने हो। किन यसरी निराश भएर पलायनोन्मुख कदम अपनाइस्?'

भीमसेनको ओठ चल्यो। जुँगा हल्लियो तर बोली अश्रव्य, बर्र आँसु झारे। त्यो नेत्रजल उनको आफ्ना निम्ति थिएन। राजभक्तिका निम्ति बगेको थियो। वर्तमान अधिनायकवादी शासनप्रणालीले राजालाई दिशाहीन बनाएको, भुलभुलैयामा पारेकोमा रोएका थिए। १२५० ए. डी. मा बेलायतका जनताले राजा जोनलाई पक्रिएर अधिकार प्राप्त गरेको घटना सुनाएर त्यहाँ उपस्थित सबैलाई सचेत गराउन चाहेका। परन्तु बोल्न सकेनन्, नयननीर बगाइरहे।

तत्क्षण गुरुज्यू रङ्गनाथले थापाको नजिक घोप्टिएर कान थापे– 'के बिन्ती चढाउन खोज्नुभएको काजी?'

काजीले भौगोलिक दृष्टिले सानो बेलायतले ठूलो प्रगति गरेको कारण त्यहाँको राजनीतिक प्रणाली, देशप्रेम र राजभक्तिको व्याख्या गर्न पनि चाहेका थिए, तर उनको घाँटीको प्वालबाट ह्वार-ह्वार आवाजबाहेक अरू केही कर्णगोचर छैन। आँसु दुई गालाको पाटो हुँदै छातीमा एकनास खसिरहेको।

'कसैले थापाको मनमा चोट पर्ने कुरा सुनाए होलान्, त्यही मनखतबारे सरकारको पाउमा गुनासो पोख्न खोज्नुभएको जस्तो बुझिन्छ,' जाहेर गरे गुरुज्यूले, साथै पटुकाको फेरले आफ्नो आँसु पुछे। अनि थापाको।

वास्तवमा रणजङ्गले अघि अवगत गरेको बेहोरा साँचो थिएन। गुरुज्यूको कपोलकल्पित कुरा पनि सत्यतादेखि टाढा। यथार्थमा यो हो कि भीमसेनले

राजालाई बेलायतको जस्तो जनताले जनताका निम्ति जनताद्वारा गरिने प्रजातान्त्रिक शासनव्यवस्थाको हुबहु अनुकरण गर्नुपर्ने परामर्श चढाउन खोजेका थिए, तर जति प्रयत्न गर्दा पनि बोली भने बाहिर निस्केन।

पुनः प्रधानमन्त्री पाँडेले निहुरिएर थापाको ओठनिर कान थापे निकै गढेर। यस पल्ट पनि कुचक्रीले राजामा भूटो बेहोरा बिन्ती चढाए– 'सरकारहरूलाई सराप्छन्। के सुन्नु यस्ता आत्मघातीको कुरा!' हात जोरे– 'यहाँ राज गरिबक्सनु उचित पर्दैन। जाऊँ सरकार!'

नौ दिनपछि थापाको देहावसान भयो। उनको अस्थि रीतिअनुसार विसर्जित हुन दिइएन। काग, कुकुर, गिद्ध र स्यालले लुछ्ने गरी मिल्काइयो।





# १

भोलिपल्ट पुनरागमन गर्ने आश्वासन छोडेर त्रिशूलीघाटबाट महाजन रामकृष्णसँग जङ्गलतिर गएको वीरनरसिंह आजसम्म नफर्केकाले रनभुल्लमा छे सेर्बू, ओइलाएकी, फुङ्ग। प्रेमीलाई मनमन्दिरभरि सजाएर सधैँ नदीकिनारतिर आउँछे उसको प्रतीक्षामा।

कहिले दिनको दुई पटक, बिहान र बेलुकी। कहिले तीन फेर पनि। कहिले दिनभर बस्तुभाउ चराउने निहुँले त्यतै अलमलिइरहने। यस्तो बाटोहेराइमा स्याँठ र सिरेटो खानु मात्र हुन्छ। प्रतीक्षितको नामनिसाना छैन।

वियोगको वेदनामा छटपटाउँदाछटपटाउँदै निराश, उदास र नियास्रा दिनहरू बित्दै गए। रुचि हरायो, जाँगर मऱ्यो। कुन्ताकी पातली दारकी, झन् दाउरी भई। न बाबुको घर फर्किन मन लाग्छ, न मावल बस्न। बाँच्नुभन्दा मर्नु निको ठान्छे। जीवन निरर्थक। दिक्दारीमा बग्दाबग्दै एक उच्चाटलाग्दो साँझ नदीमा हाम फालेर सांसारिक लीला अन्त्य गर्ने टुङ्गोमा पुगी।

चोलो काढी। पटुका फुकाउन थाली।

त्यति बेला उसको अन्तरात्माबाट पुनीत परामर्श निस्कियो– 'सेर्बू! तँ एउटी साहसी पुरुष जसले त्यस्तो खोँच एकै टप्काइमा फड्कन सक्यो, जसले बघिनीलाई एक्लै धराशायी तुल्याएर तेरो ज्यान जोगाइदियो त्यस्तो नरकेशरीकी प्रेमिकालाई कायर मरण सुहाउँदैन। पराक्रमीकी पत्नी भएर बाँच्नुपर्दछ। त्यो नरवीरको लाससँगै जलेर भस्म-खरानी हुने सती नारी होस् तँ। आत्मघातीको मरणोपरान्त नरकवास हुन्छ। रौरवकुण्डमा तेरो स्थान छैन।'

नराम्रो सपनाबाट बिउँझेजस्तो झसङ्ग भई सेर्बू। तुरुन्त मनको कुमति आफलेर चोलो लगाई। छाती छोपी। मावलीतिर फर्किई। प्रेमीसित पुनर्मिलन हुने आशाको बलियो डोरीमा घिसारिँदै।

मावल पुगेर उद्वेगरहित चित्तवृत्तिमा परिस्थितिको सिंहावलोकन गर्दा उसलाई मायालुले माया मारेको प्रथम कारण भाषा-समस्या देख्छे। दोस्रो आफ्नो पाखेपना। तेस्रो गरिबी।

तीनै कमजोरीबाट मुक्ति पाउन सकिने सिर्जनात्मक परिवेश त्यहाँ नभएको होइन। केवल लगनशील परिश्रमको खाँचो।

मामा दोर्जे तामाङ राष्ट्रभाषामा दखल भएको, सेर्पा र तामाङ जातिको पुरोहित। छिमेकमा फाट्टफुट्ट बाहुन, छेत्री, कामी, दमाई। मामाको छोरो शेरबहादुरले सेनामा जागिर खाएको, घर्तिनी स्वास्नी ल्याएको, यस्तो खस दिगन्तरमा सेर्बूलाई नेपाली सिक्न मुस्किल परेन। त्यहाँ तन्त्रमन्त्र र चरकसंहिताको मुद्रित हस्तलिखित भोजपत्र, तामा, धातु र कागजका एक दर्जनभन्दा बढी पुस्तक थिए। सिउसिउ राजाका पालादेखि थन्किएका। कुनै च्यातिएका, रङ्ग खुइलिएका, आगोले डढेका, कीराले काटेका, मुसाको मलमूत्र परेका। ती नष्ट पानालाई स्याहारेर सेर्बूले जतनसित थन्काई। आवश्यकता परेको बेलाबखत झिकेर दिलोज्यानले रट्न थाली। फलस्वरूप उसको बुद्धिको प्रबलता क्रमशः तिखारिँदै आयो। ज्ञानचक्षु खुल्न थाले। आत्मविश्वास बढ्यो।

प्रेमीको घर काठमाडौँमा भएकाले सहरको चालचलन, राजनीति, सामाजिक जीवन, भौगोलिक स्थिति जान्न आवश्यक ठानिछ। जिज्ञासु भई।

उपर्युक्त जिज्ञासा परिपूर्तिका लागि मामाकहाँ झारफुक गराउन आउने बुद्धिजीवी र त्यस गाउँको बाटो भएर पशुपति-मृगस्थलीमा शतबीज छर्न जाने तीर्थालुसित सम्पर्क राख्न थाली। तिर्जा उठाउन आउने कम्पूहरू पनि सूचनाप्रद सूत्र हुन्थे।

यस्ती बुभुत्सुलाई नेपालको राजधानी काठमाडौँ भएको थाहा पाउन बेर लागेन। नेपाल सर्वोच्च हिमशिखर भएको उत्तरमा भोट र दक्षिणमा भारतबीचको पूर्व मेचीदेखि पश्चिम महाकालीसम्म। भौगोलिक रूपमा रहेको सार्वभौमसत्तासम्पन्न राष्ट्र भन्नेसमेत बुझी।

केन्द्रीय सदरमुकामको मुख्य बजारको नाम असन, इन्द्रचोक। त्यहाँको भाउ-बेसाहा, कमाराकमारी किनबेचको दर पनि कण्ठ पारी।

राजदरबार हनुमानढोकामा भएको, फत्तेजङ्ग चौतरियाको घर नारायणहिटीमा, भू. पू. प्रधानमन्त्री भीमसेन थापाको बाग सुनधारामा। माथवरसिंह थापाको काठमाडौँको लगनटोलमा। जर्नेल गगनसिंहको ढोकाटोलमा भन्ने पनि उसका कानमा परिसक्यो। यतिका सूचनाप्रद ज्ञान हुँदा पनि उसले खुद आफ्नो प्रेमीको क्षेमकुशलबारे सोधपुछ गर्न सकेकी छैन। कारण प्रथम भेटमा उसले नेपाली भाषा जानेकी थिइन। हातको सानले नाम सोध्न मिलेन या मायापिरतीको उमङ्गमा त्यो प्रश्न गर्न बिर्सिई। अथवा बघिनीको आक्रमण र जनै चुँडिएको झ्याउ आइलागेकाले पनि नसम्झेकी होली।

सेर्बूको प्रेमीले आफ्नो बोलाउने प्रख्यात नाम जङ्गबहादुर नभनेर चिनामा लेखिएको वीरनरसिंह बताएको थियो, कसैले नसुनेको। अनाम प्रेमीको कुशलमङ्गल कसरी सोधपुछ गर्न सक्थी सेर्बू। तैपनि खोजखबर लिन सजग छे, चारैतिर भौँतारिइहेकी।

वीरनरसिंह र आफू सँगसँगै बुङताङ झरेको दिनदेखि ऊ बाबुको घरमा बस्ने गरी फर्केकी छैन। कहिलेकाहीँ चाडपर्व खास गरेर ह्लोसारमा झुलुक्क मुख देखाउन लेक उक्लन्छे। अन्यथा मावलमा डेराडन्डा जमाएकी, लेखपढमा एकतान।

उसको मामाले जीवनयापनका निम्ति अँगालेको मुख्य पेसा हो झारफुक, साथै वनस्पतीय औषधी बनाउने काम तर सानो अनुपातमा। त्यो लिसेटाङे धन्दालाई भरथेग गरेर भागिनेयीले वीरनरसिंहको सल्लाहबमोजिम चालू विनिमय व्यवसायमा खडा गरिदिई। फलतः आजभोलि दोर्जे तामाङ 'वैद्यराज' नामक शब्दले प्रख्यात हुँदै आएको छ। सेर्बूले पनि केटाकेटीको जन्तर, स्त्रीरोगको औषधी, बुटी बनाउने र उद्योगबाट आर्जेको पैसाले एउटा माहिलो डोको किनेर बाबुको घरमा सट्टाभर्ना तिर्न पठाइसकी जुन बघिनीको मुख पर्दा खोलाले बगाएको थियो।

त्यस स्मरणीय घटनापछि सूर्यनारायणले समयको चक्र धेरै पटक फिराइसके। दिनपछि रात। रातपछि दिन। महिना, वर्ष बिते। चार साल गुज्रे।

अहिले सेर्बू हातमा अमखोरा र काखीमुनि खाजाको पुन्तुरो च्यापेर मामालाई चमेना पुऱ्याउन औषधीभट्टीतिर जान लागेकी रहिछ सुरुसुरु।

बाटो बगर र जङ्गलबीच नदी काँठबाट दगुरिरहेको। खोरियामा फापर रातम्मे, कतै उखुबारी।

खोलानाला-खहरे सुसाइरहेका– छङछङ। ढुङ्ग्यान खेतमा छिपछिप पानी जमेको।

अल्लेरीहरू भेलले धोद्रो पारेको खेतमा माटो भर्न लागेका। कोही जोत्न। कोही ब्याड बनाउन।

सबै किसान कर्मको पाखुरा बजाइरहेका। जग्गाधनी खर्कको डिलमा मडिया माडेर बसेका, खेतालालाई काममा प्रवृत्त गराउन हप्काइरहेका– यसो गर्, उसो गर्।

त्यस्तो व्यस्ततामा पनि त्यहाँ उपस्थित को तलसिङ, को मोही, को कमारो, को मालिक, सबैको नजर सेर्बूमाथि पऱ्यो।

आयमूलक धन्दाबाट आमदानी वृद्धि हुन थालेदेखि उसको स्थिति कायापलट भएको छ। अन्य गाउँलेजस्ती फोहोरी, मयलयुक्त देखिन्न। दिनहुँ नुहाउने, कोरीबाटी, सफासुग्घर, सुकिलो। नेपाली बोल्न सिपालु।

रातो मुगिया छापको मखीबुट्टे गुन्यू लगाएकी। यसलाई जोडा मिल्ने गुलाफी चोलो। नैनकिलाँठको पटुका। कलेजी रङ्गको घलेक भिरेकी। कपडाको चट्टी जुत्ता।

सहरिया जीवनशैलीले गर्दा त्यहाँका गाउँले आइमाईहरूको बीचमा 'काकमध्य बको यथा' देखिएकी। साथै एकडेढ वर्षपहिलेको अपेक्षामा निकै जीउ लागेकी, मोटीघाटी, हलक्क बढेकी, पुट्ठा कसिएको, मदमस्त आँखा, चुच्चो छाती, झीनो कम्मर, व्यक्तित्वले लबालब।

भनिन्छ– स्त्रीजातिमा सौन्दर्य वरदान हो, तर त्यो दैवीय देन पनि पिछडिएको समाजमा श्रापसिद्ध हुने रहेछ। त्यस अनिष्ट वचनको ज्वलन्त उदाहरण भएकी छ सेर्बू।

गाउँका ठूलाठालू र अख्तियारवाला भनाउँदाबाट उसको अस्मिता लुट्ने भरमग्दुर दुष्प्रयास भइरहेको छ।

कोही जुँगामुठे फकाउने। पोटवाल लोभ्याउने। तिघ्रे धम्क्याउने। एकान्त परेमा जबर्जस्तीको हात बढाउने।

परन्तु उसको बन्दव्यापारमा सहयोगका निम्ति लम्काउने एक डुँडुलो पनि छैन। बरु ठग्ने।

जताततै ईर्ष्यालु आँखा, खुट्टा तान्ने मनोवृत्ति। तसर्थ लोग्नेमान्छेको संसर्गसित घृणा गर्छे आजकाल। हम्मेसी बोल्दिन। चोखो ठट्टासमेत मन मपराउँदिन। झोक्किन्छे। मूढ, पेलाहालाई थुक्के, ढुङ्गामुढा गर्ने, झटारो हान्ने।

आज शिर फुटाइमाग्ने पालो यहाँ उपस्थित रामदास कटुवालको आएछ। उसले 'कामकुरो एकातिर कुम्लो बोकी ठिमीतिर' गऱ्यो। खेतीपातीको चटारोमा संलग्न हुन छोडेर चितुवाले मृग देखेको पाराले कृशोदरीमाथि लालची आँखा गाड्यो। जुरुक्क उठ्यो। क्षणभरको दृष्टिपातपश्चात् त्यहाँ भएका आसेपासेमध्येको एक जनालाई विश्वासका साथ अरायो– 'ए टुल्के! हेर्, सेर्बू त च्वाँक भइछे नि! रहरलाग्दी। कहाँ जान लागेकी हो? सोध्-सोध्।'

दासत्वको मैलो खोलामा बगेका थिए गाउँले। जीहजुरीको परम्पराअनुसार चम्चागिरीले उचित-अनुचितको विचार नराखेर मालिकको अरोट मात्र तम्सियो– 'हैन बहिनी! कता जान लागेकी?' स्थानीय बोलीमा।

'अगुल्टोको मारमा परेको कुकुर बिजुलीदेखि तर्सिए' झैँ सेर्बू डराई। त्यसमाथि पनि अचेल राष्ट्रभाषाबाहेक अरूमा दोहोरो कुरा गर्दिन। अहिले तामाङ बोली नबुझेको बहाना गरेर गमनगति तीव्र पारी, फटाफट।

त्यो बेवास्ता कटुवालका निम्ति ठूलो आकर्षण थियो। सानो ललकार पनि।

एउटी केटी मान्छेबाट प्रतिकार नआउनेबित्तिकै हतोत्साही भएर लुत्रुक्क पर्नुपर्ने व्यक्तित्व होइन कटुवाल रामदास। गाउँको अधिकारी हो र ठूलो हैकमवाला। अघि सरेर– 'ए सेर्बू!' स्वर सुनायो– 'तँ कता जान लागेकी? आज नदीमा बाढी आएको छ, बगाउला। हामी मदत गर्न आउनुपर्छ?' आँखा झिम्कायो।

सवालमा प्रयोग गरिएको राष्ट्रिय वाङ्मय सेर्बूको प्रेमीले बोल्ने वाणी हो नेपाली। त्यो उच्चारित मातृभाषा राष्ट्रिय एकता, समानता र भाइचाराको प्रतीक भएको उसलाई ज्ञान भइसकेको छ।

प्रियतमको सम्झना आयो। त्यस्तो आत्मीय अभिव्यक्ति अनुत्तरित छोड्न मनासिब ठानिन। कटुवालको आँखाझिम्काइ पनि देखेकी थिइन। निकै पर

पुगिसकेकी पनि रोकिई। राष्ट्रभाषाको पावन स्वरतिर फर्केर हेरी उत्तर दिन। प्रश्नकर्ताका दुराचारी आँखामा कामोद्दीपक प्यास देखी, अधरमा निरर्थक मुस्कान। बोल्न मन पराइन। तैपनि अडिइसकेकी र तालुकदारलाई सामाजिक मर्यादा गर्नका निम्ति बाध्य भई– 'मालिक! मलाई नदी तर्न पर्दैन। त्यहाँ वैद्यकोठापुँडो खाजा पुऱ्याउन हिँडेकी,' कदम बढाई।

आज खेतालाहरूका निम्ति विशेष दोपहरेको इन्तिजाम थियो। जाँड, पानी, फापरको रोटी, गुन्द्रुक, भैँसीको मासु, मोही र भुटेको मकै। यस्ता स्वादिष्ट परिकारको सूचना दिँदा पनि सेर्बूले टेरपुच्छर लगाइन। टाढा पुगी, वनको थुम्कोले छेकिई।

ऊ रामदासका आँखाबाहिर भए पनि गिद्धे दृष्टिभित्र परिसकेकी छ।

कटुवाल भएको कारणले रामदास धेरैजसो काठमाडौँ बस्थ्यो गाउँको समस्या बोकेर। एक गोडा गाउँमा, अर्को सहरमा भने पनि हुने।

गाउँको पीरमर्का कति सुल्झाउन सक्दो हो, कति सकोइन, रामै जानून्। तर केन्द्रीय सरकारी कर्मचारीसँगको उठबसले गर्दा काँठपाखाको बस्तीमा उसको दबदबा बढेको छ। यस्तो जगरसेठको कुदृष्टि कुनै अबलामाथि गढेपछि यो निर्बलाले त्राण पाउन असम्भव। चाहे सलले होस् वा बलले अथवा छलले, उक्त ठालूको 'त्वं शरणम्' मा जानैपर्थ्यो। त्यही विकृतिपूर्ण सामाजिक परम्पराअनुसार कटुवालले सेर्बूउपर आफ्नो हक सम्झिएको छ। ऊ गएको अगोचर दिशातिर ऱ्याले आँखा तिखारिरह्यो। पछि रिसको ओठ टोकेर अरायो– 'जा-जा कान्छा आले!' कानमा फुसफुसायो– 'त्यो सेर्बूलाई मैले बोलाएको छु भन्!' थप्यो– 'नमानेको खण्डमा त्यहीँ अलमल्याइराख्नू। म आउँछु।'

सेर्बूको मामा तन्त्रमन्त्रद्वारा दैवी प्रकोप पनि टार्न सक्ने असिनापानीको प्रकोप र रोगव्याधि हटाउने पनि। त्यस्तो सिद्धिहस्त तान्त्रिककी भान्जीलाई भाँडभैलोका निम्ति डाक्न जान हिचकिचायो आले। अर्कातिर गाउँको अधिकारी, साथै धनीमानीले अराएको काम नकार्न पनि नहुने। उठीचिल्लीको सम्भव। धर्मसङ्कटमा पऱ्यो आले। कपाल कनाउन थाल्यो मालिकको खटन आलटाल गर्न।

पालनकर्ता उही अनिष्टकारी आदेश दोहोऱ्याउँछ भन् आतुरताले– 'जा चाँडो, दगुर्। म खाजा नखाएर पर्खिबसेको छु भन्नू।' आधिकारिक स्वर गऱ्यो–

'जहाँ भेट्छस् त्यहीँबाट फर्काएर ल्याउनू। नआएमा म रिसाउँछु भने पनि हुन्छ। पछि नराम्रो पर्ला रे भनेर बेस्करी तर्साउनू। जा, कुदिहाल्।'

'काजी!' मनको त्रास व्यक्त गर्न विवश भयो दास– 'त्यो छौँडी अडभङ्गे छे, मापाकी।' फेरि सुस्तरी मुख खोल्यो– 'अचेल खसकुरा गर्न जानेदेखि त्योसित बोलिसक्नु छैन। त्यसको मामाले पोहोर वर्ष यस्तै कुरामा ...।' कसैले आफ्नो वार्ता सुन्ने डरले यताउति पल्याकपुलुक हेर्दै विगत संवत्सरको घटनालाई लिएर गन्थन सुरु गऱ्यो अरोट टार्न।

नोकरको बाह्रसत्ताइस कुरा सुनिरहने धैर्य छैन अरौटेलाई। बीचमा झर्कियो– 'कस्तो यस्तै कुरामा भनेको?' भृकुटी गाँठो पारेर– 'के भो पोहोर?'

'मुखिया बाजेले,' स्वर खोल्छ नोकर– 'यही सेर्बूका निम्ति।'

'के त?'

'त्यस मोरीलाई बाजेले लहस्याउन खोज्नुभएको रहेछ। उसको मामाले अन्तर्ध्यानबाट मेसो पाएर ...।'

'चाल पाए पाओस्! त्यस नाथेले के नाप्छ?'

'बित्यास पारिहाल्यो हजुर!'

'के?'

'आफ्नी भान्जीलाई बाजेले ताकेको थाहा पाएर लामा र बाजेको भनाभन पऱ्यो। त्यही ठाकठुक भएको भोलिपल्ट लामाले बाजेको आङभित्र मसाने भूत हुलिदिएछ। बाजे छ महिना थला पर्नुभयो। अझसम्म राम्ररी तङ्ग्रिन सक्नुभा छैन।' अत्यासको मुखाकृतिमा बोल्छ नोकर– 'तपाईंलाई पनि त्यस्तै बिगार हालिदेला।' नकारात्मक वाक्य प्रयोग गर्न थाल्यो– 'नाइँ अन्नदाता! म त्यस विनाशकारी आइमाईको मुखै हेर्न चाहन्नँ।' हातमा टोपी लिएर बिन्ती गऱ्यो– 'तपाईंले पनि त्यस्तो नचाहिँदो कामपट्टि मन नडुलाउनुहोस्।'

बाजे र मामाको काटोछिनो परेको साँचो हो। परन्तु अघिल्लो थलिएको कारण कुनै मन्त्रको प्रभावले होइन। रक्तचाप बढेर हो। तर लामासित वैरभाव हुनेबित्तिकै बाजे रोगाउन थालेकाले 'चितुवा कराउनु बाख्रा हराउनु' जस्तो काकताली मिल्न गयो जसले गर्दा गोप्राणी गाउँलेहरू लामाको तथाकथित मायावी शक्तिसँग

भयभीत छन्। अरूको कुरा परै रहोस्, खुद कटुवाल आफैँ पनि झसङ्ग भयो, कहीँ लामाको मन्त्रपाशमा परिने हो कि?

धेरै बेर डराएन। उत्ति नै खेर उसको त्रासमाथि कामवासनाले विजय पाएछ। नोकरसित रिसायो– 'मेरो आज्ञा तँ मान्दैनस्?' दाह्रा किट्यो– 'धत्, निमकहराम!' मुखमा आएजति हप्की बक्यो– 'कृतघ्न, पशु, पाजी, उल्लु, नालायक ...!'

गालीको पर्बाह गरेन कान्छो आलेले। मालिकलाई दुराकर्मबाट विमुख राख्न नम्र निवेदन गर्न थाल्यो बुद्धि-विवेकले भेटेसम्म।

ती ज्ञानप्रद वाक्य मालिकका निम्ति 'मूर्खको मनमा अर्ती गालीतुल्य बिझाउँछ' भयो। धनीहरू गरिबसित बातचितको भन्दा लात्तीको भाषा बढी बोल्ने गर्दथे। त्यही अनुवंशित संस्कारअनुसार कटुवालले आलेलाई लुछेर लडायो। ढाडमा एक लात प्रहार गऱ्यो। त्यति मारले चित्त बुझेनछ। जथाभाबी गोद्न थाल्यो उफ्रँदै।

गोरुचुटाइ गर्दा समेत प्रताडकको रिस मरेनछ। प्रताडितबाट मोहियानी निष्कासन गरिएको सार्वजनिक सूचना गऱ्यो।

निमुखा किसानका निम्ति पछिल्लो दण्डादेश घाउमा नुनचुक-खुर्सानीको सम्मिश्रण धूलो छरिएसमानको पीडा थियो। आँसु झार्दै उठ्यो। तलसिङको गोडा समातेर क्षमायाचनाको हात जोड्यो। तर जहाँसम्म सेर्बूलाई डाक्न जाने प्रसङ्ग छ, त्यसमा आत्मसमर्पण गरेन। जम्ला हात देखाएर उभिइरह्यो थरर काँप्दै।

करजोरीको वास्ता राखेन जग्गाधनीले, न आँसु बरर खसालेकोतिर याद गऱ्यो। क्रोधमा तमतमाउँदै अकिञ्चनको खाने मुखमा मुक्का कस्यो। गाला चड्कायो। कपाल भुत्ल्याउनसम्म भुत्ल्यायो। 'अटेरी मोरा!' तथानाम दुर्वाच्य प्रयोग गर्दै अर्को लगतियालाई खोज्न यताउति दृष्टि घुमायो।

कान्छो आलेमाथि मारमुङ्ग्रीको सूत्रपात हुन थालेदेखि अन्य हतुवापतुवा 'हूलमूलमा जीउ जोगाउनू, अनिकालमा बीउ जोगाउनू' उखानलाई आत्मसात् गरेर यत्रतत्र तर्किएका थिए एकौटा निहुँ पारेर।

अलि परको थाउलोमा चुथ्रो झ्याम्मिएको थियो। त्यस लेकाली झारको अडेसामा छेकिएर जेठरैती लुकेको माथि कटुवालको नजर परेछ। बडघरलाई देख्नेबित्तिकै उसको अघि कान्छा आलेलाई पिटाइ गर्दा बढेको श्वासोच्छ्वास

एकाएक घटेर सामान्य गतिमा ओर्लियो, मनमा कार्यसिद्धिको न्यानो घाम लागेछ. मुखमा अप्रसन्नता लोप भयो। मुसुक्क मुस्काएर सहृदय डाक्यो उपनाम किटेर– 'ऐ बडघरे! यता आ।'

तथाकथित बडघरे यो भूपतिको बाँझो जग्गा पहिलो पटक आबाद गर्ने कृषक हो जेठरैती। हात जोड्दै देखा पऱ्यो– 'ख्वामित!' विनयी भावले।

विनयीको कर्णकुहरमा ख्वामितले एकाएक विष वमन गऱ्यो– 'ए लिम्पा! सेर्बू त साह्रै रहरलाग्दी भइछे,' अभिरुचिको रूपरङ्गको प्रशंसा गऱ्यो, जीउडालको पनि।

रमणीले आजभोलि गरेको आर्थिक र बौद्धिक उन्नतिबारे लोभिएको रहेछ कटुवाल– 'यसलाई आज जसरी भए पनि नसुइँक्याई भएन।'

किसान थरर्र काँप्छ, बोल्दैन। पुँजीपतिले पुनः मुख बायो– 'तैँले अघि याद गरिनस् लिम्पा? त्यो बजिनी मलाई देखेर मस्किएकी।' फेरि थप्यो– 'सायद मलाई खोज्दै आएकी होली देखा पर्न। अहिले स्वाङ पार्छे तर्किएर।'

'हैन महाजन!' लिम्पा बीचमा कुरा काट्छ– 'त्यो तपाईंलाई देखेर मस्किएकी हैन, झस्किएकी।' थप्यो– 'जम्काभेटका निम्ति पनि आएकी हैन। उसको मामालाई खाजा पुऱ्याउन जान लागेकी हो मालिक!'

'जे होस्,' सानो डाँडातिर औँल्यायो मालिकले 'ऊ' सर्वनाम शब्द प्रयोग गरेर– 'त्यही थुम्कोले छेकिएकी छ। आज त्यसको पाइन नझारी भएको छैन।' दृढ भावले थप्यो– 'हिँड् लिम्पा! तँ र म जाऊँ। त्यसको दोहोलो काढ्नुपऱ्यो घोडेपालो गरेर।' मन्जुरीका निम्ति नोकरको मुखमा आशाको आँखा गाड्यो तर अपेक्षाकृत तत्परता देखेन।

करबद्ध निहुरिएको छ नोकर, मौन। नयन बन्ध। लाटो, बहिरो र अन्धोजस्तो।

'क्या हो?' मालिकले आश्चर्य प्रकट गऱ्यो– 'तँ पनि लिम्पा! कान्छा आलेजस्तै दोर्जे तामाङको तन्त्रमन्त्रसित डराउने हो कि?' गर्जियो– 'कसो?'

कान्छा आले लम्तन्न परेर राँटोमा लडेको छ, मरणासन्न। यस्तो बिजोग आँखासामु हुँदाहुँदै मालिकको आदेश आनाकानी गर्नु काललाई निम्त्याउनुसमान थियो। त्यही पनि यत्रो ठूलो गर्जनतर्जनको उपोद्घातमा।

लिम्पाले चाहेर होइन, त्रासले उसको मुखबाट स्वतः वाक्य हाम फाल्यो– 'ख्वामित! तपाईंका निम्ति मर्न परे पनि हट्दिनँ।'

वास्तवमा कुनै दिन लिम्पा पनि सेर्बूको रूपको दास थियो। ऊसित विवाह हुने सम्भावनामा भौँतारिएको। यतिसम्म कि दुवैतिरका अभिभावकले स्वीकृति प्रदान गरिसकेका। त्यतिखेर सेर्बू विवाहयोग्य उमेरमा थिइन, मानिन, मावल लुक्न भागी। जसै वयस्क भई, जातभातको अड्चन आइपर्‍यो, कुनै बेला फुर्सद नहुने, कहिले बिरामी, कहिले अर्थाभाव। अत्रान्तरे, काठमाडौँली केटो वीरनरसिंहसित बाटमा भेट भयो। मोहपाशमा फसी।

त्यही सहयात्री वीरनरसिंहको मोहनी रूप उसको सपना, जपना, कल्पनामा देखा पर्न आउँछ। अन्य विवाहार्थीको प्रणयलाई प्रजल्प ठान्छे, फुटेको कानले पनि सुन्न सक्दिन। उसको यो प्रेमव्यथाबारे लिम्पालाई जानकारी छैन। बिचरा, ऊ एकतर्फी विवाहप्रेमी भएर तड्पिरहेको थियो मनमनै।

आजकाल आफ्नी प्रणयपुतलीको जीवननिर्वाह पद्धति र बौद्धिक उन्नति बढ्दै गएको, स्वयम्को जहाँको त्यहीँ। कुनै क्षेत्रमा पनि अभिवृद्धि नास्ति। उहीँ हल्लनटाट स्थिति। यस्तो आफ्नो र सेर्बूको आवगास-असमानतामा विवाहको कुरा चलाउन आँटिन। हीनताभावले मन मारेर बसेको थियो लाचारीको घुम्टो ओढेर। तथापि कुनै दिन यिनै मालिक कटुवाल, जिम्वाल, थरी मुखिया र अन्य महाजन आदि ठूलाठालूसमक्ष आफ्नो विवशता प्रकट गरेर यिनको भनसुन र करकापबाट सेर्बूलाई अपनाउने धोकोको पिङमा मच्चिन छोडेको थिएन।

यतिखेर आफूले ताकेकी केटीमाथि मालिकका आँखा गडेको देखेर उसको अभिलाषारूपी पिङ चुँडिएको भावबोध भएछ, भताभुङ्ग बिग्रिएको। अर्को मार्मिक मजबुरी थियो कि यसरी आफ्नो मनकल्पाइ धराशायी हुँदा पनि मनको गुनासो पोख्न सक्ने स्थिति छैन। मालिकको लहैलहैमा चुपचाप बहकिनुसिबाय दोस्रो विकल्प हरोहर।

पालकपालिते सेर्बूलाई छेको मार्न वनको छोटो बाटो गोरेटोमा झरे, त्यहाँनेरको बनमारा झाडीभित्र लुकी बसे उसको प्रतीक्षामा।

सेर्बूलाई मामाको औषधीभट्टीमा पुग्न बनमारा झाडी भएर जानुपर्थ्यो जहाँ प्रतीक्षित उसलाई ढुकी बसेका थिए। परन्तु अहिले त्यतातिर गएकी छैन। त्रिशूलीघाटबाट नदीको जलप्रवाह हेरिरहेकी छ अन्यमनस्क।

त्यो ठाउँमा उसको अन्तिम प्रेम बिछोड भएकाले सधैँ त्यसतिर आवागमन गर्दा उसको स्मृतिमा प्रेमी वीरनरसिंह ठिङ्गिन आएको झझल्को लाग्थ्यो, रोकिन्थी। अहिले पनि अघि बढ्न सकिन, मायालुको सम्झनामा हराउन चाहन्छे, प्रेमाश्रु बगाएर।

त्रिशूली गोसाइँकुण्डबाट उद्गमित भई नेपालको मध्यभागमा बग्ने नदी हो। गत राति शिर बर्सेकाले अस्मेल बाढी आएको छ। त्यो जलराशिभन्दा वियोगिनीको मनमा उठेको विरहप्रवाह कम छैन। त्यस दुःखान्त छालले हुत्त्याएर विरहोत्कण्ठीलाई विगत चिरस्मरणीय स्मृतिमा पुऱ्यायो।

एक बिर्सिनसक्नु बिहानी। ऊ आफू बाबुको घरबाट मावल जान लागेकी थिई। मूल बाटोछेउको जङ्गलभित्र निदाइरहेको युवकको शिरमाथि सर्प बेरिएर बसेको देखी फणा फुलाएर।

केही छिनमा त्यो अपरिचित सुतुवा तरुण जुरुक्क उठेर आफ्नो पछि लाग्यो। जति बेवास्ता गर्न खोजे पनि लुरुलुरु पछ्याइरह्यो।

त्यति बेला सेर्बू राष्ट्रभाषा जान्दिनथी। अतः पछेटो युवाको भित्री उद्देश्य चाल पाउन सकिन, किन पिछा परेको हो। न नाम सोध्ने नेपाली वाणी उसको जिब्रोमा थियो।

नेपाली बहुसङ्ख्यक जनताले बोल्ने, बुझ्ने, अड्डाखानाको लेखापढी आदिमा चलेको राष्ट्रभाषा बाबु-आमाले केटाकेटीलाई बोली फुट्न थालेदेखि सिकाउनुपर्ने हो। आफूलाई त्यसो नगरिएकोमा सेर्बू पछुताउँछे। अभिभावकलाई मनमनै सराप्न थाली।

यस्तो मानसिक थकथकीमा पनि उसको सम्झनामा एउटा पुरानो घटना टड्कारो देखा पर्न आयो। त्यो आकस्मिक काण्ड थियो ऊ आफू र प्रेमी केटो क्रमशः अघिपछि हुँदै हिँडिरहेको बेलामा उसको पुट्ठामा अँगरीको हाँगाबिँगाले पछाडिबाट लागेको।

त्यो सूचनाबोधक सङ्केतलाई अझसम्म उसको नितम्बमुनि केटाले औँला घुसारेको भ्रममा छे सेर्बू। त्यही रोमाञ्चकारी मिथ्याज्ञानको यादले सर्माएर राती हुन्छे। स्वगत भन्न थाली– 'छिः! सहरिया मान्छे त कस्ता फोहोरी हुँदा रहेछन्। त्यस्तो कुठाउँमा पनि छुने हो?' दुई तिघ्रा बटारेर उत्तेजनामा निचोरिन्छे। मुस्कुराई,

अब कुनै दिन फेरि भेट भयो र त्यस्तो भाँडकाम गऱ्यो भने त्यो मान्छेको औँला टोकिदिन्छु दुख्ने गरेर या बेस्करी समातेर छोड्दै छोड्दिनँ, मुसुक्क हाँसी मन्द हाँसो।

त्यही हँसिलो स्वगत कथनका क्रममा आफू प्रेमीको खबर नपाउँदा नदीमा फाल हालेर मर्न तम्सिएको पुरानो स्मृति याद आएछ, झसङ्ग भई।

कहिले खिसिक्क हाँस्ने, कहिले टोलाइरहने, कुनै बेला रुने, यसरी आत्मगत विगत अविस्मरणीय घटनाको स्नेही पाना पल्टाइरहेकी थिई एकपछि अर्को। त्यही सिलसिलामा अघि कटुवाल रामदासको नदी तारिदिने चुर्के प्रस्तावको सम्झना आएछ, उद्विग्न भई। एउटा दुर्जनको पहुँचबाहिर आफूलाई पाएर काल टरेको अनुभव गरी, भरोसाको लामो सास फेरी।

तत्क्षण अकस्मात् उसको नजर नदीले मान्छे बगाएर ल्याएको दारुण दृश्यमाथि पऱ्यो प...र।

त्यो विपत्कर चाक्षुपदृश्य सेर्बू उभिएको तटबाट करिब एक हजार फिटको दूरीमा हुँदो हो मझधारमा।

प्रवाहछालमाथि छाल उठेको छ, एकभन्दा अर्को ठूलो। भुमरी परेको। धुन उडेको।

गोरेटोमा पर्मपात जानेको फाटफुट ओहोरदोहोर। कसैको काँधमा हलो, कसैको जुवा। कुनैकोमा सतली, कोदालो। कुनैकोमा घुम।

ती श्रमजीवको ध्यान पनि त्रिशूलीले मान्छे बगाएर ल्याएको जलाशयतिर केन्द्रित हुन थाल्यो।

'को होला त्यो बगाएर ल्याएको मान्छे? कहाँको बासिन्दा?' सनसनी फैलियो।

प्रवाहित कलेवर एक पल्ट पानीको प्रत्यक्ष बहावमा झुलुक्क देखा परेको थियो। उत्ति नै खोरे ऊर्मिल लहरीभित्र बेपत्ता भयो।

अल्पित देह जीवित थियो कि मृत? देख्नेले यकिन गर्न सकेनन्। झन् बनमाराको झाडीभित्र ढुकी बसेका रामदास र अनुचरले कसरी ठम्याउन सकून्? साँच्चो भन्ने हो भने तिनले नदीतिर ध्यानै दिएका छैनन्।

जलप्रवाहले प्रलयकारी रूप लियो। त्यस उद्वेगित तरङ्गले अघि अल्पिएको मनुष्यपिण्डलाई सिन्धुसङ्गममाथि पुनः उतार्‍यो। निमेषपछि एकाएक बीचजँघारबाट हुत्त्याएर किनाराको हिले दलदलमा फालिदियो माटो र झारपातसहित।

गङ्गामाटीले सर्वाङ्ग पोतिएको मनुवा एकै प्रयासमा उठ्यो। नाक, कान, आँखाभित्र पनि पङ्क भरिभराउ। देख्नु-सुन्नु नास्ति। पानीले निथाचूर्ण। कष्टप्रद आवाजमा विकृत 'ज ... ज ... गो ... गो ... जय गोरखनाथ ...' चिच्च्यायो।

धेरै बेर उभिने सामर्थ्य रहेनछ उसको, लगलग काँप्दै थियो, लड्यो। अस्पटाउन थाल्यो, वाकवाक र उकउक गर्दागर्दै होस हरायो।

पयस्विनीको किनारामा विरहोत्कण्ठिता खडा थिई। उसको मनमा अधिक दया उठेछ, विनिष्ट व्यक्तिको कष्टापन्न स्थितितिर व्यग्र ध्यान दिई। उसलाई मदत गर्ने पुनीत विचारले आकस्मिक घटना परेको थलोतिर कदम बढाई।

मदती ठिङ्गिएको किनारादेखिन् मान्छे बगाएर ल्याएको ठाउँसम्म अलि-अलि पानी जमेको थियो। त्यस छिपछिपे जलावतारमा टेक्न हिचकिचाई मदतगार। चप्पल फुकालेर हातमा लिई, फरियाको तल्लो फेर उचालेर फड्को मार्न थाली। केही पर पुगेपछि मनुष्याकार स्वत्र्याम्म पसारिएको देखिछ, 'लौन नि!' कराउन थाली– 'तेरो गोती! कसलाई बगाएर ल्याएको?' कङ्कला स्वर गर्न लागी– 'निःसहायलाई सहायता गर्नुपर्‍यो, दाजुभाइ, दिदीबहिनीहो आउनोस्, गुहार, गुहार!'

चिच्च्याहट वरपरका सबैले सुने। नेपाली भाषा नबुझ्ने गाउँलेको मनमा आफ्नो नाताकुटुम्बलाई बगाएर ल्याएको शङ्का परेछ, फाल हाल्दै आए रुँदै, छाती पिट्दै।

वनमाथिबाट पनि दाउरे, घाँसी, गोठाला, वनपाले, सिकारी आदि त्यसरी नै ग्वारग्वार्ती तल फाँटमा झरे पहरो लडेको भाँती।

रामदासले केही प्रतिक्रिया जनाएन।

ऊ मान्छेको स्वरूपमा बाटोकुरुवा विषालु सर्प रहेछ, फिटिक्क नचलेर सेर्बूको गतिविधि चियो गरिहेको। कहाँ जान्छे? के गर्छे?

सेर्बूकी माइजू पनि त्यही बुट्यानतिर गोठालो आएकी रहिछ। खलबलले उसको मनमा खाजा पुर्‍याउन हिँडेकी भान्जी हिंसक जन्तुको मुखमा परेको शङ्का उठेछ, दगुर्दै बगरपुँडो उपस्थित हुन पुगी।

त्यहाँको उपागम भीडलाई भान्जीले आपातित वस्तुस्थितितिर औँल्याउँदै नदीले मान्छे बगाएर ल्याएको विवरण अवगत गराइरहेकी थिई। माइजूलाई पनि देखाई।

माइजूको मनमा लोग्नेको सम्झना आएछ। सूर्यमण्डलतिर सङ्केत गरेर भान्जीलाई पनि याद दिलाई– 'नानी! हेर, सूर्यदेव कति माथि उठिसके।'

नानीले बखत अड्कल्न घामको तेजपुञ्जतिर दृष्टि दिन लागेकी थिई. माइजू पुनः बोली– 'तिम्रा मामाको खाजा खाने बेला घर्किन लाग्यो। किन तिमी औषधीभट्टीतिर नगएर नदीकिनारतिर जान्छ्यौ चमेनापोको बोकेर?' फेरि भनी– 'बगाएर ल्याएको मान्छेलाई जेजस्तो औषधमूलो गर्नुपर्ने हो भइहाल्छ। यतिको गाउँले त्यहाँ पुगिसके। अब तिमी वैद्यकोठातिर लाग। तिम्रा मामाको पेट धेरै बेर खाली भएमा सन्चो हुँदैन, गानो जान्छ।'

भान्जीले मनासिब ठानी। मामाप्रतिको दायित्व पूरा गर्नका निम्ति भन्दा पनि उसलाई यहाँ ल्याउन पाएको खण्डमा दुर्घटित व्यक्तिको राम्रै औषधोपचार होला भन्ने सोचेर परोपकारोन्मुख भई, अवारसम्म पुग्न पाइन, बीचबाटोबाट फर्किई मामालाई डाकी ल्याउन।

प्रत्यागमनपथ लामो भएकाले बाटो बदल्नुपर्‍यो, छोटकरी डोरेटोतिर मोडिई। संयोगवश त्यो परिवर्तित दिशा बनमारा झाडी-अभिमुख पर्न गएछ रामदास कुरी बसेको दिशातर्फ। अनजानमा सेर्बू त्यता अघि बढी यथाशीघ्र गन्तव्यस्थानमा पुग्ने हेतुले।

बाटोमा कादो रहेछ चिप्लो र धापिलो। बगाएर ल्याएको घाइतेको स्वास्थ्यलाभको कामनामा 'रामनाम' जप्दै हिँडेकी थिई, नजर नदीकूलतर्फ. बगलको दुईतिर मुठीले जनानी धोती कर्पेकी।

'रामनाम' मा विशेष ध्यानमग्न भएकीले गोडा रड्किएर सिलित्त चिप्लँदा फरियाको तल्लो फेरले स्वतः नेटो काटेको होस गरिन। उसका सुडोल तिघ्रा, जाँघ र जोर्नी झल्याकझुलुक देखिन थाले।

उता रामदासको पापी मनमा सेर्बूले आफूतिर आउनका निम्ति बाटो परिवर्तन गरेको, साथै उसलाई ललचाउन फरिया उचालेर गति छोडेको भ्रम पर्‍यो। खुसी भयो। उत्तेजित पनि– 'लिम्पा! अब तँ जा। फर्की।' बिदा दियो।

लिम्पा जसरी आउन चाहेको थिएन त्यसरी नै फर्किन अनकनायो– 'त्यो केटीले खसकुरा जानेदेखि अचेल भुइँमा न भाँडामा भएकी छ। कसैलाई टेरपुच्छर लगाउँदिन। हजुर एक्लैले अँचेट्न असम्भव, मैले भरथेग गर्नुपर्ला कि!' हात जोऱ्यो।

तामसिक उत्तेजनाले रामदासको सुद्दी ठेगानमा छैन। आफूले नोकरलाई के आदेश गऱ्यो? त्यो आज्ञाको पालन भयो कि भएन अथवा नोकरले के उत्तर दियो? केवल सेर्बूको कञ्चनकायातिर ध्यान केन्द्रित छ। आफू राम्रो देखिन आङमा दौरा तानतुन गरेर मिलाउन थाल्यो। पटुका फुकाएर पुनः लपेट्यो टम्म। कम्मरमा खुकुरी ठाडो परेको थियो, छड्के भिऱ्यो। लिम्पालाई जुत्ता पुछ्न लगायो। टोपी ढल्कायो। जुँगा घोप्टे थियो, घिनलाग्दो। मुसाऱ्यो। 'अनुहार न दनुवारको मान्छे' अब तैबिसेक हेरिसक्नु भयो।

लिम्पा झन् सारो एक पटक सेर्बूको वर हुनेमा गाइँगुइँ हल्ला चलेको केटो। यतिखेर मलिन देखिन किन चाहन्थ्यो?

धेरै वस्त्र थिएन उसको देहमा, सिबाय टोपी र ठाडो लँगौटी। नत्र उसको पनि मालिकको जस्तै षोडशसंस्कार गर्दो हो।

शिरपोस हातमा टकटकाएर धूलो झाऱ्यो, ढल्काएर लगायो। चाउलो उध्रेको प्वालबाट केशपाशी बाहिर निस्किएको थियो। भित्र लुकायो।

कौपीनको टुप्पो कन्दनीमा तह मिलाएर घुसाऱ्यो।

जुँगा सुमसुम्याएर धनुषाकारको बनायो। चिटिक्क पाऱ्यो।

त्यहीँनिरको वरपीपलको फेदमुनि एक जोडी डाँफेचरी जोडा खाने धुनमा पङ्ख भुइँमा घिसारिरहेका छन्। पानीहाँसको समूह जलक्रीडामा बिभोर।

उत्तर दिशाको क्षितिजमा पर्वतमाला होचा-अग्ला पङ्क्तिबद्ध शृङ्खलाको पृष्ठभूमिमा अवस्थित। नीलगिरि, माछापुच्छ्रे, अन्नपूर्णा, मनासलू आदि हिमशिखर गरिमामय इतिहास बोकेर सूर्यको प्रखर तेजमा चम्किरहेका झलमल्ल।

प्राकृतिक वैभवले सिँगारिएको मनोरम दृश्यविविधतातिर रामदासको ध्यान छैन। न मान्छे बगाएर ल्याएको खलबलीपट्टि चाख।

त्यो नरपशुको कामुक दृष्टि सेर्बूको माथिसम्म उचालिएको गुन्यूको निर्लज्ज स्थितिमा केन्द्रीभूत छ अझसम्म। देह भड्किएको, मन चञ्चल। त्यही आवेगमा

हर्ष प्रकट गर्न सेर्बूको पहिरनतिर लक्ष्य गरेर कार्तिककृष्ण औँसीको राति अलापिने विशेष प्रकारको धार्मिक गाथालाई प्लुतलयमा गुनगुनाउन थाल्यो– 'भैलेनी आइन् आँगन गुन्यूचोलो मागन ... !' पुट्ठा नचाएर, कम्मर भाँचेर, हातगोडा फालेर प्रेरित भयो।

'बेला न कुबेला बजिनयला' उखानझैँ गाईतिहारको राति लक्ष्मीपूजाको उपलक्ष्यमा गाइने गीत अहिले बेमौकामा फलाकिएको सेर्बूका कानमा परेन। ऊ अनजान पाइला तीतेझारको बुट्यानतिर बढाइरहेकी छ सरासर।

स्वजातीयको बेहोसीमा अन्य जातिले मजाक उडाएको मन परेन लिम्पालाई, हस्तक्षेप गऱ्यो– 'मालिक त्यस्तो अपशकुन देखिएमा दिनभर दशा लाग्छ भन्छन्। त्यतातिर नहेर्नोस्, साइत पर्दैन।'

आसुरी चित्तवृत्तिको थियो रामदास। झन् अहिले मनोवेग चरम सीमामा पुगेको स्थितिमा किन कसैको सम्मति मान्थ्यो? उल्टो आफ्नो उत्तेजक दृश्यावलोकन बिथोलेकोमा झोक्कियो। बिथोलाहाको उपस्थमा एक लात प्रहार गऱ्यो– 'बरु तँ त्यता नहेर्।' अर्को लात्ती थप्यो।

'ऐय्या !' सेर्बूलाई सचेत गराउने हेतुले लिम्पा ठूलो स्वर गर्छ– 'ऐय्या ... !'

'नकरा !' मालिक आँखा तर्छ– 'चुप लाग् !' फेरि आदेश गऱ्यो– 'तँ जा, गइहाल्।'

नोकर टेरपुच्छर लगाउँदैन। एकनास सेर्बूतिर टिठलाग्दो नजर गाडिरह्यो। उता सेर्बूले थलथले ठाउँमा टेक्न निकनिक मानेर नाक चाउरी पारेकी छ, कदम असन्तुलित। ओठ लेप्रिएको। निधार गाँठो परेको।

यसरी शारीरिक निग्रह खुस्कँदा पनि हातको पोटली, अमखोरा र चट्टी जुत्ता जतनसित सम्भालेकी छ। रामदास ढुकिबसेको गौँडानिर आइपुग्न लागी।





# १०

युवराजाधिराज सुरेन्द्रवीरविक्रम शाह त्रिशूली सवारी हुने भएकाले त्यस क्षेत्रअन्तर्गतको प्रमुख स्वास्थ्यकर भूमि छानेर सवारी क्याम्प खडा गरियो हनुमानढोका राजदरबारको स्वाल्पाकारका रूपमा। उक्त शिविरभित्र प्रतियमान थिए नासलचोक, त्यसको चारैतिर सेतो दरबार, सिसाबैठक, ज्ञानकोठरी र नौतले दरबार, सुनढोका, छानामा राष्ट्रिय झन्डा फरफराइरहेको।

एक बिहान अनौठो लहड चलेछ युवराजाधिराजलाई। कसैलाई थाहा नदिईकन काठमाडौँबाट त्यसतर्फ प्रस्थान गरे सुटुक्क।

दुईचार जना अङ्गरक्षक र विजयराज बडागुरुज्यूले शाहीयात्राको पूर्वसूचना पाएछन्। तिनको घोडा पनि बलियो भएको कारणले सवारीसाथसाथ गन्तव्यस्थानमा पुग्न सफल भए। अरू लावालस्कर पछि छुटे। सिकारी कालिज, कुकुर, पासो, धराप, जाल, दुर्बिन आदि आखेटी उपकरणको पहिले नै इन्तजाम भइसकेको रहेछ। तर रात परिसक्दा पनि भान्से बाहुन आइनपुगेकाले राजकुमारलाई भुजा ज्युनार गराउने समस्या पऱ्यो। अन्ततः बडागुरुज्यू भान्सा पस्नुपर्ने स्थिति आयो, धोती फेरे।

'नाच्नेले नाच्न जान्दछ' उक्तिझैँ गुरुज्यू कवै भान्सा नपसेकाले भात पकाउन जानेनन्। अधकल्चो भुजा पस्किए।

कुन्ताको झडङ्गी बेहोराका सुरेन्द्र, झन् चुरो नमरेको भातको सिता थालमा देखेपछि रिसाउनु स्वाभाविकै हो। नपाकेको चामलदाना औँलामा लिएर माड्दै झोक्किए– 'क्या हो यस्तो चार थरीको भुजा! कुनै काँचो, कुनै डढेको, कुनै फुलेको?' आँखा तर्न थाले। कवै थालमा, कहिले मान्छेंको मुखमा हेरेर दाह्रा किट्न लागे।

उनको क्रोध खतरनाक थियो। मृत्युदण्ड दिन पनि बेर नलगाउने। गुरुज्यूको सातोपुत्लो उड्यो। पसिना काढे, काँप्र थाले।

हजुरिया कप्तान जङ्गबहादुर कँवरले युवराजाधिराजलाई रिझाएको थियो अनेक अद्भुत काम देखाएर। कहिले धेरै माथिसम्म उफ्रेर, कहिले गोमन सर्प समातेर, कवै इनारभित्र हाम फालेर। आज पनि मौसुफको घोडासँगसँगै पैदल कुदै आएको थियो। अघि सरेर हात जोऱ्यो– 'युवराजाधिराज सरकार! यसबापत गुरुज्यूलाई सरकारबाट इनाम बक्स हुनुपर्ने हो।' अघि बोल्यो– 'चार थरीको भुजा एउटै कसौँडीमा आजसम्म कसैले पनि तयार पार्न सकेका छैनन्। यो त गुरुज्यूको ठूलो करामत हो प्रभु!'

प्रभुलाई चित्त बुझेछ। गुरुज्यूतिर प्रसन्न मुद्राले हेरे। खपाखप खान थाले।

यात्राको धपेडीले थाकेका थिए, भोकले चुर। थपी-थपी हसुरे।

भोलिपल्ट काठमाडौँबाट खानसामाहरू आइपुगे। धाई, सुसारे, बाहुन, बाहुनी, अडिनी आदि।

अङ्गरक्षकको हूल। सिपाही, पुलिस, पिपा, चपरासी र स्वकीय गण छ्यापछ्याप्ती।

अक्सर युवराज त्रिशूली नदीको मनोरम तटमा बिहान-बेलुकी हावाखोरीमा जान्थे। एक दिन अपराह्ण पानीको बहाड हेर्न त्यसतर्फ निस्किए।

उत्तरतर्फको क्षितिजमा हिमाल छर्लङ्ग खुलेको। नदी अन्धाधुन्धा उर्लिएको। विशाल भेल र गर्जन। युवराज दुर्बिन लगाएर हेर्न थाले। लेक फुलेको देखे, ऐँसेलु झर्न थालेको, वनजुनेलो लटरम्म।

मुनाल चरी उडेको, न्याउली बासेको इत्यादि प्राकृतिक र जैविक भिन्नताको मनमोहक दृश्य अवलोकन गर्दै त्रिशूली पुलमा पुगे। त्यहाँबाट नदीको विशाल तरङ्ग अभिरुचिका साथ हेरिरहेका थिए।

उनको अभिमुख दिशातिरबाट एक जना घोडचढी आयो कुनै अङ्ग्रेजी हास्यकथाको प्रमुख पात्र 'डङ्कुइजित' लिलिपुट जान लागेको पाराले।

त्यो हास्यास्पद सवार फौजी अफिसर रहेछ अर्द्धसैनिक पोसाकमा– फरेसक्याप लगाएको, खाकीकोट, लबेदा, सुरुवाल र कानेजुत्ता।

उसको ध्यान आफ्नै घरेलु पुगनपुगको आर्थिक समस्यामा अल्झिएको थियो, अन्यमनस्क। युवराजाधिराजको उपस्थितिको राम्ररी याद गरेन। मौसुफ दूरवीक्षणमा एकचित्त भएकाले पनि होला उसले नचिनेको। लुरुलुरु अघि बढिरह्यो एकसुरले।

युवराजको नजिक पुगेपछि उनको ओजस्वी स्वरूपको ज्ञान भएछ, भूत देखेको जस्तो गरेर भस्कियो, हत्तपत्त चौपायाबाट झरेर जङ्गी सलाम ठोक्यो।

त्यस बोलासम्ममा युवराजाधिराजको रिसले भृकुटी गाँठो परिसकेको थियो। ओठ टोकिएको, नजर लाल, हुकुम दिए– 'ए आठपहरियाहो! यो बेसोमती अफिसरलाई यसकै घोडामा चढाएर त्रिशूली नदीमा फाल हाल्न लगाउनू।' फेरि भने– 'यो उल्लूले हामी राजपरिवारको मान गर्न जानेको रहेनछ। मलाई देखेर पनि नदेखेको जस्तो गऱ्यो, टेरेन।'

त्रसित अफिसर करजोरी माफी माग्न थाल्यो। युवराज क्षमा दिने पक्षमा भएनन्। लप्टनले नदीमा फाल हाल्नुपर्ने स्थिति आयो। 'मर्नुपरेपछि खुट्टै तानेर' अभीष्ट कथनअनुसार ठूलो स्वर गऱ्यो– 'सरकार! एक पल्ट घर गएर जहानबच्चाको मुख हेर्न पाऊँ।'

राजकुमार कठोर दिलका थिए, अफिसरको रोदन-क्रन्दनपट्टि ध्यानै दिएनन्।

अफिसर पुनः चिच्च्यायो– 'ज्यानमाराको त अन्तिम इच्छा पूरा गराइन्छ। म त सरकारी सेवामा कार्यनिष्ठ भक्त ताबेदार हुँ। मर्नुअघि मेरो इच्छा पूरा गरियोस्।'

'त्यति पुलबाट खसेर तँ मर्दैनस्,' युवराजले ठोकुवा गरे। 'लौ हाम फाल्।'

कताबाट हो कुन्नि लप्टनको थुतुनोभित्र कालमोचन देवी वास गर्न आइपुगिछन्। फुत्त बाहिर निस्किन्– 'युवराजाधिराज! यो पुलबाट हाम फालेर बाँच्न सक्ने मानिस जन्मेको छैन।' वाचिक सूत्रको उच्चारण अघि बढ्यो– 'यदि कोही छ भने,' जङ्गबहादुरतिर हेरेर वाक्य पूरा गऱ्यो, 'जङ्गबहादुरले सक्लान्। हामी त मरिहाल्छौँ।'

सुरेन्द्रको मनसाय त्यो अफिसरलाई मराउने थिएन, न कुनै दण्ड दिने। केवल दिल बहलाउनका निम्ति साँघुबाट घोडा र सवार नदीमा खसेको रोमाञ्चकारी

तमासा हेर्नु थियो। त्यही मनोविनोदका लागि उत्ति नै खेरि जङ्गबहादुरतिर फर्किएर– 'लौ, तँ हाम फाल् जङ्गे ! तँ त मर्दैनस् रे।'

अकस्मात् आफूमाथि दैवी आपत् पर्न आएको अनुभव गर्छ जङ्गे। ओठमुख सुक्यो उसको, शिर नत, बोल्न सकेन।

बाटामा हिँडिरहेका सर्वसाधारण जनतालाई हात्तीको खुट्टामा बाँधेर घिसार्न लगाउनु, निजामती सेवामा रहेका हाकिम-कारिन्दाको मुखमा ध्वाँसो घस्न लगाएर सहर घुमाउनु, आफ्ना धाई-सुसारेलाई बाढी आएको वाग्मतीको भेलमा फाल्न पठाउनु आदि उटपट्याङ काम युवराज सुरेन्द्रको मनोरञ्जनका साधन थिए। यस्तो 'बिरालाको ख्याल-ख्यालमा मुसाको प्राणान्त' युक्तिसमान घातक उपद्रो गद्दीनसिन राजाको उत्तराधिकारीबाट हुन थालेपछि राजधानीमा हाहाकार मच्चिनु स्वाभाविक हो। त्यो जनआर्तनाद रोक्ने भित्री उपायलाई मूर्तरूप दिन चिकित्सकहरूले बुद्धिमत्तापूर्ण ढङ्गबाट युवराजाधिराजलाई हावापानी परिवर्तनका लागि काठमाडौँबाहिर कतै शैलावासमा जानुपर्ने सल्लाह चढाएका थिए स्वास्थ्यलाभका लागि। उनी त्रिशूली सवारी भएको कारण त्यही हो। तर 'कुकुरको पुच्छर १२ वर्ष ढुङ्ग्रामा हाले पनि जस्ताको त्यस्तै' भनेझैँ यहाँ आएर पनि उनको उटपट्याङ मनोवृत्तिमा रत्तीभर परिवर्तन आएन। जङ्गबहादुरलाई पुलबाट हाम फाल्न कर गर्न थाले-- 'तँ किन चुप छस् जङ्गे? फाल हाल्!' रिसाउन लागे।

भीमसेन थापाको शासनकालमा जङ्गबहादुरका बाबु काजी बालनरसिंह डडेलधुरा र लमजुङका हाकिम भएका थिए। गौँडामा त्यतिखेर विशेष काम थिएन। उनी छोराहरूलाई चाँदमारी, कुस्ती, घोडचढी, पौडी, धनुकाँड र घुयेँत्रो हनाउने अभ्यास गराउनमा समय बिताउँथे। त्यही रफतको प्रतिफल उनका जेठी मुखिनीपट्टिका छोरा भक्तवीर, कान्छीतर्फका सात छोरा जङ्गबहादुर, बमबहादुर, बद्रीनरसिंह, कृष्णबहादुर, जगतशमशेर र धीरशमशेर वज्रदेह भएका थिए। उड्न, कुद्न, उफ्रन, फट्कन, फाल हाल्न, पौडन, मार हान्न अद्वितीय। ती विज्ञ दाइभाइमध्ये जङ्गबहादुर आफ्नो दृढ शरीर र कुदरत प्रदर्शन गर्न औधी मन पराउने। उसमा अर्को विशेषता पनि थियो कि युवराज सुरेन्द्र जङ्गिएको बखतमा मौसुफलाई आश्चर्यजनक काम देखाएर शान्त पार्न सक्ने बठ्याइँ। त्यही खुबीले यस पल्ट पनि उसले युवराजलाई फस्ल्याङफुस्लुङ पारेर ज्यान बचाउने उपाय निकाल्ला भन्ने

सोचेर घोडचढी लप्टनले आफ्नो थाप्लामा आइपर्न लागेको वज्रपात जङ्गबहादुरको शिरमा पन्छाउन खोजेको हो। तर अहिलेको यो सिकिस्तीमा जङ्गबहादुरलाई आफ्नो रक्षाका निम्ति कुनै युक्तिसङ्गत जुक्ति सुझेन, स्तब्ध भयो। कहिले अफिसरको मुखमा क्रोधित नजरले हेर्छ। कहिले पुलमुनि बेगनीको भेलमा, कवै युवराजको मुहारमा।

उसकी प्रथम पत्नी प्रसादलक्ष्मीको निधनपश्चात् दोस्रो विवाह नन्दकुमारीसँग हालै सम्पन्न भएको थियो। उही नववधूको हँसिलो मुख उसका आँखासामुन्ने देखा पर्न आउँछ। आफू नदीले बगाएर मरेपछि नन्दकुमारी सती आएको विषम परिस्थितिको कल्पना गर्छ अनि दम्पती एकै चितामा जलेको, भस्म-खरानी भएको।

यता युवराजको बालहठले सुगारटाइको रूप लिन छोडेको छैन– 'लौन, जङ्गे! हाम फाल्। मेरो हुकुम तुरुन्त पालन गर्!' नत्र यसो गर्छु, उसो गर्छु भनेर धम्की सुनाउन थाले तारन्तार।

प्रतीत हुन्थ्यो, युवराजको मनभित्र घोडसवार एकसाथ पुलबाट गुल्टेर पानीमा झरेको, मर्नु-बाँच्नुको दोसाँधमा निसास्सिएको, छटपटिएको हेर्ने रहरसिबाय अरू कुनै आकाङ्क्षा छैन। त्यो कौतुकमा परिवर्तन ल्याउन धेरै प्रयत्न गऱ्यो जङ्गबहादुरले कहिले व्यङ्ग्यविनोदद्वारा, कहिले विनम्र हात जोडी पाउ परेर। केही सीप लागेन।

सबै प्राञ्जली व्यर्थ साबित भए।

द्वापरयुगमा द्रौपदीको चीरहरण हुँदा युवराज दुर्योधनको हठको सामु भीष्मपितामह, द्रोणाचार्य, कृपाचार्य र सन्त विदुरजस्ता महारथीलाई मौन बस्नुपऱ्यो। यो त कलियुग, त्यही पनि सनकी युवराज जसको वरिपरि धुपौरेहरू मात्र थिए।

तत्काल परिस्थितिले यस्तो नराम्रो मोड लियो कि युवराजको मूढाग्रह पूरा नगरिएको खण्डमा जङ्गबहादुरको ज्यान जाने, सर्वस्वहरण गरिने, सन्तान-दरसन्तान सरकारी सेवाबाट वञ्चित रहने अथवा अछुत जातमा मिलाइने। यसउसले जीवनको आशा मारेर चुपचाप अफिसरको च्याँसे टट्टूमाथि चढ्यो। तर सधैँको अपेक्षा घोडाको दुईतिर बगलमा राग जमाएन, न रिकापभित्र पैताला छिरायो। मात्र काठीमाथि पदतल टेकाएर टुक्रुक्क उड्केलो माऱ्यो बाँदर बस्ने प्रक्रियाले।

पुलमा दायाँ-बायाँ बार थिएन, केवल दुइटा फलेक बिछ्याइएको। त्यो साँघुरो साँघुबाट माझमाझीमा पुग्दानपुग्दै अश्व र आरोही एकैपल्ट पटरीबाट तलतिर गुल्टिए राजवाक्य परिपालनका निम्ति। युवराज सुरेन्द्र खुसी भए। प्रसन्नचित्तले ताली बजाउन लागे– 'हा ... हा ...!'

घुसमुन्टिने प्राणीद्वय नदीमा बजारिन भन्दा ८–१० फिट सतहउपर छँदैमा आरोहक चाहिँ भ्यागुतो उफ्रने पाराले घोडाबाट उछिट्टिएर अलि पर पानीमा फाल हाल्यो– 'जय गोरख!'

काठीमाथि हगासनमा बसेकाले रिकापमा सवारको गोडा अल्झिने समस्या थिएन। न घोडाको जीउले उसलाई थिच्ने। घोडा एकापट्टि, आफू अर्कातिर डुब्यो।

नदीको गर्भभित्र चारखुट्टे जनावर कहाँ पुग्यो कहाँ, बेपत्ता भयो।

दुईखुट्टे जङ्गबहादुरलाई उसका पिता बालनरसिंहले दिएको समयसापेक्ष पौडिने तालिम यतिखेर काम लाग्यो। तरङ्गमालीबीच बाँकटे हान्दै जीवनमरणको दोसाँधमा सङ्घर्ष गर्न थाल्यो।

सङ्घर्षकारी छालभित्र छोपिएकाले पारदर्शिता थिएन। देखिन छोड्यो. नामनिसाना नास्ति।

उपस्थित लब्धप्रतिष्ठ व्यक्तिको मनमा चौपाया र दोपाया नदीको प्रलयकारी उदरभित्र शमन भएको भान पऱ्यो।

एउटा होनहार बाँकेको व्यर्थै ज्यान गएकोमा प्रत्यक्ष देख्नेहरू दुःखित हुनु स्वाभाविक हो। तर दिवङ्गत आत्माप्रति सहानुभूति प्रकट गर्ने आँट कुनै चस्मदिदमा थिएन। श्मशानशान्ति छायो, तैँ चुप मै चुप।

धेरै बेरसम्म पनि जङ्गबहादुर पानीबाट नउत्रेकाले युवराजलाई न्यास्रो लागेछ, अँध्यारो मुख लगाउन थाले, नदीको प...रसम्म नजर तिखारेर सोधे– 'ज ... ज ... जङ्गे खै?'

भारदारहरूको विचार थियो, मरिसकेको जङ्गबहादुरबारे एक शब्द उच्चारण नगर्ने, गामगुम पार्ने। कारण यस प्रकार ख्याल-ख्यालमा मानिसको ज्यान जान थालेपछि युवराजको बदनामी हुन सम्भव। आफूहरूलाई पनि अवगाल आउने। अतः युवराजबाट मृतकको खोजीनिती भएको चित्त बुझेन। यस सम्बन्धमा दरबारियाहरूको एक पेट थियो, उत्तर पनि एउटै, छोटो– 'कुन्नि सरकार!'

सबैले सरकारको जयजयकार मनाए, मानौँ त्यहाँ कुनै अमानवीय वारदात भएकै छैन, सधैँजस्तो मङ्गलमयी स्थिति छ। चारैतिर जयघोष, गीतगोविन्द गाइएको। एकछिनपछि युवराजबाट पुन: सोधनी भयो– 'जङ्गे आएन?' फेरि– 'क्या हो, त्यो साँच्चिकै मऱ्यो कि कसो?'

एक भारदारले सरलसित हात जोऱ्यो– 'काल टार्न कसैले सक्दैन। धर्मराजले लिन आएको होला, टप्प टिप्यो लग्यो!' मुसुक्क हाँस्यो।

युवराजाधिराज झन् चिन्तित देखिए– 'कठै!' चुकचुकाए।

अर्को भारदारको दुर्मुख खुल्यो– 'कसैले नदीमा घचेटेर डुबाइदिएको होइन। आफैँ बहादुरी देखाउन तम्सी-तम्सी हाम फाल्नेलाई केको सहानुभूति सरकार!' थप्यो– 'राम-राम भन्न सकिन्छ, काँध थाप्न सकिँदैन।' फेरि भन्यो– 'नदीले बगाएर बेपत्ता पारिसकेको लासउपर सरकारबाट यत्रो चाख लिइबक्सनु उसमाथि ठूलो निगाह हो। सरकारको रैती-दुनियाँउपरको यो वात्सल्य सदा अजर-अमर रहनेछ।'

किशोर राजकुमारका निम्ति यस्तो चाप्लुसी उनको जीवनपद्धतिमा प्रकृति भइसकेको थियो। उक्त चेप्प्राईँतिर विशेष ध्यान दिएनन्, फौजतिर हेरेर हुकुम दिए– 'तिमीहरू जाओ, जङ्गेलाई खोजेर हाम्रा हजुरमा दाखिल गर।' थपे– 'त्यसलाई लिएर मात्र आउनू। रित्तो हात फर्कनुपर्दैन।' पुन: कराए– 'त्यो मऱ्यो भने तिमीहरू पनि बच्न पाउनेछैनौ। राम्ररी खोज। पत्ता लगाएर ल्याओ।' दुर्बिन पनि हस्तान्तरण गरे।

जङ्गबहादुरलाई जीवित पाउने आशा कसैमा थिएन, तैपनि एक टोली फौज खोज्ने काममा खटियो।

खोजतलास दल नदीको किनारैकिनार गइरहेको थियो। बाटामा पहाड तेर्सिन आइपुग्यो ढसमस्स।

ढसारो डाँडामा माटो कम ढुङ्गा धेरै हुने भएकाले भूक्षयको सम्भावना, साथै दुर्गमनीय। उक्त दाहे भीरलाई परित्याग गरेर फौज दम्स्याइलो पर्वततिर लाग्यो नदीको अर्को तट भेट्न। अग्रगमनका क्रममा तिनीहरू अघिदेखिन् रामदास र लिम्पाले सेबूलाई ढुक्क बसेको बनमारा झाडीको अभिमुख कुइनेटोमाथि आरोहण गरे।

आरोहीले दुर्बिन लगाएर आँखा सामुन्ने हेरे – बनमारा झाडीभित्र दुई जनालाई टड्कारो देखे। त्यहाँ स्थानीय प्रशासनबाट जङ्गबहादुरको शव परीक्षण हुन लागेको ठाने। सनाखत सम्बन्धमा सोधपुछ गर्ने विचारले त्यतातिर ओर्लन थाले।

अत्रान्तरे, मामालाई खाजा पुऱ्याउन हिँडेकी सेर्बू बनमाराको झाडी कर्‍ प्रस्तुत भएको दृश्य फौजले दुर्बिनभित्र देखे तर धुमैलो, पालैसित हेर्न थाले।

सेर्बूले मूल बाटोछेउको रोहोटोमा गोडा पखाली, माथि स्याहारिएको गुन्यू र पेटाङे तल झारी, चप्पल लगाई।

वनभित्रबाट रामदास बाहिर निस्कियो, सोझै सेर्बूसमक्ष उभिन पुग्यो। केही कदम पछाडि छ लिम्पा।

सेर्बूलाई हिंसक जन्तुको मुख परेको जस्तो अत्यास लाग्यो तैपनि गाउँको कटुवालको अदब राख्न आत्मसंयमसित नतमस्तक भई। केही बोलिन, मूल बाटोतिर कदम बढाई।

'पख् सेर्बू!' रामदास मुस्कुरायो। त्यो विषयासक्त मुस्कुराहट देखेर नताङ्गीलाई आजको चार वर्षपूर्व आफू लीलोद्यानको खोजमा जङ्गलभित्र जाँदा बघिनीसित जम्काभेट भएको याद आयो। त्यस विपद्ग्रस्त स्थितिमा आफ्नो प्रेमीले मदतका निम्ति खुकुरी नचाउँदा बघिनीलाई काट्न जाइलागेको पनि अनुस्मरण भयो।

त्यस बेला बघिनीसित डराएझैँ अहिले विकृत दृष्टिको रामदाससित तर्सिई– 'आच्या! छिः!' लामो फड्का चाल्न थाली, पर पुगी।

कटुवालको आग्रहलाई बेवास्ता गर्नु सामाजिक अपराध मानिन्थ्यो, कर्तव्यपथबाट विमुख भएको।

सेर्बू नरोकिएकीमा रामदासले ठूलो अपमान भएको महसुस गऱ्यो, रिसाएर अघि बढ्यो, दुवै बाहु फैलाएर बाटो छेक्यो– 'कहाँ जालास् मछली मेरै ढडिया।' लुलुप्त नजर सेर्बूको सुन्दरतामा गाड्यो तलदेखि माथिसम्म। 'हा...हा...हा...हा...!'

सुन्दरी उम्किन खोज्छे।

अवरोधक हातको फैलावट परिधिलाई झन् विस्तृत पार्छ पूरा गोरेटो ओगट्ने हिसाबले।

यो सङ्घर्ष राष्ट्रसेनाको दुर्बिनभित्र परिरहेको छ छर्लङ्ग।

उनीहरू अङ्ग्रेजको विरोधमा नालापानीको युद्ध लडेका, बम र गोलीको बौछारबाट बाँचेर आएका, अनुभवी योद्धा थिए। बनमाराको झाडीपट्टि शङ्कास्पद हेराइ तिखार्न थाले।

यता रामदासले सेर्बूलाई आशाजनक भविष्यको सपना देखाएर फकाउँदै छ– 'ला, लैजा!' एक मुठी दाम गोजीबाट झिकेर लोभ्याउँछ।

अर्थाभावमा परेका शिक्षाविहीन एकदुई महिला त्यस्तो प्रलोभनमा बिकेको अनुभव छ रामदासलाई। 'पल्केको झिल्के घरी-घरी मिल्के' उखानझैँ महेन्द्रमल्लीको लक्कू देखायो। कहिले वर्षभरिको तिरोभरो माफ गरिदिने कुरा झिक्छ। कहिले चेपारे लयमा आकण्ठ स्नेह प्रकट गर्छ भावुक चोसो पसारेर।

शिक्षाको उज्यालो घाम तापेकी चेतनशील महिला किन त्यस्तो लालचमा फँस्थी। जम्ला हात जोड्दै मामालाई धेरै बेर भोको बस्न नहुने व्यथाको विवरण सुनाएर भाग्न खोछ्यान परेको दृष्टान्तसमेत बढाई-चढाई स्मरण गराई। उसकी माइजूले यो बलजफतबारे थाहा पाएको खण्डमा रामदासले रक्तपातको सामना गर्नुपर्ने चेतावनी पनि दिई अतिशयोक्ति फुटानी गाँसेर।

सावधानीको असर परेन मूढ पेलाहामा, झन् सारो– 'हा ... हा .... हा ...!' दप्कीको धज्जी उडायो– 'बाघले नदेखेको जङ्गल हैन, जङ्गलले नदेखेको बाघ हैन।' टुक्कामिश्रित उपहासद्वारा माइजूको नैतिकतामा प्रश्नचिह्न लगाएर भान्जीलाई गाल्ने प्रयास गर्‍यो।

टस न मस छे भान्जी। स्थिति यसरी सङ्ग्रालिँदै गयो कि आत्मश्लाघी र आत्मरक्षक दुई थरीको तँ-तँ र म-म पर्‍यो, पाखुरा निमोठानिमोठ।

यौनतृष्णाले चुर थियो कृतापराधी। धैर्यको बाँध फुटेछ, जबर्जस्तीको हात बढायो, फरियाको फेर तान्न थाल्यो। कहिले उचाल्न। त्यसभित्र पापी हात पुर्‍याउन बाँकी राखेन, गाला चिमोट्न, छाती समात्न।

प्रतिरोधमा सेर्बूले टोक्न, चिथोर्न, लात हान्न थाली। दुहाई माग्ने विचारले यताउति हेरी।

गाउँलेहरू त्रिशूली नदीले बगाएर ल्याएको मान्छेको सहायतार्थ नदीकिनारमा कुहेर लाग्न पुगेका छन्। बाटोवरपर सुनसान।

यस्तो सन्नाटामा कमजोर लिङ्गीको जोड पुगेन। ठूलो डाँको गरेर 'गुहार!' चिच्च्याउन थाली– 'कटुवाल मोराले हातपात गर्न आँट्यो। लौन नि, लौन ...!'

माथि वन र तल खेतमा एकाध बटुवाको आवतजावत नभएको होइन। तर कटुवालको कोपज्वालामा परिने डरले मदतका निम्ति अघि आउने कोही माईका लाल भएनन्। व्यक्तिसापेक्ष विषयको निहुँ गरेर सुनेकोनसुन्यै बसे लुते कुकुरसमान। कोही देखेकोनदेख्यै हिँडे।

दीनहीन वर्गमा यस्तो हुतीहारा मनोवृत्ति उत्कर्ष भएपछि पोटवाल समूहमा हठसम्भोगको विकृति आउनु स्वाभाविकै हो।

गाउँमा यथेष्ट प्राकृतिक स्रोत छ। निर्मल जल, मलिलो माटो। वन-बनेलो लहलह।

जतातत्तै हरियाली, स्वच्छ हावापानी। सात्त्विक वातावरण। उर्वर उर्वीको कमी छैन, न प्रदूषण।

यस्तो दैवीय देनको बाबजुद गाउँलेहरूलाई परमुखापेक्षी बन्नुपरेको छ – भोकोनाङ्गो, निरक्षर, दलित, पीडित, शोषित।

विचित्र विडम्बना।

सबैतिर अख्तियारवालाको विरुदावली गाइएको। तिनकै हालीमुहाली, इज्जत, धन, सम्पत्ति। गरिबको कोही छैन, केही छैन।

यस्तो सामन्ती समाजमा यो एउटा रामदासले मात्र आफ्नो मुखमा पर्न आएकी दुर्बलालाई किन उम्किन दिन्थ्यो। त्यही पनि खेतीपातीको त्यत्रो चटारोलाई चटक्कै छोडेर आएको प्राचीनकालको माण्डलिकले।

उसले सेर्बूलाई मानवजाति होइन, खेलकुदमा जितेको पदक अथवा आखेटमा पक्रिएको सिकार ठानेको छ। वनभित्र लानका निम्ति गलहत्त्याउन थाल्यो, घिसार्न लाग्यो– घ्वार्र ...।

घिस्याहटमा परेकी बलात्कृतको हातबाट अमखोरा खस्यो। पोटली यताउति छरियो। 'लौन दाइ! मेरो हुर्मत बचाइदिनोस्!' लिम्पाको गोडा छोएर उफ्रन्छे पाखाको माछाझैँ।

लिम्पाको मनमा सेर्बूप्रति मरिसकेको आशा जुर्मुराउँदै उठ्यो।

बालककालमा सँगसँगै वनपात गएको, तार्केघ्याङमा छ्याङ खाएको, रोधीघरमा तामाङसेलो गाएको आदि पुराना बालक्रीडा उसको स्मृतिपटमा आउन थाले। तर के गर्नु? अहिले सेर्बूको तरफदारी गरेमा आफ्नो ज्यान जाने सम्भावना या अङ्गभङ्ग हुने अथवा गाउँबाट उठीबास लाग्नुपर्ने।

केवलाको लाज बचाइमाग्ने साग्रह निवेदन छ, रोदन-क्रन्दन, शारीरिक र मानसिक छटपटी।

'कटुवाल काजी!' लिम्पाले भित्र मनमा सेर्बूप्रति माया, मुखले देखावटी विरोधमा कठोर वाक्य प्रयोग गऱ्यो– 'नालमा हाने मुखमा छिटा। यो कहीँ नबिकेकी नखमौलीका निम्ति तपाईं किन हत्ते हाल्नुहुन्छ?' आश्वासन दियो– 'तपाईंले चाहनुभएमा एकसेएक राम्री कन्या गाउँतिर बाउन्नगन्डा पाइन्छन्।' मालिकका कानमा फुसफुसाउन पुग्यो– 'यो रन्डी हो।' आफूले दुईतीन पटक बिगारेको भूटो आरोप पनि लगायो– 'यसलाई यौनरोग लागेको हुनुपर्छ।' फेरि बोल्यो– 'नछुनोस्।'

'हैन लिम्पा! यो लेकालीको सेखी नतोडी हुँदैन,' आधिकारिक स्वरले अरायो। 'यसलाई जङ्गलतिर तान्, लत्या। लातको भूत बातले मान्दैन।'

नोकरको बुद्धिबर्कतले भेटेसम्म मालिकको मन फिराउन प्रयत्न गऱ्यो। केही सीप लागेन।

उसको दु:खित अन्तस्करण आफसेआफ रुन थाल्यो– 'सेर्बू! हामी गरिबले जन्म लिँदा आमाको कोखभित्र आफ्नो इज्जत, प्रतिष्ठा, सोखसयल सबै छोडेर निस्किएका छौँ। तसर्थ तिमी यो हाम्रो गरिब नसिबमा हुँदै नभएको आबरु बचाइमाग्ने ढिपी किन गर्छ्यौ?' प्रलाप अघि बढ्छ– 'बाँभीले छोरो भन्ने रहर गर्नु व्यर्थ हो। उन्यूको फूल फुल्दैन। ढुङ्गो टुसाउँदैन। त्यस्तै निर्धन पनि न्याय, विवेक र करुणाबाट वञ्चित रहन्छ।' पसिना पुछ्ने बहानामा आँसु पुछ्दै रुन्छ– 'धनीको सामुन्ने दरिद्र सधैँ नाङ्गिएको हुन्छ। तिरस्कृत, उपेक्षित र मर्कामा।'

मुटुमा पत्थर राखेर कटुवालको आदेश मात्र काँपेको हात अघि साऱ्यो। अर्को विकल्प थिएन।

मालिक र नोकरको संयुक्त घिच्याइमा परी नेपालकी छोरी, भविष्यकी आमा।

कपाल भुइँमा लत्रेको छ उसको, गालामा रौँ छरपस्ट। नीलो-कालो मुखाकृति। बलिन्द्रधारा आँसु। न होस ठेगानमा, न वस्त्र। दुहाईको चिच्च्याहटले स्वर सुकेको।

'स्वास्नीमानिसको जात फुटेको कर्म' टुक्कालाई चरितार्थ गर्दै खहरेतानको विस्मयकारी दृश्य राष्ट्रसेनाको नजरमा परिरहेछ। तर खास गलफतीको कारण मेसो पाएका छैनन्, बुङ्ग धूलो उडेको देखे।

अब जननी स्वरमा चिहिरिएको रुन्चे आवाज सुनिन थाल्यो। डकैती, रहजनी हुन लागेकोमा विश्वस्त भए सैनिक। रहजनलाई पक्रने हेतुले ओरालो झर्न थाले लुकीछिपी। लुकुवाहरू सोझै बनमारा झाडी ताकेर आउन लागेको रामदास र लिम्पाले देखे। कान ठाडो पारे।

साश्रुपात सेर्बू आशान्वित भई, भरोसाको लामो सास फेरी। अर्कातिर आततायीको सातोपुत्लो गुम भयो। हातमा टोपी लिएर कुलेलम ठोके।

कुमारीको कुमारित्व बच्यो।





# ११

दोर्जे तामाङको घर, ढुङ्गाको गारो। भुइँतलाको भित्तामा कमेरो र बुइँगलमा रातो माटाले पोतिएको। झ्याल-ढोकामा कालो रङ्ग लागेको। आँगनमा गोबरले लिपपोत।

कौसीमा पञ्चरङ्गी ध्वजा फरफराइएको तर मटमैलो, फाटेको। आवासको पूर्वी पाखामा जोडिएको लाफो तीन भागमा विभाजित, एउटा खण्डमा जेतेमेते थन्काउने भण्डार। अर्को उब्रा। तेस्रो गोठ।

हाता लगभग दुई रोपनी। त्यसको वरिपरि स्याउले बार। तगारो पन्छाएर सेर्बू भित्र पसी भूतप्रेत लागेको जस्तो गरेर थरथर काँप्दै रिस र डरले।

सधैँ घर फर्कनेबित्तिकै सोझै माथि उक्लन्थी बस्तुभाउलाई घाँस-पराल हालिदिन, कहिले सोत्तर-पानी। अनि खाजा पुऱ्याउन लगेका भाँडा माझ्ने, सुकाउन हालेको जडीबुटी थन्कोमन्को लगाउने। त्यसपछि ओथाराको टिपनटापन सम्भालेर माथि चोटामा जान्थी।

आज उसको पुट्ठा पाछिएको छ, रगत चुहिएलाजस्तो। वक्षस्थल दुखेको। गाला-ओठ भबाएको, उपस्थमुनि फहराएको। सर्वाङ्ग थिलोथिलो। स्वर धोद्रो। यही अस्वस्थताको कारणले गर्दा दैनिक कामपट्टि ध्यान दिइन। यतिसम्म कि आफूले खोलेर भित्र पसेको बाँसको तेर्सेबारसमेत थुन्न बिर्सी।

बरु ऊ आएको आभास भएछ भैँसीलाई 'आइँ ... आइँ ... आ...इँ ...' स्वर सुनायो।

माउको देखासिकीमा पाडापाडी पनि कराए।

सेर्बूले वास्ता गरिन। बुइँगलमा उक्लिई हम्मे-हम्मे। हातको सिलोबालो एकातिर थन्काई।

माइजूले ढाडमुनि छोटो फरिया टाँसेकी। चाउरे मुख, सेतै फुलेको कपाल, दन्तहीन गिजा।

थोते बूढीसित चार आँखा हुनेबित्तिकै भान्जीको स्वरभङ्ग गलाबाट वाक्य निक्लनुभन्दा आँसु पिलपिलाउन थाल्यो– 'हेर्नोस् न माइजू! भाँडा लिन जानुपर्छ।'

'कहाँ?'

उत्तर दिनु कता हो कता, मनको बह वमन गर्न थाली भान्जी– 'मोराले कसरी सकेको?' अदृश्य मोरातिर धारे हात देखाएर धोद्रो स्वरले सराप्न थाली– 'त्यसको हात डुँडुलो भइजाओस्। कीरा परोस्। बिफरिया बजिया!' त्यही रूखो सासले– 'खसे मुर्दाको तालुको छाला पैतालामा नपुऱ्याई छोड्दिनँ।' प्रतिशोधको भावले अपशब्द बोल्न थाली– 'त्यसको उछितो होस्, खसे बजिया! मरिज़ाओस्!'

'के भयो?'

'के भएन भन्नोस् न माइजू!' आफ्नो चिथ्रेको चोलो र गुन्यू देखाई भान्जीले– 'ठाम-कुठाममा हात पुऱ्याएर महारोगी हातले मेरो लुगा च्यातिदियो।' भोक्किई।

यस्तो गनगन पहिले पनि माइजूका कानमा नपरेको होइन यदाकदा। तर यस पल्टको विलाप बीभत्स छ। माइजूको मनमा एकाएक जलन पैदा हुन पुगेछ। त्यो मानसिक डाह मत्थर पार्ने हेतुले आतेसमा अगेनाबाट बलेको दाउरो थुती जुरुक्क उठेर– 'को हो त्यो खस?' पापीलाई पिट्न अगुल्टो उज्याई।

'अरू को हुन्थ्यो? त्यही कटुवाल भइखाएको रामदासे सैतान!'

सैतानको मानबोधक नाम उल्लेख भएको सुनेर माइजूको हंसले ठाउँ छोडेछ। डराएर जिब्रो टोकी, हातको अगुल्टो चुलोभित्र पुनः हुली। ओठमाथि चोर औँलो ठड्याएर 'चुप!' को इसारा गरी आँखा तरेर।

माइजूको दैनिक जीवनमा भान्जीको जडीबुटी व्यापार प्रवर्द्धनबाट टेवा मिलेको छ। त्यसैले मावलमा फुरफुरिएर पालिएकी छ भान्जी। नचाहिँदो कुरामा कसैसित दब्दिन। ठाडै जवाफ दिई– 'किन चुप? यो राजा नभएको देश हो र?' घोक्रो स्वर अवरुद्ध भएछ, गुन्यूको फेरले आँसु पुछ्न लागी।

उसको खातिर दोर्जे तामाङ र जिम्वाल बाजेबीच काटोछिनो परेको छ। बोलचाल बन्द। त्यस वैरभावको प्रतिफल स्थानीय प्रशासनबाट तामाङ परिवारलाई

उठीबासको धम्की आइरहेको छ। फगत दोर्जेले लामा काम गर्ने, असिनापानीको प्रकोप टार्ने, साथै वैद्यराज कहलाइएकाले र आजभोलि दुईचार पैसा खेलाउन सक्ने हुनाले तामाङ परिवार गाउँमा टिक्न सकेको, अन्यथा नेटो काटिसक्ने। आफ्नो यस्तो धुकचुकको स्थितिमा कटुवालसित दुस्मनी मोल्नु पानीभित्र गोहीसँग जोरी खोज्नुसमान मूर्खता थियो। त्यही मुर्ख्याइँबारे सम्झाइबुझाइ गर्न सानो स्वरले भान्जीको विरोध गरी माइजूले, 'यही गाउँ हाम्रा निम्ति नेपाल हो। यिनै रामदास कटुवाल, जिम्वाल बाजे हाम्रा राजा हुन्!'

'हैन,' सेर्बू बीचमा पड्की– 'हाम्रा राजा काठमाडौँमा राज गरिबक्सनुहुन्छ।' जोसले थपी– 'यो रामदासे गाउँघरमा उर्दीपुर्जी सुनाउने कामका निम्ति भर्ना भएको सरकारी कर्मचारी हो।'

'राजा यहाँ आउँदैनन्। देवता बोल्दैनन्,' आतङ्कित भान्जीलाई साथमा बसालेर आँसु पुछिदिन लागी माइजू। 'काजीले के भन्नुभयो? केमा तिम्रो चित्त दुख्यो?'

आफूमाथि हठसम्भोगको असफल प्रयास गरिएको दुखेसो पोखी भान्जीले रुँदै।

माइजू पर्णकुटीकी कन्या थिई। वयस्क नहुँदैमा यस्तै परिबन्दको मारमा परेकी। भाग्थी, लुक्थी, दुःख पुकार्थी, हात जोड्थी। त्यो अनुनयविनयको ठूलाठालू भनाउँदामाथि केही प्रभाव पर्दैनथ्यो। झन् सारो कामुक हुन्थे।

कहिले गोरेटोमा एक्लै भेटे वनतिर लाने। त्यतिखेर फुत्किए राति घर-छाप्राको छानो उघारेर भित्र छिर्न आउने।

विरोधको ठूलो स्वर गरेमा केटीको बदनामी हुने। लोग्नेमानिसलाई केही न केही। यस्तो पुरुषप्रधान समाजमा ६०–७० वसन्त पार गरिसकेकी बूढीमाउ आज सैनिक दल आएर भान्जीलाई सुरक्षा प्रदान गरेको तथ्य वर्णनमाथि विश्वास गर्दिन। त्यही पनि रामदासजस्तो दादाको बाघपन्जाबाट। अपत्यारको ओठ लेप्र्याएर सोधी– 'त्यस्तो कालाबन्जारबीच कहाँबाट ख्यास्सिन आइपुगे ती पल्टनियाँ। फेरि यहाँ गस्ती आउने चलन छैन। न पुलिस चौकी छ, न सैनिक अड्डा।'

'सिपाहीहरू अघि त्रिशूली नदीले बगाएर ल्याएको मान्छेलाई खोज्न आएका' भन्ने खलबली सेर्बूका कानमा घुइरो-घुइरो परिसकेको थियो। साथै उक्त प्रवाहित

व्यक्ति काठमाडौँनिवासी भएको र घोडासहित पुलबाट हाम फालेको समेत सुनिसकेकी। तर कुन बाध्यताले त्यस्तो काम गर्नुपरेको हो, थाहा पाएकी छैन।

जेसुकै होस्, त्यो आकस्मिक घटनामा पर्ने बबुरो पनि काठमाडौँवासी, आफ्नो प्रेमी पनि काठमाडौँकै रैथाने। यी दुई काठमाडौँलीबीच जानपहिचान हुन सक्ने धारणाले सेर्बू त्यो जलप्रवाहमा परेको काठमाडौँली बरोसँग साक्षात्कार गर्न चाहन्छे आफ्नो प्रेमीको हुलिया लिन, कुराकानीको विषयान्तर गरी– 'माइजू, त्यो अघि बगाएर ल्याएको मान्छे मऱ्यो कि बाँच्यो?'

'आच्या, किन मर्थ्यो?' भान्जीका आँखामा आफ्ना उदेकले ट्वाल्लिएका आँखा मिलाएर बूढी बोली– 'ऊ यहीँ हामीकहाँ सुस्ताउन आएको छ।'

यमराजको दैलोसम्म पुगेको निथाचूर्ण घायलले त्राण पाएकोमा सेर्बू सुसी हुनु मनासिब हो। उज्यालो मुख पारेर सोधी– 'खै कहाँ छ?' करेसाबारीतिर तलासी नजर पुऱ्याई।

'पाहुना बस्ने स्थान, कोठा छाड्यामा थकाइ मार्न बसेको छ,' प्वाक्क बोली माइजू।

'ओहो!' घृणाको नाक खुम्च्याएर अप्रसन्नता प्रकट गरी भान्जीले– 'के जातको हो? त्यो पाहुनाकोठामा आजभोलि मैले पूजासामान राख्ने गरेकी छु।' फेरि– 'अछुत हो कि?'

'होइन, जनै लगाएको छ। छेत्री होला।'

आफ्नो प्रेमी पनि तागाधारी, पाहुना पनि द्विजाति। दुवै काठमाडौँली। अब पाहुनालाई भेट्न झन् उत्सुक भई भान्जी। तर त्यो सकसकी प्रकट गरिन।

'यो मकै उसैलाई भुटिदिन लागेको,' माइजू मकै भुट्न व्यस्त भई।

'काठमाडौँलीलाई मकै?' सहरियाका निम्ति अरुचिकर खाद्य पदार्थ दिन लागेकोमा भान्जी लजाई– 'छिः!'

'यो च्याइँ मकै हो। नेपालेलाई औधी मन पर्छ,' अलौटे मकैको विशेषताबारे व्याख्या गर्दै हाँडीभित्र नजर गाडी माइजूले। 'बिचरा अघि दुई पटक पानी वमन गऱ्यो। पेट खाली भयो होला।' पुनः ओराल्न थाली– 'लौन, यति भुट्टा तल पाहुनालाई पुऱ्याइदेऊ नानी!' फेरि बोली– 'म तिम्रा मामाका निम्ति अर्को घान हाल्छु।'

'हुन्छ।'

नानीले स्वीकृतिको मुन्टो हल्लाई। बलात्कारीको घिस्राइमा धस्रिएको गुन्यू फुकालेर नयाँ फेर्नका निम्ति सन्दुक उघारी। त्यसभित्र चार वर्षपूर्व त्रिशूलीघाटमा प्रेमीले धुन छाडेर गएको पुरानो फाटो थियो – भोटो, लँगौटी र टोपी। ती लुगाफाटेलाई जङ्गी पोसाक थन्काउने पाराले जतनसित राखेकी थिई। ती लत्ताकपडा देखेर प्रेमीको याद आएछ, छातीमा च्यापेर चुम्बन गरी। गालामा जोडेर मायालु स्मृतिमा आँखा चिम्लिरही।

अब उसको मनमा बलात्कारकाण्डको जलन मत्थर भएको छ। अघिको ताप सामसुम। मानौँ कुनै अप्रिय घटना भएकै थिएन। छ केवल शारीरिक दर्द र पाहुनाबाट आफ्नो प्रेमीको नामधामको पत्तो पाउने उत्सुकता। साथै दुईचार दिनमा प्रेमपत्र आदानप्रदान हुने सम्भावनाको मीठो सपना। काठमाडौँ गएर प्रियतमसित भेट पाउने भविष्यको रमाइलो कल्पना। गुत्र थाली– 'यो पाहुना आफ्नो प्रेमीको छिमेकी हुन सक्छ। नाताकुटुम्ब पनि।'

आफन्तको सामुन्ने देखा पर्न लर्तरो हिसाबले जानु भएन। मुख राम्ररी धोइपखाली। सगुनका निम्ति रातो अछेताको टीको लगाई। नेत्रकोसमा गाजल। छाला सुन्दर र मुलायम पार्न श्रीखण्डचूर्णलेप मुखमा दली मिल्ने गरेर।

सहरिया चलनअनुसार सलक्क कपाल कोरेर चिल्लो आँठो पछाडि पिठ्यूँमा झारी। निधारमाथि अलक लर्काई।

सुनको मुन्द्री, फूली र नाडीमा चाँदीको बाला हुली। जुरोमा लालीगुराँस घुसारी। तब ढकीभरि खाजा लिएर लाहासमा ओर्लिई।

ओद्रो भित्रबाट अग्ल्याइएको रहेछ। भान्जीले पलेटो घचघच्याई।

अन्तरबाट प्रतिचार आएन। तब खापाको ताल दुलोबाट भित्र चियाई।

उसले भन्ठानेकी थिई दूरागत बूढो मानिस होला ५०–५५ वर्षको। लुगा हिलोले लतपत, मुसो भिजेको जस्तो निथाचूर्ण। तर अनुमानको विपरीत परदेशी २०–२५ वर्षको युवा रहेछ मसलयुक्त, लँगौटीधारी।

आजको चार वर्षपूर्व आफू बाबुको घरबाट मावल जान लाग्दा बाटोछेउ जङ्गलमा निदाइराखेको सुतुवा जसको शिरमाथि बडेमानको सर्प कुण्डलाकारमा

बेरिएर बसेको थियो फणा फुलाएर। त्यो निर्जन वनदेखि त्रिशूलीघाटसम्म सँगसँगै आउने सहयात्री। आफूलाई बघिनीको आक्रमणबाट बचाउने रक्षक।

त्राताका तेजिला आँखा, ठूलो निधार, सेतो आङमा छडोरे जनै र छातीमा रौँको दायाँ भुमरीको गुजुल्टो श्रीवत्स चिह्न देखेपछि सेर्बूले आफ्नो हृदयदेवलाई नचिन्ने प्रश्नै थिएन। उत्ति नै खेरि ठम्याई। साथै उसको र आफ्नो बिछोड हुँदाको दिनमा उसले आफूलाई भारत लाने आश्वासन दिएको वचनमुताबिक लिन आएको भ्रममा परी।

खुसीको सीमा रहेन उसको। आँखासामु प्रेममिलनको आनन्दित संसार सृष्टि भयो। चारैतिर जाईजुही, चमेली, लालुपाते, गुराँस, सुनाखरी, सुनगाभा ढकमक्क फुले। कोइलीको कुहु-कुहु सुन्छे। कस्तूरी मल्लिकाको बास आयो। उमङ्गले सेर्बू ढोकाको फग्लैँटोमा छिटोछिटो ट्वाक-ट्वाक मुड्काउँछे यथाशीघ्र खुलाउन।

प्रेमीको अर्द्धनग्न देह र चिसोले लुगलुगाएको स्थिति देखेर उसको भोटो, लँगौटी र टोपी आफूले बाकसमा थन्काइराखेको याद भएछ सेर्बूलाई। माथिबाट ल्याएर ती पुराना फाटा हस्तान्तरण गरिदिने विचार पनि आयो। तर पहिले प्रेमीको नाङ्गो आङमा लिप्सन चाहन्छे, अँगालेर चुम्न।

प्रेमी र रामकृष्ण महाजन व्याघ्रचर्म ल्याउनका निम्ति जङ्गलतिर गएका थिए। तर यिनीहरू निर्दिष्ट स्थानमा पुग्नुअगावै बघिनीको सिनो स्याल र गिद्धले भान्छा गरिसकेका। डमरु पनि थिएन।

महाजन निराश भयो। ऋण दिएन। अब रिनाहालाई पुँजी न सुँजी लाहुर जान असम्भव। वनारसतिर लाग्यो।

त्यहाँ पनि पढलेख नगरेकाले 'बाँदरको पुच्छर लौरो न हतियार' भयो। काठमाडौँ फर्कियो।

श्री ५ महाराजाधिराज राजेन्द्रको हिउँदे सिकारमा यो ङिच्चे आफ्नो भाग्य अजमाउन सवारीसाथसाथ ठोरी पुग्यो।

मृगया-कटकमा जङ्गली हात्तीलाई फन्दा हाल्ने काम सबैभन्दा गाह्रो हो, जोखिमी। ज्यानको माया मार्नुपर्ने। त्यस्तो खतरापूर्ण काममा सफलीभूत भएबापत उसले पुनर्बहाली पायो, कप्तान।

त्यही वर्ष कप्तानले अनेकौँ पौरख देखायो। जस्तो कि काठमाडौँ सहरभित्र एउटा घरमा आगलागी भएको थियो। अन्तर्खण्डमा पसेर घरपटी आमा-छोरालाई बचायो।

मनहरा खोलाले बगाएर लगेका दुइटी आइमाईको उद्धार गऱ्यो।

एक दिन काठमाडौँ सहरभित्र चितुवा पसेकाले हाहाकार मच्चियो। त्यो डरलाग्दो जन्तुलाई खाली हातले पक्रेर राजदरबारमा चढाउन लग्यो। अर्को घटना, श्री ५ राजेन्द्र दहचोकमा चितुवाले दुःख दिएको समाचार पाएर मार्न गएका थिए। कप्तान पनि चाकरीमा त्यहीँ पुग्यो।

झोराको काम सुरु भयो। जनावरले घेराबाट उम्किएर एक जना सिकारीलाई लडाइदियो। दुईचार जनालाई घाइते पाऱ्यो, कोही भागे।

कप्तान अघि सऱ्यो। तरबारको एक प्रहारले चितुवालाई दुई टुक्रा पारिदियो।

फेरि अर्को दिन राजधानी अवस्थित हात्तीसारमा एउटा दतारको माथ फुटेछ। माहुते र दुई जना बटुवालाई मारेर सहरभित्र विध्वंस पार्दै हिँड्न थाल्यो।

यस किसिमका आतङ्ककारी स्तनपायी जन्तुलाई पक्रन कसैको हिम्मत थिएन। तर कप्तानले झ्यालबाट हाम फालेर विनाशकारी हात्तीको काँधमा राग लिन पुग्यो, तहमा ल्याउन सफल भयो।

अर्को साल देवीघाटमा भयङ्कर हत्याकाण्ड मच्चियो। मारकाट रोक्नका निम्ति केन्द्रबाट दुई पटक कर्मचारी खटिए। कामयाब हुन नसकेर फिर्ता आए। तेस्रो पटक यो कप्तानको नेतृत्वमा गएको टोली शान्ति कायम गर्न सफल भयो।

यस पल्ट पनि युवराजाधिराज यता त्रिशूली सवारी हुँदा बाटोमा मौसुफ सरकारको घोडा नराम्ररी ठक्कर खाएको थियो। त्यस घोडालाई कप्तानले जतनसित थेगेर युवराजाधिराजलाई दुर्घटना पर्नबाट बचायो।

आफूले गरेको काम एकपछि अर्को फत्ते हुँदै आएको पृष्ठभूमिमा मक्ख थियो कप्तान। भाग्योदय हुनेमा आशान्वित पनि। परन्तु ती आत्मविश्वासको विपरीत आज युवराजाधिराज सुरेन्द्रको करकापबाट त्रिशूली पुलदेखि घोडासहित फाल हाल्नुपरेकाले साह्रै सशङ्कित भएको छ। कहीँ राज्याधिकारमा रहेका पाँडे भारदारहरूले उसको विरुद्ध रचेको कपटपूर्ण आयोजनाको घातक सूत्रपात हो कि?

यस्तो मानसिक क्षोभमा भुटभुटिएकाले यो घरभित्र पसेको हो शान्तिको शरणमा। आखिर यहाँ पनि बाहिरबाट खापा ढकढक्याएको आवाजले ऊभित्रको अमनचैन खलबलिन थाल्यो– उसलाई मार्न हत्यारा खटिएर आएको हो कि? तर्सियो।

दैलो नउघार्नका निम्ति निदाएको बहाना गरेर घुर्न थाल्यो– घ्वार्र-घ्वार्र।

घुरन्तेलाई जङ्गलछेउ निदाएको देखेकी थिई सेर्बूले, त्यही दिनदेखि 'यो मान्छे एक नम्बरको सुताहा' भने परेको छ उसको मनमा। तर पनि अहिले देखादेखी आँखा चिम्लनेबित्तिकै गाढा निद्रामा परेको पत्याइन, जिस्केको ठानी।

अरू बढी तीक्ष्ण दृष्टि तिखारेर जिस्काहाको शिरमा विगत जङ्गलको घटनामा जस्तो सर्प बेरिएर बसेको छ कि हेर्न थाली।

सुतुवाको टाउकोमाथि कुनै जीव देखिन। आगतपतिकाले बरु गिज्याउनका निम्ति कुम्भकर्णको सञ्ज्ञा दिएर बोलाउने रहर लागेछ। पछि फेरि अर्कै विचार गरी 'ए पोइ!' जिस्काउने।

माथि बुइँगल चोटामा माइजूको उपस्थितिले गर्दा र आफ्रो स्वर बसेको बेलामा त्यो मनोविनोद समयसापेक्ष थिएन, हच्किई। छिल्लिनेतिर लागिन।

ट्वाक-ट्वाक! कामको कुरा सुनाई– 'माइजूले खाजा पठाउनुभाको छ।' आँखा झिम्काएर– 'तपाईंलाई लाग्छ कि?'

भोकले आगन्तुकको पेटमा सितार बजिरहेको थियो। खाने कुराको नामपरक शब्द सुन्नेबित्तिकै जिब्रो रसायो। किशोरीको श्रुतिमधुर स्वर पनि अर्को आकर्षण भयो, बिस्तारै खाटबाट उठ्यो, अनुप्राणित पाइला सार्दै दैलोमा पुग्यो, जुम्सो हातले आग्लो साऱ्यो। द्वार खोल्यो।

उसको धारणा थियो, घरपटी भान्जी अरू गाउँले जस्तै एकवस्त्रा होली, झुत्रीझात्री। मयलयुक्त। कपाल लिसो गनाउने। लिखाको छाप। धूवाँ-पसिनाको हरक आउने। हातगोडा फुटेका। असुग्घरी।

त्यस्तो गतिहीन स्थिति देखिएन घरपटी भान्जीको।

सहरिया केटीकी प्रतिमूर्ति थिई ऊ, हातमा अर्नीको ढकी।

गाउँको रीतिअनुसार नारीजातिका निम्ति एउटा आच्छादले शरीरको तलमाथि छोप्ने पहिरनको चलन थियो। लोग्नेछोराले ठाडो लँगौटी आत्मसात् गरे पुग्ने। त्यसै

कारण कौपीनधारी पाहुनासँग साक्षात्कार गर्न सङ्कोच मान्नुपरेन घरपटी भान्जीले, निर्धक्क कोठाभित्र पसी। आगतपतिकाको हिमचिमे दृष्टि र मन्द मुस्कान एकैसाथ फैलिए।

रामकृष्ण महाजनसँग जङ्गलतिर प्रस्थान गरेको दिनमा फर्केर आउने गोप्य इसारा गरेको आश्वासन भङ्ग भएकोमा गुनासो पोख्न चाहन्छे आगतपतिका, रिस देखाउन गजक्क परी।

परन्तु आगोको सामुन्ने घिउ पग्लने प्राकृतिक नियमअनुसार प्रेमीको सामीप्यले उत्तेजित भई, रोमाञ्चित कम्पन आयो। जिब्रो सुक्यो। चिटचिट पसिना उम्रियो, हर्षाश्रु काढी, साथै यौवनपुष्प। कर्कश स्वर, बोल्न सकिन।

थरथराएको हातले दोपहरे अर्पण गरी, मुस्काई।

नताङ्गिनीको प्रोज्ज्वलित चेहरा प्रस्ट देखियो। शिरपछाडिको रोमपुञ्जमा शृङ्गारसज्जा। मुखमा लिपपोत।

आगन्तुकले चिन्न सकेन।

उसकी परिचित सेर्बू अब घाँस काट्ने काम गर्दिन। न डोको बोक्छे। आयमूलक उद्यमको लगनशीलताले उसलाई व्यवसायी बनाएको छ। स्वावलम्बी पनि।

शुद्ध नेपाली बोल्ने। पहिरन सहरिया। यतिसम्म कि उहिले दाँतमा लगाएको बिरी खुर्किएर फालिसकेकी छ। अहिले ३२ दन्त दूधको थोपाजस्ता एकछट्या श्वेत देखिन्छन्। झलल्ल।

ख्याउटी थिई, अब हलक्क बढेकी। जीउ लागेको, बारुले कम्मर, हिस्सी खाल्टे गाला, टुप्पा लाल। चुच्चो छाती। मदमस्त नयन। बान्की परेको नितम्ब। सौन्दर्यले परिपूर्ण, परिष्कृत जवानी। स्वरमा माधुर्य, सुरभिता।

यस्ती एकाएक साटिएकी सिंहोदरीजस्तीलाई कसरी पहिचान्नु? बरु चिन्नु न जान्नुकी घरपटी भान्जी हिमचिमी आँखा लिएर नजिक टाँसिन आएकीमा उसलाई उत्ताउली ठान्यो। तर घरपटी जनानामाथि कुदृष्टि दिन नहुने भएकाले संयमसाथ मकै चपाउन थाल्यो, आक्रमणकारी हरकत देखाएन।

प्रथम पटकको भेटमा दिनदहाडै त्यही पनि बीचबाटोमा आफ्नो तिघ्रामुनि औँला छिराएर सामाजिक मर्यादाको सीमा उल्लङ्घन गर्न खोज्ने यो नकच्चरो अहिले

एकान्त कोठामा किन अनुशासनात्मक आचरण बर्तन्छ। उहिले त्रिशूलीघाटबाट छुट्टिँदा भोलिपल्ट फर्केर भेट्न आउने आश्वासन पूरा गर्न नसकेकोमा उसले क्षमायाचना गर्नुपर्ने हो। त्यसपछि प्रेमालिङ्गन। तर त्यस्तो कामुकता रत्तीभर देखाएन। भलामनसियताको आडम्बरमा गम्म छ, वीतराग।

यो निष्काम मौनता र सौजन्यको कारण बुझ्न सकिन सेर्बूले, सोच्न लागी।

छिनभरको मननपश्चात् कता-कता आफूलाई प्रेमीले पहिचान्न नसकेको आभास भएछ, लेग्रो तानेर सोधी– 'क्या हो, यो मान्छेले मलाई ठम्याउन नसकेको हो कि?' उसबाट दुईतीन सन्तान जन्माइसकेकी माउले लोग्नेमाथि हैकम चलाउने पाराले– 'के तपाईंले मलाई चिन्न सक्नुभएन?' कुहिनाले घचघच्याई– 'छि:!' मुसुक्क हाँसी।

प्राश्निकको हँसिलो मुखमा आँखा गाढेर हेर्छ बिर्सुवा।

एकातिर सेर्बूमा त्यत्रो परिष्कार। अर्कातर्फ उसको विरुद्ध रामकृष्ण महाजनले यो विधारानीका कानमा विष वमन गरेको थियो पतिता, नैतिक पतन भएकी, काठमाडौँबाट आउने जतिको पेवा आदि नचाहिँदो बात लगाएर। अत: त्यही बिछोडको दिनदेखि यो एक दिनकी सहयात्रीप्रति भुलक्कडको सम्झना मरिसकेको छ। बाटामा पाइएको ढुङ्गा बाटामै हराएको जस्तो।

अहिले चिन्न नसकेको साँचो हो। परन्तु त्यो विस्मृतिबाट यी दुई जोलाबीचको सम्बन्धमा केही फरक पर्नेवाला छैन, किनकि एक दिनकी सहयात्री घाँसी सेर्बूलाई याद गर्न नसके पनि घरपटी भान्जी सेर्बूमाथि उस्तै लालायित भयो आगन्तुक। साथै यो मनोहारिणीलाई कतै देखेको झझल्को लागेछ, मक्कै चपाउँदै सम्झिन थाल्यो।

उसलाई अघि नदीको भेलले किनारामा मिल्काएको बखतमा बगालै गाउँले सहानुभूति प्रकट गर्न पुगेका थिए। कोही झारफुक गर्ने, कुनै भूतप्रेत मन्छाउने। पानी पेट थिचेर वमन गराउने। तिनै परोपकारीमध्येकी यो भान्जी पनि एउटी परहितकारी भएकी र त्यही नदी क्षेत्रीय भूभागमा कतै देखादेख भएकोबारे चर्चा गरेकी भन्ने मिथ्याबोध गऱ्यो परोपकृतले। तब चिन्दै नचिनेकी मनमतीलाई फसाउने उद्देश्यले कृत्रिम जाल बिछ्यायो– 'तपाईंलाई किन नचिन्नु? देख्नेबित्तिकै टड्कारै पहिचानेँ।' फटाहा कुरा गऱ्यो।

मतिभ्रान्ति मानवीय कमजोरी हो, त्यसमा पनि गाउँले केटी। सेर्बूलाई आफू दुई प्रेमी-प्रेमिकाबीचको प्रथम भेट र प्रेमीको हिन्दुस्तानबाट फर्केर लिन आउने आश्वासन आदि घटनावली सम्झना हुन्छ एकपछि अर्को।

उता स्मृतिलोपले चिप्लो घस्दै बोल्छ– 'तपाईंलाई नचिनेको भए यहाँसम्म तपाईंको घर खोजी-खोजी किन आउँथें?' कुरा बनायो– 'सात जन्मसम्म पनि तपाईंलाई बिर्सिन सक्दिनँ।' मुखमा मकैको अर्को फाँक हाल्यो।

जे होस्, उपर्युक्त मायालु वाक्य सुन्ने तिर्सनामा छटपटिँदै झन्डैले त्रिशूली नदीमा फाल हालेर मरेकी थिई प्रेमप्यासी। अहिले आत्मबिभोर भई। त्यही मानसिक स्निग्धतामा चिप्लँदै सोध्न पुगी– 'के म तपाईंको नाम जान्न सक्छु? जहिले पनि सोध्न बिर्सदो रहेछु। भन्नोस् न, कान पवित्र पारौँ!' आँखामा आँखा मिलाएर मस्किई, स्वर खुलाउन खोकी।

बिर्साहा जन्मेको पल र घडीअनुसार 'वीरनरसिंह' नाम जुरेको थियो। जन्मकुण्डलीमा त्यही नाम लेखिएको छ।

तर ऊ मूल नक्षत्रको अवधिमा जन्मेकाले उसलाई आफ्नो स्ववासी घरमा राख्न भएन। बाबु काजी बालनरसिंहले नवजात शिशुलाई सालनालसहित ससुरालीमा पाल्न पठाए। बाल्यावस्थादेखि नै मुल्याहाको जङ्गी स्वभाव हुँदै आएकाले उसका मामा माथवरसिंहले 'जङ्गे' भन्न थाले। त्यो उपनाम अपभ्रंश भएर 'जङ्गबहादुर' सञ्ज्ञाले प्रख्यात हुन पुग्यो।

आजको यो गुप्तवास, त्यसमा पनि गति न पतिको हालत। फेरि घरपटी भान्जीलाई धोका दिएर उम्कनुपर्ने यौनशोषणको स्थितिमा आफ्नो 'जङ्गबहादुर' ख्यातिप्राप्त नाम बिक्ला भन्ने डरले चिनाको चाहिँ बतायो– 'मेरो नाम वीरनरसिंह हो।'

'वीरनरसिंह' शब्द मनमनै घोक्न थाली प्रेमिका। कण्ठ पारी। पछि फेरि प्रश्न गरी– 'तपाईंले त्रिशूली पुलबाट फाल हाल्नुभाको भने सुनेकी थिएँ। हो?'

'अँ, हो।'

'किन त्यसो गर्नुभाको?'

त्रिशूली पुलकाण्डको यथार्थ वर्णन गरेमा युवराजाधिराजको जघन्य ज्यादतीको पर्दाफास हुने। ईश्वरीय निन्दाजस्तो। पाप लाग्ने पनि। मौन बसेमा

आफूप्रति समर्पित सुन्दरीको मुखबाट प्रस्फुटित आत्मीय जिज्ञासा अनुत्तरित रहने। द्विविधामा पऱ्यो वीरनरसिंह– 'के भनौँ?' खाजा चपाउँदै थियो, मस्तिष्कमा सानो वीरसिक्का रचना भएछ। अर्को सफेद झूट बोल्यो– 'यहाँ तपाईंकहाँ आउने बाटो नदेखेर पुलबाट फाल हाल्नुपरेको।' थप्यो– 'झन्डैले मरेथेँ।'

अक्षरशः पत्याई प्रेमान्धीले।

पहिले पनि उसका निम्ति यो मान्छेले बघिनीसित भिडन्त गरेको हत्केलामा ज्यान राखेर। आज पनि पुलबाट हाम फाल्ने खतरा मोलेकोमा सेर्बू प्रत्यक्ष प्रभावित भई– 'कठै!' रुन्चे स्वरले आभार व्यक्त गर्न प्रेमीका गोडामा छाँद हालेर प्रेमाश्रु पिलपिलाउन थाली– 'नदीले बगाएको भए।' जिब्रो काढी– 'त्यसो गर्न हुन्छ? मरिँदैन?'

'तपाईंका निम्ति मर्न तयार छु। रातदिन तपाईंको याद आइरहन्छ। बहुलाउन मात्र बाँकी छु। त्यसै कारण त्रिशूलीमा फाल हालेको।'

सहरियाको बेसारे कुराले गाउँले चरीको सरल हृदय चुम्न पुगेछ। खुत्रुक्क लडी, चारचित परी।

वास्तवमा यो सहरिया कालको मुखबाट साँच्चिकै बालबाल बचेर यहाँ आएको हो विश्रामका निम्ति। जीउधन र बिँडो जोगाउने समस्या र समाधानको सोचमा डुबेको थियो। अहिले पुरुषसुलभ प्राकृतिक कमजोरीको कारणले गर्दा उसमा वासनाको भोग जुर्मुराउँदै उठ्यो। घरपटी भान्जीलाई 'अजिँगरको आहार दैवले पुऱ्याएको' ठानेर हाम गर्न मुख बायो तनमन फुलाएर।

त्यति बेला माइजू लोग्नेलाई खाजा पुऱ्याउने तरखरमा तल ओर्ली? मझेरीमा पालीखण्डनेर खासखुस कुरा गर्न लागेको मन्द स्वर कानमा परेछ. सजग भई। भान्जीको पात्तिएको हाँसो सुनी। ख्रित्कातिर मोडिई। गवाक्षको प्वालबाट कर्के आँखाले भित्रको चीरहरणलीला देखी।

बल्ल उसलाई भान्जीले राष्ट्रभाषामा कुरा गर्ने बानी बसालेको रहस्य प्रस्ट भयो, तर 'कस्ता-कस्ता कहाँ गए, मुसाको छोरो देवान' उक्तिअनुसार आफ्नो गाउँको कटुवाल, जिम्मावाल, धनी र ठूलाठालू आदि लखेश्वरलाई छोडेर कहाँ-कहाँको तन्नमभगत लँगौटीधारीसित पोइल जान आँटेकी, चित्त बुझेन। जातिविरुद्ध काम ठानी, असामाजिक।

'सिउ,' तरकारी बारीमा पसेको बस्तुभाउ धपाउने बहानाले स्वर सुनाई, प्याट–प्याट थपडी मारी। वस्तुतथ्य तनाहालाई यथाशीघ्र भान्जीको निकटताबाट पन्छाउनु थियो, कराई– 'अर्गला खुलै रहेछ। बाख्रा आएर नाश पारिसके।'

कौपीनधारी सावधान भयो। आश्रय लिएको घरमा निषिद्ध कार्य गर्न उचित लागेनछ, प्रेमपाशबाट फुस्किएर बाहिर भाग्यो, एकलासको खोजमा कुलेलम ठोक्यो।

सेर्बू पछि लाग्दी हो। तर रामदासको लछारपछारमा परेकाले थिलीबिली स्थिति छ। दगुर्न सकिन।

'विगत प्रेमबिछोडको दुःखदायी घटना दोहोरिने हो कि?' खिसिक्क परी। अतृप्त नजरले प्रेमी सुइँकुच्चा ठोकेको दिशातिर हेरिरही।

सुइँकुच्चेले जङ्गलभित्र पस्न लागेको बेलामा पछाडि फर्केर हेऱ्यो, कामिनीको उत्तेजित रातो मुख देख्यो। मुसुक्क हाँस्यो। त्यो मन्द मुस्कानको आभ्यन्तरिक आशय थियो भोगिनीलाई डाकेको न्यानो निमन्त्रणा।

निमन्त्रितले इसारा बुझिछ। स्वीकृतिमा मुन्टो हल्लाई। तत्क्षण माइजूले चियो गरेको देखिछ। आँखा जुधे।

'आइँ, आइँ!' भैँसी तिर्खाएको पनि सुनी। गोठतिर गई।

उता निमन्त्रकलाई निम्तारुले बस्तुभाउलाई घाँसपानी गर्न लागेको मेसो छैन। आफ्नो पछि लागेर आउनेमा विश्वस्त छ। अतः आङभरि रतिरागको कामुक प्वाँख उम्रेको अनुभव गऱ्यो। सुनौलो अनुरागको नीलो नभमा उडेको, आनन्दमासको तितरीपङ्खी बादलमा अकासिएको।

उसले खोज्दै गएको लीलोद्याननेरको शृङ्खलाहीन चौरमा अघि उसले आफ्नो भिजेको लुगा सुकाउन टाँगेर बौद्ध झन्डावाल घरभित्र आराम गर्न पसेको थियो। तिनै घाममा फिँजाइएका वस्त्रलाई चिनेर उसलाई खोज्न आएका राष्ट्रसेनाको टोली त्यहाँ उसलाई भेट्न रुँगिबसेको रहेछ।

'ओहो!' प्रतीक्षितमध्येको एक जनाले देखेछ– 'कप्तान साहेब!' डाँडै थर्कने गरी कौलास्यो।

सबै फौज जऱ्याकजुरुक उठे चोर पक्रने तदारुकताका साथ। कप्तानतिर दगुर्दै आउन थाले। फौजलाई सेर्बूले चिनी। यिनै फौजले केही समयअगाडि कटुवाल रामदासलाई बनमाराको झाडीभित्र आफूलाई हातपात गर्न लागेको कारणले

बेस्करी भकुरेका थिए। त्यस्तै दुर्दशा आफ्नो प्रेमीको होला भन्ने डरले तिनको सन्निकट पुग्न उचित ठानिनन्। बीचबाटोमा रोकिई।

'चोरको दाह्रीमा सिन्को' उक्तिझैँ कप्तान साहेब र आफ्नो कुत्सित लसपस हुन लागेकोबारे माइजूद्वारा फौजले थाहा पाए अथवा आफैँले देखे भने मिथ्याबोध हुन्छ। फरक्क फर्केर घरतिर टाप कसी।

'कप्तान साहेब! तपाईंलाई युवराजाधिराजबाट सम्झिबक्सेको छ,' सैन्य टोली अगुवाले कप्तान नजिक आएर भन्यो। 'तपाईंलाई खोज्न हामी तीन त्रिलोक चौध भुवन पुगिसक्यौँ।' बनमारा झाडीभित्र एउटी अनजान कन्यामाथि बलात्कार हुन लागेको लज्जास्पद घटना बताउन थाले हाँस्दै। त्यो हँसीदिल्लगीमा साथ दिने मनोवृत्तिमा छैन कप्तान। युवराजाधिराजको सवारी शिविरमा फर्कन खतरा देख्छ। नेहोराको वाणीमा हृदय उद्गार सुनायो– 'भाइहो! युवराजाधिराजको हजुरमा म त्रिशूलीले बगाएर मरिसकेको बेहोरा जाहेर गर्नोस्।' भन्यो– 'भेलले कता लग्यो कता, बेपत्ता भयो बिन्ती चढाइदिनोस्।' चित्त दुखेको रातो मुखले थप्यो– 'म जान्नँ।'

गत वर्ष मात्र हिन्दुस्तानमा कतै नबिकेर फर्किएको बेकामी। जाने ठाउँ कतै छैन। सात भाइ, ठूलो परिवार। न आर्थिक हबिगत। तैपनि युवराजाधिराजको दर्शनमा फर्कन मान्दैन।

खोजदल एकै मुखले– 'तपाईंलाई लिएर मात्र फर्कनू भन्ने हुकुम छ। खाली हात वापस गएमा हाम्रो ज्यान बच्दैन। तपाईंलाई पनि जाती हुँदैन।' फकाउन थाले, धम्काउन लागे।

'कुकुरलाई घिउ नपचेको,' युवराजबाट बोलावट भएकोमा ईर्ष्या गर्नेहरू पनि थिए।

कप्तान राजकीय सेवावृत्तिलाई तिलाञ्जली दिने विचारले थचक्क बस्यो। ढाड सड्केको, गोडा मर्केको निहुँले हिँड्न नसक्ने बहानामा कराउन थाल्यो– 'ऐय्या! ऐय्या!'

यमराजको दूतले छोड्ला, युवराज सुरेन्द्रको चरले नछोड्ने स्थिति थियो।

'ऐय्या न उइया' च्याकुलड्याइँमा पर्‍यो मानेमधौरु। नियतिले देखाएको कर्ममार्गतिर कुम्लियो।





# १२

दुईमुखे चुलाको एकापट्टिको चम्कामाथि ढिँडाको पानी बसालिएको. अर्कातिरकोमा गुन्द्रुक छड्किन लागेको। सेर्बू भान्सा पसेकी।

उसमाथि रामदासको गिद्धे दृष्टि घटेको छैन। झन् सारो उसलाई एक्लै पारेर जबर्जस्ती हत्याउनका निम्ति उसका सम्बन्धितहरूलाई एकौटा मुद्दामा थुनाउन सफल भएको छ।

थुनुवाका पत्नीहरू आ-आफ्रा पतिको छुटकाराका निम्ति रुन-कराउन जाँदा तिनीहरूसित सेर्बूलाई फकाइदिने माग अघि तेर्स्याउँछ। सेर्बू मरिकाटे फकिने होइन। उल्टो स्थानीय प्रशासकको मुख परिएला भन्ने डरले घरबाट बाहिर निस्किन्न। झ्याल-ढोका बन्द गरेर गुप्तवास बस्न थालेकी छ।

औषधीभट्टी बन्द। व्यापार ठप्प। आर्थिक स्थिति चकनाचुर। दुई छाक हातमुख जोर्न पुगेस्-नपुगेस्।

कहिले मामाको सम्झना आउँछ. रुन्छे। कहिले प्रेमीको।

तत्क्षण ढिँडोलाई बसालेको पानी उम्लन लाग्यो भकभको। त्यही पाकेको पानीमा मकैको पीठो ओइरिई।

उता काठमाडौँमा रणजङ्ग पाँडे राजासमक्ष सुगौली सन्धि भङ्ग गराउने र महारानीछेउ राजालाई काशीवास पठाउने अङ्गीकार लिएर आफू प्रधानमन्त्री बन्न सफल भएका थिए।

पछि उपर्युक्त दुई कबुलतिर ध्यानै दिएनन्। केवल आफ्रो बापबैरी साध्नपट्टि लागे।

भीमसेन थापाकाण्डबाट बचेखुचेका थापाहरू कुनै शूलीमा जाकिए, कुनै फाँसीमा। कसैलाई जिउँदै जलाइयो. कसैलाई खाल्टोमा पुरियो।

यस्तो अमानवीय नरहत्या श्री ५ राजेन्द्रलाई असह्य भयो, रिसाए। साथै उनलाई काशीवास पठाउन रचिएको षड्यन्त्रको भन्डाफोर गरे।

यो स्थितिमा रणजङ्गलाई आफ्नो बिँडो जोगाउने समस्या पर्‍यो। त्यसका निम्ति मुलुकमा युद्धको स्थिति सृजना गर्नुसिबाय अर्को उपाय देखेनन्, किनकि राजा तर्सने, भाइभारदारको ध्यान युद्धतिर केन्द्रित हुने, आफू प्रधानमन्त्रीमा रहिरहन पाइने।

यस्तो स्वार्थी विचारले सन् १८४० को प्रारम्भतिर उनले एक दिन ४०–५० जवान नेपाली फौजलाई भारतको चम्पारनको रामनगर राज्यको सीमाभित्र एक्कासि हुले। ती राष्ट्रसेनाले स्थानीय मानिसको भीडलाई एकत्रित गराएर घोषणा गरे कि सोमेश्वर पहाडदेखि दक्षिण २५–२६ मिल लामो र सात-आठ मिल चौडा भूभाग जुन एक नेपाली राजकुमारीसित विवाह गर्दा रामनगरका राजालाई दिइएको थियो, उक्त राजकुमारीको मृत्यु भएकाले अब नेपाल सरकार फिर्ता लिन्छ। आजदेखि वर्णित जमिनका बासिन्दाहरूले सबै प्रकारको राजकर नेपाल सरकारलाई बुझाउनुपर्छ। यसो नगरेको खण्डमा नेपाल सरकारले कानुनमुताबिकको दण्ड दिनेछ।

रामनगर राज्य इस्ट इन्डिया कम्पनीको मातहतमा भएकाले यस घटनाले अङ्ग्रेजहरूलाई युद्धको हाँक दिएजस्तो हुनु स्वाभाविकै हो। तर आवासीय ब्रिटिस राजदूत हागसनलाई रणजङ्गको राजनीतिक दाउपेचको ज्ञान थियो। उनले युद्धका निम्ति सामरिक बन्दोबस्त गरेनन्, केवल नेपाल सरकारमार्फत राजालाई एउटा बिन्तीपत्र चढाई पठाए– 'नेपाल र कम्पनीबीचको युद्ध रोक्नु छ भने राजकाजमा पाँडेहरूको हस्तक्षेप बन्द गर्नु आवश्यक छ।'

फलतः १ नोभेम्बर १८४० इ. मा नयाँ मन्त्रिमण्डल गठन भयो जसमा फत्तेजङ्ग चौतरिया प्रधानमन्त्री बने।

यसरी रणजङ्ग खुत्तिएकोमा साम्राज्यलक्ष्मीको छोरालाई राजा बनाउने मृगतृष्णामा तुषारापात भयो, रिसले आँखै देखिनन्। त्यही दिवान्धको झोकमा उनलाई सुझेन – के गरे ठीक, के गरे बेठीक।

अन्ततोगत्वा लोग्नेलाई घुर्की लगाउन काशीवास जान दरबार परित्याग गरिन्।

लोग्रेको मनौती अभियान पुनः दोहोरियो। उनी स्वास्नीलाई फकाई-फुल्याई फिर्ता ल्याउन पछि लागे। स्वास्नी फर्किनन्। अपहत्ते देखाउन कहीँ-कहीँ ओलिनकाठबाट ओर्लिएर पैदल हिँड्न थालिन्।

'बाटो न घाटो दगुर्छ लाटो' झैँ महारानी पहरा-छहरा, नदीनाला, उकालो-ओरालो, डोल्सी-भीरमा लड्दैपड्दै हप्ता दिनमा कर्रा (हेटौँडा) पुगिन्। यात्राको धपेडी र औलोको प्रकोपले उनको पुरानो उदररोग बल्भियो, बिरामी परिन्।

औषधोपचारका निम्ति काठमाडौँमा 'तुरुन्त राजवैद्य पठाउनू' भन्ने जरुरी डाँक-आदेश गयो। तर भीमसेन थापापर्वदेखिन् चिकित्सकहरू दरबार जान 'चेत बाबा काशी' थिए। शाही सवारी क्याम्प कर्रामा जानुपर्ने हल्ला सुन्नासाथ कोही वैद्य भूमिगत बसे, कुनै भारत भागे। कोही छद्मवेशमा हिँड्न थाले लुकीछिपी। एक जना पनि कर्रा गएनन्।

परिणामस्वरूप महारानीको इलाजका निम्ति झारफुकको भर पर्नुसिबाय अन्य उपाय रहेन। जान्ने धामी-झाँक्रीको खोजमा पहाड-मधेस चारै दिशातिर फौजी जवान खटिए।

नुवाकोट जिल्लाअन्तर्गत बुङताङ गाउँमा एक जना 'लामा' वैद्य काम गर्न जान्ने कहलिएको दोर्जे तामाङबारे गारतको हजुरिया कप्तान जङ्गबहादुरलाई थाहा रहेछ। उसले त्यो झारफुकेको नाम, थर, वतनको साथ बाटाको नक्सासमेत कागजमा कोरेर बोलाउन पठायो घरमा बौद्ध झन्डा फरफराएको विवरण पनि सुनाएर।

रात-साँझ नभनेर तेस्रो दिन त्रिशूलीको बुङताङ पुगे समाचारवाहक। बौद्ध झन्डावाल घरको मूल द्वारमा लागेको तगारो पन्छाएरभित्र पसे– 'माथि को छ?'

सेर्बू पीठो बेस्करी ओढालेर ढिँडोमा परिणत गर्दै थिई। गुन्द्रुक पाकिसकेको।

आँगनमा पुरुषस्वर सुनेर झसङ्ग भई, पसिना पुछ्दै उठी। बन्द झ्यालको धाँजोबाट चियाई। 'माथि को छ?' सानो स्वर सुनी।

'यो दोर्जे तामाङको घर हो?'

प्रष्टा सेर्बूलाई बनमाराको झाडीभित्र कटुवाल रामदासले बलात्कार गर्न लागेको बेलामा बचाउने त्राता थिए, साथै कप्तान वीरनरसिंहलाई यही घरअगाडिको

वनपथबाट च्याकुलइयाइँमा कुम्ल्याएर अज्ञात स्थानतिर कुदाउने कम्पु। सेर्बूले चिनी। खापा उघारी। आफ्नो स्नेहीको हालखबर पाउने आशामा हतपते पाइलामा तल ओर्लिई– 'कति कामले पाउकष्ट गर्नुभएको होला?' विनम्र सोधी।

'हामी शाही सवारी क्याम्प कर्राबाट आएका।'

अर्को सैनिक उछिनेर बोल्यो– 'दोर्जे तामाङलाई जरुरी कामले लिन आएको।'

आगन्तुकका निम्ति बिस्नौटी बिछ्याइदिन लागी सेर्बू।

'यहाँ बियाँलो गर्न हुन्न गाँठे! हामीलाई ठाडै फर्कनू भन्ने अर्डर छ कप्तान साहेबको।'

'को कप्तान साहेब?'

'कँवर कप्तान साहेब!'

'नाम के होला?'

'जङ्गबहादुर!'

आफ्नो प्रेमी कप्तान साहेब वीरनरसिंह कुँवरको नाम उल्लेख हुन्छ कि भन्नेमा आशान्वित थिई सेर्बू। तर अनजान जङ्गबहादुरको नाम जिकिरमा आएकाले हिस्स परी। निराश स्वरले– 'पाँच महिना भयो दोर्जे तामाङ घरमा नभएको।'

'कहाँ त?'

'कुन्नि, केही खबरै छैन,' विरहले गला अवरुद्ध भयो माइजूको, बोल्न सकिन।

उपर्युक्त बेहोराको मुचुल्का तयार पार्न आवश्यक थियो। सरजमिन गराउनेपट्टि लागे सैनिक।

सेर्बूले आफ्नो मतलबको कुरा कोट्याउन थाली– 'अस्ति नै, आजभन्दा चार वर्षपहिले (घरसामुन्नेको वनपथतिर औँलाले देखाएर) तपाईंहरूले कप्तान साहेब वीरनरसिंह कँवर काजीलाई झ्याइँकुटीमा बोकेर कुदाउनुभएको सम्झना छ?' सोधी– 'कहाँ लानुभाको?'

त्यो घटना बिर्सिनसक्नुको थियो। सुन्दा आङ झिरिङ्ग हुने। त्यस ऐतिहासिक काण्डमा पर्ने हतभागी जङ्गबहादुर उर्फ वीरनरसिंह थियो। उसलाई त्रिशूली सवारी क्याम्पमा लान लागेको साँचो बेहोरा अवगत गराउन चाहेका थिए सैनिकले।

परन्तु त्यसो गर्दा युवराजाधिराज सुरेन्द्रका ज्यादतीको घ्याम्पाफोराइ हुने भएकाले सेर्बूको प्रश्न नसुनेको बहाना गरे, कसैले नबुझेको। सेर्बू चाहिँ घुमाई-फिराई त्यही सवाल झर्को लाग्ने किसिमबाट सोध्छे। यहाँसम्म कि आगन्तुकको मनमा शङ्का पऱ्यो, उनीहरूलाई गाल पार्नका निम्ति यो नचाहिँदो विषयलाई प्रसङ्गमा ल्याइएको हो, सतर्क भए। यस्तो असमञ्जस स्थितिमा धेरै बेर बिलम्बिनु 'शुभेन किञ्चित् अशुभेन समाप्तम्'। बाहिर निस्किए। जसरी लम्कँदै आएका थिए त्यसरी नै बाटो लागे।

सेर्बूका निम्ति पनि सधैँ लुकेर बस्नु समस्याको समाधान थिएन। कति दिन इयाल-ढोका थुनेर बस्नु?

बाहिर निस्किएमा रामदासप्रभृतिको मुख परिने सम्भव।

बिहानको भोजन सकेपछि जङ्गबहादुर कँवर र वीरनरसिंह कँवरबीच जानपहिचान होला, कर्रा क्याम्पमा पुगेपछि जङ्गबहादुर कँवरबाट आफ्नो प्रेमी वीरनरसिंह कँवरको हुलिया थाहा पाइएला भन्ने विचार सेर्बूमा आयो। त्यही सोच्नलाई आत्मसात् गरेर घरबाट निस्किई माइजूसितको वैचारिक मतोबाट।

केही कदम स्थान गरेपछि घरअगाडिको वनमार्ग आयो जहाँबाट यिनै सैनिकले वीरनरसिंहलाई इयाइँकुटीमा कुम्ल्याएर अज्ञात स्थानतिर कुदाएका थिए।

प्रेमीको सम्झनामा प्रेमिका रोकिई। सोच्न लागी– 'के खर्चले कर्रा पुग्ने? के खाने? कहाँ बस्ने?'

अघि बढ्न आँटिन। पछाडि फर्किई।

कुलो कलकल बगिरहेको, डाँडाकाँडाको हरियाली र हिमचुलीमा आँखा तिखारी।

माइजू इयालमा बिछोडको आँसु पुछ्न लागेकी देखी। आँगनमा बस्तुभाउ तिर्खाएर कराएको सुनी– बाँ ... बाँ ...। भाले बासेको– कुखुरी काँ ...। उसलाई डाकेको झझल्को भयो।

मामा-माइजू, नाता-कुटुम्ब, दौँतरी, साथी-सँगिनीलाई बिर्सन सकिन।

रोधीघरमा नाचेको, छ्यांङ खाएर मादल बजाएको, घिनताङ आवाज कानमा पर्न आउँछ, गाउँ छोड्न मन लाग्दैन। परन्तु स्थानीय प्रशासनको जबर्जस्तीमा

परिने डरले बाध्य हुन्छे। रुन थाली। काँपेको हातले आँखा पुछ्दै मुटुलाई पत्थर पारी। यात्रा अघि बढाई।

वापसी सैनिक जवान दुइटा डाँडा उक्लेर ओरालो झर्न लागेका थिए। तिनको पदचिह्न पछ्याउँदै लम्किन थाली यात्रु।

बाटामा ठूला-साना आबादी आए। ती सबै बस्तीमा उस्तै शोषण, अन्याय, अत्याचार, गरिबी; अबला, अनाथ, अपाङ्गका निम्ति त्राण कतै छैन। मुलुकको यस्तो हृदयविदारक स्थिति आँखाभरि देख्दै र कानभरि सुन्दै हिँडेकी सेर्बू हप्ता दिनमा कर्रा क्याम्पमा पुगी।

मूल द्वारमा बन्दुकधारी चपटे। सेर्बूको मनमा वीरनरसिंह कँवरलाई देख्ने आशा थियो। यताउति दृष्टि तिखार्न थाली पल्याकपुलुक। कतै देखिन।

आखिर केही सीप नलागेर जङ्गबहादुर कँवरको खोजी गर्न थाली ऊमार्फत वीरनरसिंह कँवरको पत्ता पाउने तात्पर्यले। तर अपसोच! जङ्गबहादुर पनि वैद्यराज बोलाउने र राजदरबारबाट धाई-सुसारे ल्याउने काममा काठमाडौँ खटी गएको छ।

मध्यदिनको समय। सूर्यको प्रखर तेज। जताततै धामी, झाँक्री र फुकफाकको जमघट।

ढ्याङ्ग्रो बजेको, धामी बसेको– हेर् मनुवा! हेर् ...।

पूजापाठ, रुद्रीको गुञ्जन। होमबाट निस्किएको धूवाँको मुस्लो आकाश छोला जस्तो।

त्यस जिल्लाअन्तर्गत गाउँ-गाउँका ठूलाठालू, गण्यमान्य, तैनाथवाला आदि राजासित दर्शनभेटको आशामा ताँती लागेका। भेटुवामध्ये बुङताङनिवासी कटुवाल रामदासप्रभृति पनि थिए। आ-आफ्नो रासोबासो मिलाएर त्यहीँ बसेका सवारी क्याम्प रहने अवधिसम्मका निम्ति।

तिनले मुद्दामामिलाको काममा न्यायाधीशहरूलाई सरसल्लाह पनि दिन्छन्, मौका परेको बखतमा मनखुसी हुकुमप्रमाङ्गी ठोक्न पनि बेर लाउँदैनन्।

तिनको चुरीफुरी देखेर सेर्बूको होस गुम होला जस्तो भयो – कहाँ भागूँ? कहाँ लुकूँ?

त्यहाँ बस्ने ठहर छैन उसको, आउँदाआउँदै फर्कन पनि भएन, नजिकमा थातथलो देखिन्न। घरकी न घाटकी हुने स्थिति आयो।

संयोगवश कर्रा नदीको तल्लो पाटामा बजार लाग्ने दिन परेछ। कमारा-कमारीको सुक्रीबिक्रीको काम पनि तदारुकतासाथ चलिरहेको। सेर्बू त्यहीँको कमारी समूहभित्र मिसिएर बस्न पुगी आफ्नो गाउँका तालुकदारहरूबाट नदेखिने हुन। साथै विश्रामका निम्ति पनि।

प्रेमीले त्रिशूलीघाटमा धुन छोडेका वस्त्र साथमा ल्याएकी थिई सम्झौटाका रूपमा।

त्यही लँगौटी र टोपीले टाउकोमा नातो बाँधी, कछाडले खाने मुख छोपी छद्मवेश बनाउन।

आँसुले गाजल लतपतिएकाले हाउगुजीजस्ती देखिन पुगी।

हाउकेटीलाई एउटा धनी गृहस्थले भ्रमवश आफ्नो घरबाट भागेर पुनः बेचिन आएकी ठानेछ। रिसको आवेशमा बिरालाले मुसा झम्टिने पाराले लुछ्न पुग्यो मुखमा आएजति गाली बक्दै– 'चोर्नी, बौलाही, रन्डी!'

कमारा-कमारीलाई मानवजातिका रूपमा होइन, भौतिक सम्पत्तिमा गणना गरिने प्रथा थियो। त्यही कानुनी परिपाटीअनुसार सेर्बू मालिकको लछाराइमा परी। उसलाई 'हाई' भन्ने कोही भएनन्। उसले पनि आफ्नो गाउँका हैकमवालाहरूले देख्लान्-सुन्लान् भन्ने त्रासले ठूलो स्वर गर्न डराई। चुपचाप खपिरही कष्टमय मुखाकृति लिएर। पछि दण्डित दासीको मुख प्रस्ट देख्यो मालिकले। आफ्नो कमारी नभएकी चिन्यो– 'आच्या!' जिल्ल पऱ्यो।

यस्तो महाभूलका निम्ति धनीलाई न क्षमायाचाना न पश्चात्ताप प्रकट गर्न आवश्यक थियो, सुरुक्क आफ्नी भगुवी कमारीको पत्ता लगाउन अन्तैतिर लस्कियो।

सेर्बूले उत्ति नै खेरि पुनः नातो बाँधी, मुख छोपी।

श्री ५ जेठी बडामहारानी साम्राज्यको गाथमा आराम नभएकाले स्याहारसुसारका निम्ति परिचारिकाको आवश्यकता पऱ्यो। तिनलाई लिन काठमाडौँ गएका सहचार फिर्ता आइपुगेका छैनन्।

तत्काल खनखाँचो टार्नका निम्ति कमारी नकिनी नहुने परिस्थिति आयो। त्यस काममा विशेष रूपले तालिम प्राप्त सरकारी कर्मचारी कर्रा हाटमा खटिएर आएका थिए। यी विशेषज्ञले १० वटी बँधिनी उम्मेदवारको जाँचपडताल गरिसके। एउटा पनि दरबार पस्न लायक ठहरिइन।

कोही गान्टी, कुनै भकभके, कसैको भाषा समस्या, कुनै अनुहार नपरेकी, कोही हिजडा। कसैको सास गनाउने, कसैको पसिना।

खवास्नी छान्ने पारखी टोली सेर्बूसामुन्ने उभिन पुग्यो।

'अगुल्ट्यको मारमा परेको कुकुर बिजुली चम्किँदा तर्सिए' झैँ पुनः लुछाइ या बलात्कारमा परिने शङ्काले सेर्बूको हंसले ठाउँ छोड्यो। तर तत्क्षण समितिका सबै सदस्य उमेरका पाका थिए। उत्तरदायित्वको बोझले कुप्रिएका, 'दरबार कि तरबार' को ५२ घुस्सा ५३ ठक्कर खाएर आँखामा तेज नास्ति। कर्तव्यपरायण। तीमध्येको एउटा खल्लरेले एकाएक सेर्बूको मुखको नातो हटाएर 'खै, यता हेर्!' भन्यो, छाडीलाई दरबार लान हुने-नहुने अनुसन्धान गर्न अग्रसर भयो।

सेर्बू तर्सिएर निहुरिएकी थिई। बूढातिर हेर्न बाध्य भई पुलुक्क।

बस्तुभाउको खरिद-बिक्रीमा जसरी जोखतौल गरिन्छ त्यही नियम लागू थियो दासदासीको किनबेचमा।

सेर्बूले सङ्कोच मानिन, चिकित्सकसामुन्ने रोगिनी तेर्सिने पाराले जीउ छोडी।

जाँचकीले उम्मेदवारको दुईतिरका गाला च्यातेर दाँत, जिब्रो र लिगलिगे हेर्‍यो – कहीँ कालजिब्रे हो कि? चोलो मास्तिर सार्न लगाएर जीउमा घाउखत भए-नभएको जाँच्यो। पेट, नाइटो र कोष्ठ छाम्यो। गुप्ताङ्गमा बाहेक सर्वत्र हात पुर्‍यायो। यतिसम्म कि नपुंसक भएको शङ्कानिवारणका लागि संवेदनशील अङ्गमा कुतकुत्यायो पनि।

कतै खोट पाएन।

सुरङ्ग, हिस्सी, खाल्टे गाला, त्रिवली उसका विशेष सौन्दर्यसूचक आकर्षण थिए। त्यसमाथि नेपाली शुद्ध बोल्न जान्ने बुता।

दरबार लाग्ने ठहरिई।

परीक्षक हात धुन थाल्यो। अत्तरले मुसार्‍यो। अन्तर्वार्ता सुरु गर्‍यो– 'ए गाउँले केटी! तँ दरबार पस्ने हो?'

ग्रामीणजनका निम्ति काठमाडौँ सहर आकर्षणको केन्द्रबिन्दु थियो। त्यसमाथि आफ्नो प्रेमीसित भेट हुने सम्भावना। सेर्बूले सकारात्मक मुन्टो हल्लाई। ढाडमा पटुका लपेट्दै थिई, थामेर 'पस्छु' भनी।

हाकिमले नाम-थर-वतन सोध्यो। सेर्बूले बताई।

‘तेरो मोल कति हो? कति महेन्द्रमल्ली खोज्छेस्?’

‘हामी सबै प्रजा हौँ। राजाको सेवा गर्नु हाम्रो धर्म हो। मोलतोलको आवश्यकता छैन। जति बकस हुन्छ, हात थाप्छु।’

एउटी वनचरीको मुखबाट शुद्ध नेपाली भाषामा सोमतिलो बोली निस्किएको सुनेर कर्मचारी जिल्ल परे। एकले अर्काको मुखमा हेरे। खुसी भए।

पर्वतीय वेशभूषा दरबारभित्र चलनचाँजोमा नहुने भएकाले नयाँ केटीको ‘भर्ना सदर’ मा लानुअगाडि लुगा फेराउनु जरुरी थियो। सेर्बूले घलेक र चौबन्दीको सट्टा दरबारिया पहिरन धारण गर्नुपऱ्यो। त्यसउपर मखमली खास्टो ओढेर शरीरको अर्द्धभाग गामगुम ढाक्न पाई।

गिल्टीका गहना फुकालेर नाककान बुच्चै शाही शिविरतिर डोरिई।

नयाँ वसनले हो कि अथवा सरकारी सिन्दूर पाउने निधो भएर हो, उसमा अपर्झटको मुहारमा तेजमण्डल देखियो।

पहिलेदेखि नै उसका गाला लाल थिए, अहिले रगत चुहिएला जस्ता भए। मुखमा अलौकिक कान्ति। मनमा आत्मविश्वास।

सेर्बूको दरबारमा नियुक्तिको खबर बिजुली चम्केको जस्तो गरेर वरपर, बाटोघाटो, हाटबजार, जङ्गलपात पुग्यो।

उसका परिचित, साथी, नाता-कुटुम्ब मात्र होइनन्, कहिल्यै चिन्दै नचिनेकाहरू पनि ‘गोरु बेचेको साइनो’ लगाई सरकारी सेवामा बिक्न पाउने सिफारिसको माग लिएर ऊसामुन्ने आए। मागढोललाई सकारात्मक आश्वासनको मुन्टो हल्लाउँदै सेर्बू अघि बढी।

आधा बाटो काटेपछि जङ्गलको अनकन्टार ओढारभित्र बडेमानको लट्टाधारी जोगी धुनी जगाएर ध्यानमग्न रहेछ।

‘नमस्कार साधु महाराज!’ बद्धाञ्जली पुकारे कर्मचारीहरूले।

महाराजले सेर्बूतिर फर्केर आँखा र मुख खोले– ‘रगतको खोलो बगाउन हिँडेकी महारानी!’ पटल बाँधे– ‘कार्य सफल होस्!’ आशीर्वाद दिए।

आसिकको दूरगामी अर्थ थियो निकट भविष्यमा ऐतिहासिक कोतपर्व हुने। त्यस रक्तपातको नतिजा सेर्बूले महारानी पद पाउने।

भविष्यवाणीपट्टि कसैले गहिरिएर सोचेनन्। सेर्बूले पनि लक्ष्यार्थभन्दा भिन्दै मतलब लगाई – आफू रजोवती भएको। पछाडितिर ओर्कीफर्की पहिरनमा हेरी।

मासिक धर्मको टाटो कतै थिएन। फुस्रेले जिस्काएको ठानी. केही प्रतिक्रिया जनाइन। सुरुसुरु बाटो तताइरही।

कर्मचारीगण अघि-पछि थिए वन्यजन्तुले पल्लोपट्टि नदीकिनारामा पानी पिउन लागेको दृश्य हेर्दै हिँडेका।

हटारुहरूको आवतजावत।

शाही शिविर देखियो। राष्ट्रझन्डा झुकेको। धामी-झाँक्रीको चहलपहल छैन। न ढ्याङ्ग्रो बजेको आवाज।

हाकिम-कारिन्दाको मनमा अनिष्ट घटना भएको शङ्का पर्‍यो. खास गरेर बिरामी महारानी साम्राज्यको गाथमा तलमाथि परेको। लम्कन थाले।

सवारी क्याम्पबाहिर शाही दर्शनार्थीको ताँती। त्यस लामभित्र सेर्बूले वीरनरसिंहको खोजमा आँखा च्यात्न थाली एक-एक गरेर। कटुवाल रामदास. थरी. मुखिया र जिम्मावाललाई देखी। यस पल्ट पहिलेको जस्तो डराइन। बरु उनीहरू गोडा पर्न आए. सायद नचिनेर होला।

द्वारपाल. सैनिक. प्रहरी चपटे आदिको मुख मलिन छ। आँखामा सन्ताप। बोलचाल बन्द। झोक्राएका। गति सुस्त।

सेर्बूले भित्र प्रवेश पाई।

परन्तु अपसोच! अन्तर्खण्डमा दारुण दृश्य थियो – महारानी साम्राज्य छोरा सुरेन्द्रलाई राजा तुल्याउने आकाङ्क्षालाई परित्याग गरेर परलोक सुधारिसकेकी। यस लोकको माया. मोह. ईर्ष्या. द्वेषबाट मुक्त।

उनको पार्थिव शवनिर रोदन-क्रन्दनको कोलाहल। त्यहीँ आँसु चुहाउन पुगी सेर्बू. डाँको छोड्न थाली।





## १३

आमाको स्वर्गारोहणपश्चात् सुरेन्द्र शाहले अझ बढ्ता फुक्का महसुस गरे। उन्मत्तता झन् बढ्यो।

उनको कुनै अर्धङ्गी कामले अङ्ग्रेजविरोधी भावनाको प्रदर्शन पनि हुन्थ्यो। जस्तो कि नेपाली सेनालाई दुई ग्रुप बनाई एक ग्रुपलाई भाङ्ग्राको लुगा लगाइदिएर अङ्ग्रेजी सेना नामकरण गर्ने, अर्को ग्रुपलाई नेपाली राष्ट्रसेनाको।

यी दुई दलबीचको भिडन्तमा गोरापट्टिका जवानलाई नेपाली सेनाद्वारा घाइते तुल्याउने प्रबन्ध पनि मिलाइन्थ्यो युवराजलाई प्रसन्न पार्न।

शत्रुपक्ष घायल भएको ठानेर राजकुमारको रक्तपिपासु मनोवृत्ति रमाउँथ्यो, पेट मिची-मिची हाँस्थे, मक्ख पर्थे। खुसी हुन्थे।

यस्तो अमानवीय काम हुँदा समेत छोराउपर नियन्त्रण राख्न प्रयत्न गर्दैनथे बाबु। झन् अरूबाट त युवराजाधिराजलाई काबूमा राख्ने प्रश्नै आएन।

कहिले कसको ज्यान जाने हो, पत्तै नहुने। हाहाकार मच्चाउन थाले युवराजले।

आखिर ६ डिसेम्बर १८४२ इ. को दिन प्रधानमन्त्री फत्तेजङ्ग चौतरिया र गुरुप्रसाद शाहको अध्यक्षतामा राज्यका ६७५ जना प्रतिष्ठित राजकर्मचारी नागरिकको जुलुस युवराज सुरेन्द्रको खिलाफमा हनुमानढोका राजदरबार गयो।

जेठी पत्नी साम्राज्यको देहान्तपछि मुलुकको केही अधिकार आफूले राख्ने र केही युवराज सुरेन्द्रलाई दिने राजाको विचार थियो। अहिले युवराजाधिराजको विरोधमा जनआवाज उठेकाले विचारमा परिवर्तन आयो।

सन् १८४३ को दिन शाही घोषणाद्वारा युवराजाधिराज सुरेन्द्रका सम्बन्धमा बाहेक राजकाज चलाउने सम्पूर्ण जिम्मेवारी कान्छी महारानी राज्यलक्ष्मीमा हस्तान्तरण हुन गयो।

सर्वाधिकारसम्पन्न पटरानीको बिछ्यौना भुइँपलङभित्र थियो। खाटको उपस्तम्भवरिपरि मखमली चँदुवा टाँगिएको बावरलेट झुल कसिएको, सेतो।

रातभर सेविकाले उनको पाउ मिच्नुपर्ने आलोपालो गरेर।

बिहानपख तल नासलचोकमा झ्याउँकीरी बाजाबाट प्रातःकालीन धुन गुन्जिन लागेपछि मौसुफको निद्रा खुलेछ, चटपटिएको आभास भयो।

चाकर्नीले झुल उघारी।

निद्रोत्थित मालिक्नीको नजर सर्वप्रथम जुन वस्तुमा पऱ्यो त्यो थियो कन्याकेटीले समातेको फूल-दूबोको कलश। यस मङ्गलपात्रको फेदमा निधार अड्याएर सुसोत्थित महारानीले वरुण, नवग्रह आदि देवीदेवताको आराधना सकिन् करविन्याससहित। तत्पश्चात् पृथ्वीमाताको वन्दनामा औँलाले भुइँ र पुर्पुरामा तीन पटक ढोगेर बिस्तरा छोडिन्।

भित्तामा जीवन कदको ऐना टाँगिएको थियो। त्यसमा हेरेर केशमा काँटा-किलिप राम्ररी घुसारिन्। लघुशङ्काका निम्ति हतारिएकी रहिछन्।

त्यतिखेर आधुनिक शौचालयको परिकल्पना नभएकाले खास्टो बेरेर स्नानकोठातिर प्रस्थान गरिन्।

केटीहरू पछि लागे सिबाय फूल-दूबोको कलश नजर गराउने कन्याकुमारी।

कन्याकेटी उमा जर्नेल गगनसिंहकी छोरी थिई। हातको कलश चोखो ठाउँमा थन्क्याएर महारानीको बिछ्यौना तह लगाउन थाली।

तत्क्षण उसको मनमा विगत प्रेम घटना स्मरण हुन थाल्यो – एक बिहानी काठमाडौँस्थित कालभैरवस्थानमा पूजा गर्न जाँदा उसको एक युवकसित अनायास आँखा जुधे।

एकले अर्कालाई मन पराए। मुसुक्क मुस्काए, मायालु मुस्कान।

परिवारका साथ पूजा गर्न आएकी रहिछ।

मङ्गलबार परेकाले मन्दिरमा ज्यादै घुइँचो थियो।

पूजाआजा सकिएपछि भक्तजन आ-आफ्नो घर फर्किए, काममा निरत। परन्तु उमाको स्मृतिपटमा मायामय युवकको सम्झना आइरह्यो– 'को होला त्यो होनहार नौजवान? किन मलाई देखेर मुस्काएको?'

दिनभर यस्तै विकृति मनमा खेलिरह्यो।

साँझ बिलायो। रात पर्‍यो। सुत्न बिस्तरामा गई। अन्तस्करणमा त्यही दयितको याद। जुरुक्क उठेर बसी। उसको मन्द हाँसो र दाँत बिर्सिन सकिन।

यस्तो स्थितिमा निद्रा पर्ने कुरै भएन। ओल्टोकोल्टो फर्किरही।

आधारातको चकमन्नताबीच कोठाको झ्यालबाट एकाएक मानिस भित्र पसेको आभास हुन्छ अनिद्रितलाई। तर्सिई– 'आम्मै!'

अनाहत प्रवेशले चोर औँलो ओठमाथि ठड्याएर तर्सुवीलाई सावधानीसूचक सङ्केत गर्‍यो– चुप!

पानसको मधुरो प्रकाशमा कोठाधनीले आफ्नो सम्झनामा आइरहेको मनस्कान्तलाई चिनी– 'किन आएको?' सानो स्वरले सुस्तरी सोधी।

'कालभैरवले पठाउनुभएको।'

'किन?'

'तिमीलाई भेट्न।'

'तपाईं को हो?'

'म देवदूत हुँ। कालभैरवको सन्देशवाहक।'

'के सन्देश?'

'तिम्रो र मेरो वैवाहिक सम्बन्ध जुटेमा तिमीहरूको कल्याण हुन्छ रे।'

'कस्तो?'

'तिम्रा बाबुको पदोन्नति हुने। राजारानी रिझिने। धनसम्पत्ति वृद्धि हुने। आय बढ्ने। नाम चल्ने। चारैतिरबाट यश पाइने।'

सुनौलो भविष्यको अक्षयलाभ देखाएर फकायो देवदूतले। तब प्रेमालिङ्गनका निम्ति अग्रसर भयो।

कालभैरवको भक्तियुक्त नाम प्रसङ्गमा आएपछि प्रेमिकाले विरोध गर्नु अपराध ठानी। शुद्ध हृदयले आँखा चिम्लिएर चुप बसी। मदारीको सामु बाँदर्नीझैँ विभिन्न आसनमा प्रस्तुत भई।

यस्ता प्रेममिलनको रात धेरै आए, गए।

उता राजा राजेन्द्र र युवराजाधिराज सुरेन्द्रलाई कान्छी महारानीले आफ्नो प्रचण्ड व्यक्तित्वले किचिछन्। सुरेन्द्र शाहलाई पागल घोषणा गरेर आफ्नो ज्येष्ठ

पुत्र रणेन्द्रलाई राजगद्दीको प्रथम उत्तराधिकारी बनाउने ताकमा लागिन्। त्यस दुराशय सम्पूर्तिका निम्ति सबै भारदारको मुख सुँघिन्। एक थुतुनोबाट पनि सकारात्मक सङ्केत पाइनन्।

सानोतिनो नाइँकाइँ मात्र होइन। पवित्र राजगद्दीको मर्यादाक्रममा तलमाथि पर्न नदिनेमा एकमत छन् सम्पूर्ण भारदार। मारेकाटे पनि नमान्ने।

यो दृढ अठोटले महारानीको मुटुमा सुइरो रोपिएको अनुभव हुन पुगेको छ जसले गर्दा वर्तमान भारदारी व्यवस्थाको इतिश्री नगरी भएन। अर्को भारदारीको आवश्यक पऱ्यो।

यही नवचिन्तनलाई मूर्त रूप दिनका निम्ति दरबारभित्र दासेय काम गर्ने बैठके गगनसिंहलाई क्रमश: पदोन्नति गर्दै जनरल पदमा नियुक्त गरिन् नयाँ भारदारीको शिलान्यास गर्न।

यस्तो दूरगामी राजनीतिक सोचको पृष्ठभूमिमा गगनसिहको मानवृद्धि हुन गएको थियो। तर बाबुको तरक्कीलाई छोरी कालभैरवको आशीर्वादको प्रतिफल ठान्छे, देवदूतसित अनुगृहीत भई। उसको र आफ्नो गोप्य भेटघाट हुन थालेको विषय आमालाई नालीबेली बताई। ऊसित आफ्नो बिहे गरिदिनका निम्ति अनुनयविनय पनि गरी।

वास्तवमा गगनसिंहको चमत्कारपूर्ण चढ्तीबढ्ती र देवदूतको भविष्यवाणी परोक्ष मिल्न आएको काकताली थियो। कालभैरव र देवदूतको आशीर्वचनले होइन।

तर उमाकी आमाले पनि लोग्नेको मानवृद्धिको श्रेय कालभैरव र देवदूतलाई दिन थालिन्। छोरीले देवदूतलाई वरण गर्न चाहेको कुरा लोग्नेसित कानेखुसी गरिन् एकान्तमा।

लोग्ने पहिलेको जस्तो निम्न स्तरीय छैन। ऊ प्रतिष्ठित भारदारको अतिरिक्त जर्नेल भएको छ। प्रधानमन्त्री हुने उम्मेदवार। जोईले खुसुक्क राखेको छोरीको बिहेको प्रस्ताव पटक्कै रुचाएन, मुख बिगारेर रिसायो– 'म आफ्नी चेलीबेटीलाई राजघरानामा बाहेक अन्त विवाह गराउन चाहन्नँ।' आफू जनश्रुतिबाट आएका सत्कर्मी राजा रामचन्द्र भगवान्को सन्तान भएको फुइँ छोड्यो। राजखानदानबाहेक अरूसित उसको वंशले वैवाहिक सम्बन्ध जोड्न नहुने कुरा गऱ्यो– 'कथङ्कदाचित्

हाम्रा यहाँका युवराजाहरूसित छोरीको चिना जुरेन भने हिन्दुस्तानका रजबाडाहरूकहाँ सम्पर्क राखेर उमालाई रानी, महारानी, बडामहारानी बनाउने मेरो विचार छ।' रन्कियो– 'को हो त्यो देवदूत भनाउँदो नाथे?' नाथेबारे जान्न चाह्यो। सोधपुछ गऱ्यो। केही सीप नलागेकाले छोरीलाई बोलाएर हप्कायो। केरकार गऱ्यो। पिट्न तयार पऱ्यो। रडाको मच्चायो।

छोरी रुन्छे बरर आँसु झार्दै। देवदूतसितको प्रणयनमा उसको मूढाग्रह छ। अन्यथा आत्महत्या गर्ने।

आमा चाहिँ लोग्नेको कुरा सुन्दा उसैसित सहमत। छोरी बडामहारानी हुनेमा लालायित। छोरीको आँसु देख्दा उसैसित आँसु चुहाउँछे, ओर बोल्छे। छोरी र देवदूतको विवाह भङ्ग भएमा कालभैरवले सराप्ने, पाप लाग्ने, लोग्नेको अहित हुनेमा विश्वस्त।

बाबु चाहिँ देवदूतलाई मानिस होइन, भयाप्रद रूपमा कल्पना गरिएको प्रेतयोनि ठान्छ। छोरीलाई भूत लागेको, तर्सिएकी अथवा सातो गएको।

तर्साउने, भूतप्रेतसित छोरीको कसरी बिहे गरिदिने? किङ्कर्तव्यविमूढ भयो बाबु।

छोरीले हाँसखेल गर्न छोडी। एक किसिमले बोलचाल नास्ति। टोलाएर झ्यालबाट हेरिरहने। घरबाट उम्कन थाली। कवै ढोकाबाहिर, कहिले मूल सडकमा पक्राउ पर्न लागी। ढाकछोप गर्नमा आमालाई फजिती। अन्तिम चरणमा छोरीलाई विक्षिप्त ठान्यो बाबुले। बौलाहीको रङ्गढङ्गमाथि नियन्त्रण राख्नका निम्ति स्थानान्तरण गर्नुसिबाय अर्को विकल्प देखेन। राजदरबारभित्र हुलिदियो औषधोपचारका निम्ति।

त्यही प्रेमवियोगिनी हो उमा, तथाकथित उन्मादी।

परन्तु अहिले महारानीको खजमजिएको शय्या कलात्मक ढङ्गले मिलाउन थाली। भित्तामा टाँगिएको चित्रपट र हल्पी पुछ्न लागी।

तत्क्षण एउटी सुसारे हस्याङफस्याङ गर्दै आइपुगी।

नयाँ केटी दरबार लागेपछि उसको गाउँघरको नामले बोलाउने चलन थिएन। जुन मालिक्नीको काम गर्न खटिन्थी, अमुक मालिक्नीबाट उसको नामकरण गरिन्थ्यो। परन्तु यो आत्तिँदै आएकी चाकर्नी कर्रा क्याम्पभित्र पसेको दिनमा जेठी महारानी साम्राज्यलक्ष्मीदेवीको स्वर्गवास भएकाले अलच्छिनी ठहरिएकी छ।

नयाँ नाम दिइएको छैन। सबैले 'नौली' भन्दछन्। लुगाको स्तर पनि गएगुज्रेको। तल छिँडीबाट माथि उक्लिन पाउँदैन। चोक, भान्छा र आँगन बढार्नुपर्ने, पकाएका भाँडा माझ्ने, एक किसिमको सामाजिक बहिष्कारमा परेकी छ। तथापि श्रीमद्भगवद्गीता र रामायण पारायण नगरी बिहानको भोजन गर्दिन। सीतालाई परेको दुःख सम्झिएर मन बुझाउँछे आफ्नो प्रेमीको यादमा।

तर भाग्यवश उमा निरक्षर भएकीले उसका निम्ति बाहिरबाट परेवाले उडाएर ल्याएको प्रेमपत्र पढेर सुनाउने गोपनीय काम पाएकी छ नौलीले, अन्य दसनङ्ग्रा-खियाइबाट मुक्त। अहिले भर्खर परेवाडाँकबाट आएको गोप्य खबरमा अब चाँडै नै देवदूत र आफूबीचको तगारो हटाउने सङ्कल्प थियो, अर्थात् त्यो मानसिक अठोटको प्रथम आहुतिमा गगनसिंह होमिने याने देवदूतले गगनसिंहलाई मार्ने। तब मात्र प्रेममिलन सम्भव थियो। बाबुको हत्या हुने जानकारीले छोरी दुःखित देखिनुपर्ने, छाती पिटी-पिटी रुनुपर्ने, तर प्रेमान्धी थिई ऊ। देवदूतलाई बाहेक कसैलाई नदेख्ने। संसारसित बेवास्ता। प्रेममिलनको आशामा उज्याली भई। मुखमा आएजति प्रशंसनीय वाक्यद्वारा पत्रवाचकलाई भावपूर्ण धन्यवाद व्यक्त गरी। पछि उसको व्यक्तिगत चासोको विषयतिर प्रसङ्ग घुमाई– 'नौली! तेरो गाउँतिरका मानिसहरूलाई समातेर ल्याएको जस्तो छ। जा त माथि कचहरी बैठकबाट हेर्!' पुनः अराई– 'बैठककोठामा कुचो पनि लगाउनू। सफासुग्घर पार्नू,' थपी– 'महारानीबाट सलामी बक्स हुने बेला भयो। दगुर्!'

चिठी पोल्टामा घुसारी नौलीले, ठाडै गोडा निर्दिष्ट स्थानतिर लम्किई।

कचहरी बैठकको राजसिंहासनअगाडि राखिएको टेबुलमाथि सुनको पानबट्टा र मुद्दामामिलाका मिसिल थिए। भुइँमा पिकदानी। भित्तामा तरबार।

नौली भित्र पसी। झ्यालको आडमा जीउ लुकाएर तल नासलचोकमा दृष्टि दिई।

आश्चर्यको सीमा नाघ्यो उसको, तर्सिई। आफ्नो मामा दोर्जे तामाङ नेल-हतकडीमा जकडिएको देखी।

अभियुक्तको आङमा फलामले डामिएको, पिँडौला फुटेर छुरा रगत बगिरहेको तपतप।

रनाहामा परी नौली, मानौँ तल चोकमा उभिएको अभियोगी थिई ऊ आफैँ। कुचो लगाउने होस हरायो।

त्यही 'मार-मार हे, मार' को स्थितिमा उसको दृष्टि मिसिलमाथि पऱ्यो। आवरणपृष्ठमा 'दोर्जे तामाङ, बुङताङ, फौजदारी मुद्दा' लेखिएको शिर-बेहोरा देखी। पाना पल्टाएर पढ्न थाली।

जति-जति गहिरेर हेर्छे उति कटुवाल रामदास र अन्य तालुकदारको जालसाजीबाट रचना गरिएको झूटो फरेब प्रस्टिँदै गयो। त्यही मुद्दा अध्ययनशील अवस्थाको दत्तचित्ततामा आफूले त्यहाँ राखिएको सुवर्ण पानदानीको पानको खिली झिकेर मुखभित्र हालेको याद भएन नौलीलाई। अन्यमनस्क, पाता पल्टाएपिच्छे सुवर्ण बट्टाबाट बिरा झिकेर गुतार्न थाली मरमरी।

महारानी स्नानकोठाबाट कचहरी बैठकतिर उक्लिन्। जर्नेल गगनसिंह र थुप्रै सुसारे पछि लागेका।

कोही महारानीको शिरमा चमर डोलाउने, कोही पङ्खा, कुनै हुक्कानली समाते।

शाही सवारी लामो चोटा पार गरेर कचहरी बैठकबाहिर पुग्यो, ढोकासामुन्ने नौलीको अभिमुख।

नौली उठ्नुपर्ने, अदबसित दर्शन गर्नुपर्ने। पटक्कै मतलब राखिन। मिसिल अध्ययनमा तन्मय रही।

उसले खाएको पान लखनौको नवाब वाजदली शाहका लागि विशेष रूपले तयार पारिएको पानमध्येको थियो। खिलीभित्र खयर र चुनाको साथ कडा जर्दा र अफिम मिलाइएको। यस्तो नसालु पान अनुपम र सन्तुलित मात्रामा सेवन गर्नाले बैँस घर्कन दिँदैन, शरीर रातोपीरो बनाइराख्छ, शुक्रस्खलन अवधि लम्ब्याउने। तर जथाभाबी हसुरेमा आयु क्षीण गराउने, रोग लाग्ने, अकालमृत्युमा पुऱ्याउने भैषज्यज्ञान नौलीलाई थिएन। बिरा मुखमा हालेको केही क्षणमा मात लाग्यो।

एकातिर पानको मादकता, अर्कातर्फ मामाको दुरवस्था। यी दुई पीरले आफू दरबारभित्र भएको पनि याद छैन उसलाई। मिसिलको विषयवस्तुमा हराइरही।

अप्राकृतिक ढङ्गले चेहरा लाल छ उसको, दाह्रा किटिएको। आँखामा आँसु, निधारमा पसिना। दृष्टिगत फाइलमा हेरेकोहेऱ्यै बोल्छे, हावामा फतफताउँछे।

बाहुलाको मोहता नाडीमाथि स्याहारेर मुद्दामा जिकिर व्यक्तिविरुद्ध पाखुरा निमोठ्छे, मुड्की ताक्छे। दाँत रगड्छे। 'अन्यायी भारदार मुलाहरू!' कहिले आमाचकारी गाली पनि गर्छे।

एउटी मदभराले भारदारहरूलाई 'मुला' सञ्ज्ञा दिएको, तिनका आमालाई उड्काएर गाली बकेको महारानीका कानमा कहिल्यै परेको थिएन। अनौठो लागेछ। साथै केटीको छँटाइ अङ्गसञ्चालन हाँसोउठ्दो देखेर पनि भित्र सवारी हुन लागेको गति थामेर बैठकको ढोकाबाहिर उभिइरहिन् बोल्दै नबोलीकन। मत्ताको सिल्लीपन हेरिरहिन्।

मदमत्तीको उही अर्धङ्गी चाल छ। एकछिनपछि बैठकभित्र औँल्याएर महारानीले परिजनसित हातको सानले सोधिन्– 'त्यो केटी को हो?'

गगनसिंह अघि सरेर कानमा बिन्ती चढायो– 'यो युवराजाधिराजको लङ्पट्टिकी सुसारे हो।'

'नाम के?' महारानीले पनि गगनसिंहको कानैमा थुतुनो जोरेर पुनः प्रश्न गरिन्।

'पोहोर साल कर्रा क्याम्पमा दरबार लागेकी सुसारे हो। त्यही दिन जेठी महारानीको स्वर्गारोहण भएकाले यो अलच्छिनी ठहरिएकी छ। त्यसैले यसको नामकरण भएको छैन,' फुसफुसायो।

सौतेनीपट्टिकी यो अलच्छिनी महारानीपट्टि लच्छिनकी हुनु स्वाभाविकै हो। त्यसैले होला मन्द हाँसो मुखमा खेलाएर भित्र कोठाकी सुगुणीतिर पुनः दृष्टि दिइन्।

रक्स्याहा केटी मिसिलमा उल्लिखित व्यक्तिलाई मुक्का ताक्रे, सराप्रे, धारे हात लगाउने गरिरहेकी छ। महारानीको उपस्थितिपट्टि ख्यालै छैन।

उसको बेहोसीमा हाँसो थाम्न सकिनन् महारानीले खितिक्क फुस्काइन्।

खिज्याहटतिर पुलुक्क हेरी छँटाहीले, पुनः कागतपत्रमा ध्यान केन्द्रित गरी। जोसिँदै भित्तामा सजाइराखिएको तरबार म्यानबाट थुतेर उक्त मिसिलको इनसाफ-कर्तालाई लाजभाँड गाली गर्न थाली, अझ महारानीको उपस्थितिको वास्तै गरिन।

उसले न्यायाधीशविरुद्ध सरापेको हातको धारिलो मुद्राले परोक्ष शासिता महारानीलाई पनि छुन पुगेछ, निधार गाँठो पारेर भित्र पसिन्। अत्यधिक राजकीय

शक्तिले उनलाई रिसको पुरी बनाएको थियो, सानोतिनो कुरामा पनि झडङ्गिने। चट्याङ पर्ने आवाजमा कड्किइन्– 'तैँले मलाई लक्ष्य गरेर सरापेकी होस्? जिब्रो थुतिदिऊँ?'

लावालस्कर डराए। महारानीको क्रोधित मुख नपर्नका निम्ति पानबट्टा धोइपखाली गर्ने निहुँले यत्रतत्र लागे – टेबुलपोस फेर्न, चिलिममा आगो भरभराउँदो पार्न, चमर-पङ्खा छिटो-छिटो डोलाउन।

नौलीलाई नसाले कसैसित नदब्ने बनाएको छ। मामाको रन्कोले निर्भय. आर्त। 'मर्नुपरेपछि खुट्टै तानेर मर्नु' उक्तिलाई चरितार्थ गर्दै हुङ्कारी– 'जिब्रो मेरो हैन, आफ्नै भारदारहरूको थुत्नु?' दोहोऱ्याई-तेहेऱ्याई थपी– 'यी भारदारहरू अन्यायी हुन्। यिनलाई नलाग्ने खुकुरीले रेट्नुपरेको छ।' तरबार उज्याएर भनी– 'छ्याप-छ्याप!'

महारानीको ओजस्वी उपस्थितिमा अवज्ञाको उच्च स्वरले त्यही पनि भारदारविरुद्ध रक्तपात मच्चाउने कुरा झिक्नु शिष्टाचारविपरीत कार्य थियो।

उपस्थित नोकरचाकर भयभीत। नौलीलाई अनुशासन भङ्ग गरेकोमा पिटाइ पर्ने या काराकष्टको साजाय हुने सम्भव। तर त्यसो भएन।

येनकेन प्रकारेण वर्तमान भारदारहरूलाई हटाएर नयाँ भारदारी, नयाँ राजकाज, नयाँ नेपाल र नयाँ राजाको पूर्वकल्पनाअनुरूप नौली केटीको मुखबाट भारदारहरूलाई सखाप पार्ने मार्मिक अभिव्यक्ति निस्किएकाले उत्साहित भइन् पटरानी। तदनन्तर सिंहासनमा विराजमान भएर आशान्वित स्वरमा सोधिन्– 'नौली! तैँले अन्तस्करणबाट भारदारहरूको विरोध गरेकी होस् कि पाननसाको सुरमा बौलाएकी?'

'म बहुलाएकी हैन, बहुला तुल्याइएकी छु।'

सुबोध रणेन्द्र शाहलाई छोडेर एक ढड्डीको सुरेन्द्रलाई युवराज बनाएकोमा महारानीले आफूलाई भारदारहरूले बौलाहा पारेको ठानेकी छन् अथवा तिनको मगज बिग्रेको। त्यही आफ्नो मनको धारणासित मिल्दोजुल्दो दुःखदायी वाक्यांश नौलीको मुखबाट निस्किएकाले महारानीको हृदय छुन पुगेछ, सहानुभूतिपूर्वक प्रश्न गरिन्– 'तँलाई कसले बहुला तुल्यायो?'

'म बहुलाउनुपरेको कारण यसै मिसिलमा छ सरकार!' मुद्दासम्बन्धी कागजपत्र महारानीका चरणकमलामा राखिदिई छँटाहीले। परन्तु त्यहाँ उपस्थितमध्ये कोही पनि साक्षर थिएनन्। नौली आफैँले झगडाबारेको कागजपत्र पढेर सुनाउनुपर्‍यो।

मुद्दाको पेटबोलीअनुसार भारदारहरूले गरिब, खास गरेर गाउँले, किसान, निमुखा, मजदुर, दलित-पीडित वर्गप्रति बर्तेको पक्षपाती नीति, शोषण, अन्याय, अत्याचारको भन्डाफोर हुन थाल्यो। खुद आफूमाथिको असफल बलात्कारको तीतो अनुभव पनि रुँदै भन्न थाली नौली आँसु पुछ्दै।

भारदारविरुद्ध घ्याम्पोफोराइ सुनेर गगनसिंहलगायत सबैले दुःखानुभाव प्रकट गरे। महारानी भारदारहरूसित पहिलेदेखिन् रुष्ट थिइन्, यतिखेर आगबहुला भइन्। न्यायिक मण्डलीका भारदारहरूलाई नौलीमार्फत माथि बैठकमा बोलाउन पठाइन्, झपार्ने आवेशमा जङ्गिएर अराइन्– 'ती अधमहरूलाई घोक्र्याएर यहाँ माथि ल्याउनू।'

फरियाको घुम्टो हाल्ने फेर कम्मरमा बाँधेर छरिती भई नौली। तल नासलचोकमा पुगी।

त्यहाँ करबद्ध उभिएका निरपराध अभियुक्त उत्साहित भए। चलायमान पनि। नेलसिक्रीको आवाज सुनियो।

दोर्जे तामाङले भान्जीलाई चिनेछ– 'सरकार!' हात जोर्‍यो। मुक्तिको माग गर्‍यो, रुन-कराउन लाग्यो। उसको मरणोन्मुख हालत नजिकबाट देखेर नौलीको शोक, क्रोध, क्षोभको सीमा रहेन।

हातको तरबार छोडेकी छैन। चाहे मुद्दा सुनाउने बेलामा होस् या बैठकबाट यहाँ आउँदा।

दाह्रा किटिएको छ उसको। आँखा लाल, डिल र पलक फुलेको। कपाल छाडा, यत्रतत्र छरिएको, मानौँ रणचण्डी। मामा निकट पुगी समवेदना प्रकट गर्न।

प्रचलित नियम-कानुनमुताबिक त्यसो गर्नु वर्जित थियो। भारदारहरूले रोक्न लागे।

अवरोधक र अवरोधितबीच तोयमोय सुरु भयो। अघिल्लाहरूको तेजोवध गर्नका निम्ति पछिल्लीले महारानीको हुकुममुताबिक तिनलाई घोक्रेठ्याक लगाएर माथि बैठकमा लानका निम्ति तरबार नचाउन थाली।

सलामी गारतका टुकडी थिए त्यहाँ। पुलिस-सैनिक, अङ्गरक्षक, झगडिया, दर्शनभेटका निम्ति आएका प्रतिष्ठित व्यक्तिहरूको घुइँचो।

त्यो खचाखच जनसमूहलाई देखेछन् युवराज सुरेन्द्रले माथि आफ्नो लङपट्टिको आँखीझ्यालबाट। साथै नौली हातमा हतियार लिएर नाङ्गो नाचमा उत्रेकी।

उनको मनमा भक्कुलाई राँगो भोग दिन लागेको तमासा भन्ने भ्रम परेछ। स्वाभाविक पनि। अस्त्रधारीलाई भैरव ठानेर उनको लहडी मनोवृत्ति चिच्च्यायो– 'ए भैरव! राँगा काट्... एक चोटमा छिना! च्वाट्टै पार्!'

युवराजाधिराजले राँगो काट्ने हुकुम गरेका थिए। नौलीको मनमा युवराजाधिराजबाट भारदारहरूलाई न्यायोचित इनसाफ नगरेबापत तिनीहरूमध्येका एकदुई जनालाई कटाएर अरूलाई नसिहत दिन खोजेको भन्ने मिथ्याज्ञान पऱ्यो। साँच्ची भन्ने हो भने त्यस्तै हुकुम पाउने प्रतीक्षामा थिई नौली। सोह्रमा सत्र परेको अनुभव गरी। अब उसको मनो-झुकाव महारानीको हुकुममुताबिक भारदारहरूलाई घोक्र्याएर माथि लानेमा मात्र सीमित रहेन, युवराजको आज्ञाबमोजिम काट्नेतिर प्रवृत्त भयो। तरबार उज्याएर साँच्चिकै मार हान्ने मुद्रामा कसिई।

उता कुचाले बढारेर फाल्नुपर्ने धूलो हावाले उडाउन लागेको ठानेर महारानीले नौलीको विरोध गरिनन्। भारदारहरू काटिए काटिऊन् भन्ने मनोवृत्तिले हेरिरहिन्।

भारदारहरूले 'अदेखा नानी नछुना बाहुनी' उक्तिअनुसार दरबारकी नानीलाई शारीरिक प्रतिरोध गर्न भएन। केही प्रतिक्रिया नदेखाई बसेमा ज्यान जान सम्भव। द्विविधामा परे।

अत: महारानीको निर्देशन पाउने आशामा उँभो कचहरी बैठकतिर दृष्टि दिन लागे। गगनसिंहलाई देखे। प्रत्यक्ष रूपमा खुसामद गरे पनि भारदारहरू उसको अभ्युदयमा जलेका थिए। त्यसको पर्बाह गर्दैनथ्यो ऊ। आफूखुसी महारानीको नाममा हुकुम ठोक्थ्यो। उसप्रति कसैको नियन्त्रण थिएन। अहिले पनि माहारानीको सान्निध्य देखेर द्रष्टाको मनमा पाप सृष्टि भयो– 'कहीँ उसले राजाको स्थान ओगट्ने हो कि?'

एकातिर गगनसिंहप्रतिको यस्तो नचाहिँदो आशङ्का, अर्कातिर नौलीको ताण्डवनृत्यबाट काटिने त्रास।

यस्तो विकल्परहित स्थितिमा त्यहाँ टिक्नु 'शुभेन किञ्चित् अशुभेन समाप्तम्' देखे भारदारहरूले। कुनाकाप्चामा पन्छिन, लुक्न थाले। भाग्नु बढिया ठाने।

नौली लखेट्न लागी।

भगौटेहरूको अचाक्ली पौष्टिक आहारविहारको कारणले भुँडी लागेको छ गर्भवती आइमाईजस्तो।

कोही बथाहा, कुनै दमको रोगी. धेरैजसो मधुमेहले पीडित। भागदौडमा छिटाछरिता थिएनन्। पैदल हिँड्ने बानी नभएकाले पनि आतेसमा भाग्नेभन्दा लड्ने धेरै भए।

कुनै चारचित परे. कोही एकअर्कामाथि लडे। कोही उँधोमुन्टो।

धेरै उँधोमुन्टेका चस्मा खस्यो। अपनेत्रबिनाको धमिलो दृष्टिले लखेटुवीको तरबारमा छुरा रगत देखेको भूटो आभास भयो मान्छे काटेको जस्तो। अपगत भन् हडबडाए। भागाभागमा तीव्रता आयो, जता पायो उतै फाल हाल्न थाले टुपी ठाडो पारेर।

कसैको नक्कली दाँत भन्यो, हीराको औँठी हरायो, सुनको सिक्री बेपत्ता। कुनैको नारीघडी खसेर भुइँमा फुट्यो। गोडा मर्कने, कम्मर सर्कनेहरू खल्र्याङखुट्टीमा भाग्ने पनि थिए।

नौली भक्कुको भैरवझैँ खेद्दै छे।

हाहाकार मच्चियो।

सुरक्षाकर्मीले लखेटुवीलाई रोक्नुपर्ने हो शान्तिसुरक्षाका निम्ति। तर उनीहरू नौलीका छरछिमेक, निकटका आफन्त, हितु र सम्बन्धित। नौली कर्रा शाही सवारी क्याम्पमा दरबार लाग्दा उसको भनसुनबाट सरकारी सेवामा नियुक्ति पाएका। यस्ता आभारीले उपकारकलाई किन छेकथुन गर्थे? त्यसका अतिरिक्त तिनीहरू आफ्नो गाउँले, शुभेच्छुक दोर्जे तामाङ बिनाकसुर जेलनेल परेको देखेर भारदारहरूसित क्रुद्ध छन्, मनमनै पाकिरहेका, मौका परे तिनलाई छप्काइहाल्लान् जस्ता।

पलायित हूल भाग्दै मूल चोकभित्र लुक्न पस्यो। त्यहाँ पनि भारदारहरू रहेछन् राजपरिवारको दर्शन गर्नका निम्ति ढुकी बसेका। ती पनि नौलीको सशस्त्र आक्रमणमा टिक्न सकेनन्। कोही जलाशय नारायणचोकतिर अनभरिए, कुनै मसानचोकतिर सुइँकुच्चा ठोके।

एक जना धैर्यधारी अफिसर भागेन, अडिग उभिइरह्यो।

यो ठिङ्गीको धैर्यबारे छोटो व्याख्याले मात्र उसप्रतिको चिनारी पूरा हुँदैन। विस्तृत परिपाठको आवश्यकता छ – ऊ मत्ता दत्तारलाई झुक्क्याएर त्यस स्तनपायीमाथि फन्दा हाल्न सक्ने धीरशिरोमणि हो। त्रिशूली पुलबाट घोडासहित फाल हाल्ने पनि। त्यस्तो पराक्रमीले एउटी स्वास्नीमान्छेको हमलामा किन पीठ देखाउँथ्यो? हमलावरको हातबाट हतियार खोस्न अघि सऱ्यो।

निहन्त्रीको चेहरा ज्वालिनीको जस्तो रातो र तातो छ, आँखा चिम्लिएर तरबार उज्याउँदै अधिसराको टाउको दुई फ्याक पार्ने इरादाले मारक दूरीनेर पुगी। चोट छोड्न लागेकी मात्र के थिई, नाडी च्याप्प समात्यो अग्रसरले। उसको नासिकाविवरभित्र हमलावरले खाएको पानमसला र अफिमको हरक घुसेछ। नसालु गन्ध पारख्नका निम्ति व्यसनीको खाने मुखनेर घोप्टियो, साथै तरबार खोस्न थाल्यो।

खोसाखोसको घम्साघम्सीमा खोसुवाले लगाएको ग्रीष्मकालीन फौजी कुर्ताको माथिल्लो टाँक खुस्किएछ, तब उसको वक्षस्थलबाट रौँको दायाँ भुमरी चिह्न बाहिर चियाएको जस्तो देखियो।

श्रीवत्स चिह्नले गर्दा नौलीको मनमा उक्त भारदार आफ्नो परिचित वीरनरसिंह भएको झझल्को लागेछ। मुखमा आँखा गाडेर नियाली – हाडे चेहरा, गोरो वर्ण, तेजिला नयन, चौडा निधार। आफ्नो मनस्कान्तलाई प्रस्ट ठम्याई – वीरनरसिंह।

'प्राणनाथ!' हतियार समर्पण गरी तर मिलनको उत्तेजना मनभरि छताछुल्ल भएकाले बक फुट्न सकेन, हर्षाश्रु झार्न थाली।

पानको नसा मत्थर भयो। हाँपझाँपले गर्दा दम बढेको थियो खलाँतीझैँ। पेट फुक्रु र सुक्रु। त्यो स्वाँ-फ्वाँ छैन अब। स्वाभाविक स्वरले– 'नाथ! मलाई चिन्नुभएन?' लिप्सिन पुगी कामद चाहना बोकेर।

'नदेख्ना दरबारका नानी, नछुना बाहुनी' युक्तिअनुसार नाथ पछि हट्छ, मानौँ अबगालको पुरिया वासनातृप्तिका लागि लहसिन आएको थियो।

अब सेर्बूले आफूलाई बहिष्कृत ठानी। अघि बढ्न सकिन। आफ्नो परिचय सुनाई– 'म सेर्बू हुँ!' बुङताङमा भेट भएको घटनावलीदेखि यहाँ आउँदासम्मको करुण कथाव्यथा चण्डीपाठ गर्ने पाराले वर्णन गरी सङ्क्षिप्त रूपमा।

महारानीको हुकुममुताबिक भारदारहरूलाई घोक्र्याएर माथि बैठकमा लान आएको साँचो बेहोरा पनि अवगत गराई। पछि युवराजाधिराज सुरेन्द्रको हुकुमबमोजिम काट्न तम्सिएको पनि ढाँटिन।

'नानी ! म महारानीको दर्शन गर्न चाहन्छु,' दर्शनाभिलाषीले अनुरोध गऱ्यो। 'मलाई घोक्र्याउँदै माथि बैठकमा पुऱ्याउनोस्। यसो गर्नाले म महारानीको दर्शन पाउँछु। तपाईंले हुकुममुताबिकको काम तामेल गरेको ठहरिनेछ।'

हृदयदेवलाई गलहत्त्याउन किन मान्थी प्रेमगर्विता? 'नाइँ' को मुन्टो हल्लाउँदै एक पाइला पछि हटी। उत्ति नै खेरि प्रेमीलाई अघि लगाएर तडातडी माथि कचहरी बैठकतिर कदम बढाई।

आधा बाटो काटेपछि सेर्बूले पोल्टाबाट उमा र देवदूतको प्रेमपत्र आफ्नो प्रेमीलाई हस्तान्तरण गरिदिई साखुल्ले हुन।

गगनसिंहको हत्या हुनेबारे पनि सुटुक्क कान फुकी। श्रवणेन्द्रियमा सुइरो रोपिएको अनुभव गर्छ श्रोता। पछि उसले देवदूतलाई भूत ठान्यो, जस्तो गगनसिंहको धारणा थियो। उमालाई बौलाही। छँटाहीबारे विशेष ध्यान दिन आवश्यक सम्झेन। चिठी हेरिटोपल्यो। 'कालो अक्षर भैँसी बराबर' खल्तीमा हालेर बाटो नाप्न थाल्यो।

भऱ्याङ चढेर बैठकको चोटाबाहिर पुगेपछि उसको गतिमा परिवर्तन आयो। बैठकको ढोकाभित्र प्रवेश गर्दा खुट्टा टेक्न नसकेको अभिनय गर्दै धरमरिन थाल्यो, अनि ह्वात्त भित्र पस्यो, मानौँ ऊ नौलीको घोक्रेठ्याकमा पर्दै आएको थियो। हुत्तिँदै महारानीको पाउसामुन्नेको भूभागमा ढुनमुनिँदै हात टेक्न पुग्यो माटो खाने चेष्टामा।

'ओहो, जङ्गबहादुरजी !' गगनसिंह भुइँमा लम्पसार जङ्गबहादुरलाई उठाउन झम्टियो, अतालिँदै त्रास व्यक्त गर्दै लामो जिब्रो काढेर नौलीलाई हप्कायो– 'धत् लाटी ! अरू भारदारालाई पो गर्धन्याउनु महारानीबाट हुकुम बक्स भएको। जङ्गबहादुरलाई हैन। उहाँ त मेरा मित्र हुनुहुन्छ। महारानीका विश्वासपात्र ताबेदार !'

जङ्गबहादुरले भुइँमा झरेको टोपी लगाएर महारानीको दर्शन गऱ्यो। सबैलाई सुनाएर भन्यो– 'हुकुम, तामेल गर्न मैले आफ्ना मामालाई गोली ठोकेर मारेँ। त्यस्तै नौली नानीले पनि हुकुममुताबिक मलाई तलदेखिन् घोक्र्याउँदै यहाँ माथिसम्म ल्याउनुभयो। यो कुनै नराम्रो काम हैन। राजाज्ञा पालन गर्नु प्रजाको कर्तव्य हो।'

जङ्गबहादुरजस्तो भीषण काम गर्ने, त्यही पनि जर्नेल भएको वीरवरलाई तल चोकदेखि घोक्र्याउँदै माथि बैठकसम्म ल्याएर पछार्न सक्ने केटीको हिम्मतलाई प्रशंसा नगरी रहन सकिनन् महारानी। सराहनीयको नजरले तल गोडादेखि माथि मुखतक हेरिन् दुईचार पल्ट।

कथङ्कदाचित् उनको र सुरेन्द्रको हस्ताहस्ती परेको खण्डमा उनको बचाउका निम्ति अघि सर्ने मात्र गगनसिंह एक जना पाएकी थिइन्। दोस्रो जङ्गबहादुर। तेस्री नौलीलाई ठानिन्।

एउटी पाइनदार संरक्षिका थपिएकोमा खुसी भइन् महारानी।

त्यही खुसीयालीमा नौलीको मामासहित सबै बन्धी मुक्त भए।

तल चोकबाट महारानीको जयजयकार गुन्जियो।

नौलीको मानवृद्धि भयो 'कोठामोचे', नामकरण 'पुतली'।





# १४

वि. सं. १९०३ आश्विन ३ गतेको दिन राति १० बजेको समयमा गगनसिंहलाई अज्ञात व्यक्तिले गोलीको निसाना बनाई ठहरै मारेछ।

शोकसन्देश जाहेर गर्न उसको छोरो बजिरसिंह रुँदै-कराउँदै हनुमानढोका राजदरबार आयो। साथमा जङ्गबहादुर पनि।

धेरैजसो दरबारका अङ्गरक्षक गगनसिंहले भर्ना गरेका थिए। स्तब्ध भए। गारतमा खलबल मच्चियो। यस रहस्यमय हत्याकाण्डमा ठूलठूला व्यक्तित्व, यहाँसम्म कि भाइभारदार, मन्त्रिमण्डलका सदस्यदेखिन् लिएर प्रधानमन्त्रीसमेतको भित्री हात रहेको कुरा चर्चा-परिचर्चामा आयो।

बढ्दो भ्रष्टाचार, अन्याय-अत्याचार, बलात्कार, नातावाद, कृपावाद र बदअमलीबारेको जनगुनासो देशमा व्याप्त थियो। त्यसको दुष्प्रभावले सुरक्षा सैनिकहरू पहिलेदेखिन् भाइभारदारसित रुष्ट। अहिले यो हत्याकाण्डमा प्रधानमन्त्री-समेतको संलग्नताको आशङ्काले झन् रिसाए।

फौजी नियम-कानुनअनुसार आफूमाथिका वरिष्ठ भारदारहरूका विरुद्ध बोल्न नहुने हुनाले केही भनेनन्। मनमनै मुर्मुरिए। निर्मम हत्याको दुःखदायी खबर भित्र दाखचोकमा द्वारपालिकालाई मुखसारी गरे। त्यहाँबाट राजारानीको जुनाफमा जाहेर हुन पुग्यो।

महारानीले झ्यालबाट हेरिन्।

चोक चिरागले उज्यालो। त्यो प्रकाशको विपरीत कप्तान बजिरसिंहको मुख चुक घोप्टिएको जस्तो कालोनीलो। त्यही सङ्ग्रालिएको चेहरातिर दृष्टि दिएर महारानीले सोधिन्– 'तेरो बाबुलाई मार्ने को हो?'

बजिरसिंहको बक फुट्नुभन्दा आँसु झर्नु अधिक हुन थाल्यो, हात जोरेर काँपिरह्यो।

जङ्गबहादुर पनि उत्तिकै विह्वल थियो। तैपनि अघि बढेर बिन्ती गर्‍यो– 'सरकार! अनर्थ भयो। पूजामा बस्नुभएका काजीलाई कसैले गोली हानी मार्‍यो।'

महारानीले आफ्नो राजनीतिक आकाङ्क्षाको पिलपिले दियो झ्याप्प निभेको अनुभव गरिन्।

'कसको काम होला? को होला त्यो अधम?'

गगनसिंहको हत्या गर्नेबारे देवदूतले उमालाई लेखेको प्रेमपत्र जङ्गबहादुरको हातमा नपरेको होइन। तर त्यो चिठी उसले आफ्नो भाइ बद्रीनरसिंहलाई पढ्न लगाएको थियो बेहोरा बुझ्न।

त्यस युगमा प्रेमविवाह अभद्र व्यवहार मानिन्थ्यो. त्यसै कारण भाइले दाइको सामु आफ्नो प्रेमोद्घाटन गर्नु उचित देखेन। चिठीको बेहोराको आनकातान अर्थ लगाएर दाइलाई भुलभुलैयामा राख्यो। अहिले यहाँ दरबारतिर आउन लागेको बखतमा पनि दाइभाइबीच कानेखुसी भएको थियो। भाइले भूतप्रेतको बाण लागेर गगनसिंह मरेको तर्क पेस गर्‍यो। त्यसमा दाइले विश्वास गरेन। महारानीलाई साँचो उत्तर चढायो– 'हत्याराको पत्तै छैन सरकार!'

सरकारको शोक, क्रोध, क्षोभको सीमा रहेन। त्यसै समय मुख्तियारी तरबार लिएर चारपाँचवटी धाई-सुसारेका साथमा गगनसिंहको घर ढोकाटोल पुगिन्। दरबारबाट करिबमा।

गगनसिंहको मृत देहबाट रगतको छिर्को बगिरहेको। त्यही बेगिलो छिटासमक्ष प्रतिज्ञा गरिन्– 'यो हत्याको बदला लिन सकिनँ भने म लक्ष्मीदेवी नै हैन।'

मृतकको अन्त्येष्टि क्रियाकर्मका निम्ति राष्ट्रकोषबाट लाख रुपियाँ निकासा भयो। साथै गगनसिंहका तीनवटी विधवा सती जानबाट रोकिए।

तत्पश्चात् शवयात्रा राजकीय सम्मानका साथ लाने हुकुम दिइन्।

नेपालको इतिहासमा प्रजाका निम्ति राजकीय सम्मानका साथ अन्त्येष्टि क्रिया गरिएको यो प्रथम उदाहरण, साबिकमा कहिल्यै नभएको।

हत्याको विषयमा मौकामा औपचारिक जाँचबुझ नगरेर चुप बसेमा हत्याराले प्रोत्साहन पाउने। भविष्यमा महारानीको अन्य खास पक्षानुग्रहमाथि पनि यस्तै

हिंसात्मक हमला हुन सम्भव। अतः अपराधीलाई पत्ता लगाएर दण्ड दिनु श्रेयस्कर ठानिन् महारानीले। राज्यको दायित्व पनि।

भोलिपल्ट दिनभरि त्यस सम्बन्धमा महारानी र विश्वासपात्र दासहरूबीच गोप्य विचारविमर्श भयो। पुतलीले बापबैरी साध्ने मौका पाई।

भएभरका भाइभारदार तथा राजकर्मचारीहरूलाई बोलाएर एकै ठाउँमा एकैपल्ट केरकार गर्ने परामर्श चढाई सुटुक्क।

त्यो खासखुसमाथि महारानीको सकारात्मक ध्यान गयो। राति जङ्गी कोतबाट सामेली बिगुल बज्यो।

राजारानी त्यहाँ सवारी हुने सूचना पाउनासाथ मौसुफको गाथगादी सुरक्षाका निम्ति सैनिक टोली कोतभित्र पसे, नाका-नाकामा उभिन पुगे, धेरैजसो मूल द्वारमा थुप्रो लागे।

मट्टितेलको दुर्लभतामा काठमाडौँ समसाँझै अन्धकारमा डुबिसकेको थियो। तर कोतको सानो आँगन चिराग, मैनबत्ती र उज्याली काठले प्रकाशयुक्त छ, झलमल्ल।

आपत्कालीन बिगुल बज्नासाथ भाइभारदार राज्यव्यवस्थाको प्रथा र परम्पराअनुसार कोतमा सामेल हुन दगुरे।

अर्द्धरात्रिमा एकाएक कुदाकुद परेकाले धेरैजसो भारदार निःशस्त्र थिए। शस्त्र हुनेहरूको पनि मूल द्वारमा तैनाथ चपटेले भित्र लान दिएन।

खड्गविक्रम शाह प्रधानमन्त्रीको छोरो भएकाले उसको तरबारमाथि सेन्ट्रीले आँखा लगाउन आँटेन। ऊ एक जना सशस्त्र भित्र पस्यो।

जङ्गबहादुर र मृत गगनसिंहको मिल्ती थियो, साथै पछिल्लो मारिएको खबर दरबार पुऱ्याउने प्रथम व्यक्ति पनि जङ्गबहादुर भएको पृष्ठभूमिमा ऊ र उसका भाइहरू यो हत्याबारे शङ्काहीन हुनु स्वाभाविकै हो, सशस्त्र भित्र छिर्न पाए।

राजदम्पतीको पदार्पण भयो अन्तःपुरको स्यानब्यानसहित। त्यसभित्र पुतली चाकर्नी पनि।

अधिकांश पदाधिकारी हाजिर भइसकेका। सबै भय र शङ्कामा डुबेका– 'गगनसिंहलाई मार्ने को हो? अब के हुने होला?'

यही अन्योलपूर्ण स्थितिलाई हृदयङ्गम गरेर जर्नेल अभिमानसिंहले कुनै भयानक दुर्घटना हुन सक्ने सूचना महाराजाधिराजमा जाहेर गऱ्यो।

प्रधानमन्त्री फत्तेजङ्ग शाह आइनपुगेकाले उनलाई कोतको तनावपूर्ण स्थितिको खबर गर्न जङ्गबहादुरले आफ्नो भाइ बमबहादुरलाई उनको घर नारायणहिटीमा पठायो।

यसै अवसरमा महारानीले जङ्गबहादुरलाई गगनसिंहको हत्याराबारे पुनः सोधिन्।

राज्यको सम्पूर्ण प्रशासकीय अधिकार कान्छी महारानी राज्यलक्ष्मीदेवीको हातमा आएपछि पाँडे भारदारहरू खुलमखुल्ला सुरेन्द्रको पक्ष लिन थाले। उनकै पूर्ण रूपले एकलौटी चाकरी गर्ने भए। यस अवस्थामा कान्छी महारानीलाई आफ्ना समर्थक थापाहरूको सहायताको ठूलो आवश्यकता थियो।

भीमसेन थापापछि थापा खानदानमा माथवरसिंह थापा जेठाबाठा थिए। ब्रिटिस सरकारतिरबाट एक हजार रुपियाँ प्रतिमास भत्ता पाई सिमलामा बसेका। कान्छी महारानीले राजाको अनुमतिबाट उनलाई शीघ्र काठमाडौँ आउन बोलावट पठाइन्। अवश्य ! उनलाई स्वदेश फर्कन हर्ष लाग्यो होला। तर सरासरी काठमाडौँ आउन उचित देखेनन्। दरबारको वस्तुस्थिति राम्ररी अध्ययन गर्नका निम्ति गोरखपुरमा रोकिए।

यति वर्षको देशत्यागपछि उनी फर्कने कुराले काठमाडौँमा प्रसन्नता छायो, उत्साह पनि। महारानी राज्यलक्ष्मीदेवीसमेत थापाको आगमनको प्रतीक्षामा उद्दीस भइन्। उनलाई यथाशीघ्र लिएर आउन एक शिष्टमण्डल भारत-गोरखपुर पठाइयो।

आफ्नो सुरक्षाको पूर्ण विश्वास भएपछि उनी काठमाडौँ आए। तर सहरभित्र पसेनन्। काँठमा बसेर राजधानीको मेलोमेसो अध्ययन गर्न लागे।

उनको भान्जो जङ्गबहादुरले उनीसित भेटेर परिस्थिति थापाहरूको पक्षमा भएको सूचना दियो। तब अप्रिल १७ तारिख १८४३ इ. को दिनमा राजकीय सम्मान र स्वागतका साथ उनी राजारानीकहाँ दर्शनभेटका निम्ति उपस्थित भए। तत्कालै उनलाई प्रधानमन्त्री पद ग्रहण गर्न आग्रह गरियो।

आफ्नो पुरानो शत्रु पाँडे खलकसित बदला चुकाउने उत्तम अवसर उनले गुमाएनन्। स्पष्ट बिन्ती चढाए– 'भीमसेन थापाउपर लागेको राजद्रोहको मुद्दामा

निष्पक्ष विचार नभएसम्म म पनि थापा भएको नाताले एउटा अपराधीमा गनिएको छु। यस्तो छुत लागेको स्थितिमा मैले कुनै राजकीय पद स्वीकार गर्न उचित परोइन, इनसाफ पाऊँ।'

उनको मागअनुसार भारदारहरूको विशेष पञ्चायतले भीमसेन थापा दोषरहित घोषित गरिए। यस मुद्दामा पाँडे पक्षको बयान लिँदा यो सिद्ध भयो कि उनीहरूले थापाहरूको सत्यानास गर्नका निम्ति महाराजाधिराजलाई जानी-जानी असत्यको अन्धकारमा राखेका हुन्। यस अपराधका निम्ति न्यायिक समितिले कसुरदार पाँडेहरू र तिनका सहयोगीलाई प्राणदण्डको फैसला सुनायो। फलतः पाँडे परिवारका मुख्य व्यक्ति करवीर पाँडे र कुलराज पाँडे तत्कालै मारिए। त्यस समयमा भू. पू. प्रधानमन्त्री रणजङ्ग पाँडे बिरामी थिए, मृत्युशय्यामा 'ऐय्या' कष्टप्रद आवाजमा रोइरहेका। उनले काटिनुपरेन। तर बेइज्जतीसाथ उनको सडकमा प्रदर्शन गरियो। घर फर्केर आएको केही घण्टापछि मृत्यु भयो।

भीमसेन थापाको मुद्दा हेर्ने कनकसिंह महतले पनि पाँडेहरूकै साथ काटिनुपर्‍यो। जनश्रुतिअनुसार कनकसिंह निर्दोष थियो। उसले उक्त मुद्दाका सम्बन्धमा जे-जति कागतपत्र किर्ते तयार पारेको थियो ती सबै स्व. महारानी साम्राज्यसमक्ष उनको हुकुमअनुसार गरिएको।

बुद्धिमान कार्कीको ओठ र नाक काटिए। वंशराज बस्नेतले नाक गुमाउनुपर्‍यो। पाँडे परिवारका अन्य ४० जना व्यक्तिको सर्वस्वहरण भयो, देशनिकालामा परे।

पाँडे परिवार यस प्रकार निर्मूल पारिएकाले लक्ष्मीदेवीको अभीष्ट साधना पूरा हुने बाटामा कुनै तगारो बाँकी रहेन। खुसी भइन्। तर राजा राजेन्द्रको मनमा चिसो पस्यो। माथवरसिंहलाई प्रधानमन्त्री बनाउने काममा ढिलाइ गर्न लागे एकौटा बहाना बनाएर।

आखिर भारदार, फौजी अफिसर, साधारण जनताको आग्रह र सर्वोपरि महारानी लक्ष्मीदेवीको ढिपीले गर्दा राजेन्द्रविक्रम शाहले माथवरसिंहलाई २५ डिसेम्बर १८४३ इ. मा प्रधानमन्त्री र प्रधानसेनापतिमा मनोनीत गर्नुपर्‍यो।

परन्तु नवनियुक्त प्रधानमन्त्री सिंहबाट महारानी लक्ष्मीदेवीले जुन कुराको अपेक्षा गरेकी थिइन् त्यो कदापि पूरा नहुने भयो, किनकि सिंहले अनुभव गरे कि

केवल महारानीको इच्छापूर्तिका निम्ति सुरेन्द्रलाई हटाएर उनको स्थानमा रणेन्द्रलाई युवराजाधिराज बनाउनु युक्तिसङ्गत नभएको मात्र होइन, घोर अपराध हो।

स्वयम् राजेन्द्रविक्रम शाह र सम्पूर्ण भारदार एवम् फौज पनि राज्याधिकारका क्रममा पर्ने यो व्यक्तिक्रम कदापि रुचाउन्नथे। त्यसका अतिरिक्त उनलाई यो पनि विश्वास थियो कि प्रयत्न गरिएको खण्डमा सुरेन्द्रको आदत सुधार्न सकिन्छ। उनी यति छिप्पिसकेका छैनन् कि सुधारको सारा प्रयत्न विफल होस्। बरु मौका परेको बेलाबखतमा उनी राजेन्द्रविक्रम शाहलाई सुरेन्द्रका निम्ति गद्दी छोडिदिने कुरा चलाउन पनि चुक्दैनथे।

यसरी माथवरसिंहको अवस्था विलक्षणको हुन पुग्यो :–

फौजमा उनको निकै प्रतिष्ठा र नाम भएकाले उनलाई सजिलैसित पदभार मुक्त गर्न मिलेन, सैनिक विद्रोह हुने डर। त्यसै कारण महारानी राज्यलक्ष्मीदेवी र गगनसिंहको मिलोमतोबाट माथवरको हत्या स्वयम् उनको भानिज जङ्गबहादुरद्वारा गराउने षड्यन्त्र तयार भयो।

जङ्गबहादुरले नाइँनास्ति गरेको खण्डमा उसको पनि ज्यान नबच्ने धम्की देखाइयो। यस षड्यन्त्रमा राजेन्द्रविक्रमको पनि सहमति भयो। फलतः १७ मे १८४५ इ. को ११ बजे राति महारानीको पेटमा शूल चल्यो भन्ने निहुँ गरी प्रधानमन्त्री माथवर दरबारमा डाकिए।

कुनै अनिष्टको आशङ्का नगरी उनी दरबार आइपुगे। माथि कोठाको पर्दापछाडि बन्दुक लिएर जङ्गबहादुर खडा थियो। अनि गगनसिंह।

माथवरसिंहले ढोकाको सँघार नाघ्नासाथ पर्दाभित्रबाट बन्दुकका दुई गोली छुटे। एक गोली उनको मस्तिष्कमा लाग्यो। अर्को छातीमा।

उनी ढलमलिँदै महाराजाधिराजअगाडि लड्न पुगे। दुवै हात फैलाएर आफ्री माता र छोराहरूका निम्ति दयाको भिक्षा मागे।

त्यहाँ उपस्थित आठपहरियाले उनको कम्मरमा तरबारले चोट पुऱ्यायो, अङ्गभङ्ग गऱ्यो।

भोलिपल्ट चौतरिया फत्तेजङ्ग शाहलाई प्रधानमन्त्री पद थाम्न हिन्दुस्तानबाट झिकाइयो। उनी नआइपुगेसम्म राजारानीको प्रत्यक्ष शासन चल्यो।

सेप्टेम्बर १८४५ इ. मा चौतरिया फत्तेजङ्ग प्रधानमन्त्रीमा मनोनीत गरिए। उनले गगनसिंह, अभिमान राना र दलभञ्जन पाँडेलाई पनि आफ्नो मन्त्रिमण्डलमा सम्मिलित गरे। महारानीको विशेष कृपाको फलस्वरूप गगनसिंह प्रधानसेनापतिमा पनि नियुक्त गरियो। अन्य समस्त विभागको कामकाज र हेरविचारको अधिकार पनि उसैलाई सुम्पिइयो। वास्तवमा प्रधानमन्त्रीको समस्त जिम्मेवारीको उपभोक्ता हुन पुग्यो गगनसिंह।

फत्तेजङ्ग नामको मात्र प्रधानमन्त्री रहे।

गगनसिंहको कृपापात्र भएको कारणले जङ्गबहादुर जर्नेल बनाइयो। मन्त्रिमण्डलमा नभए पनि कुनै मन्त्रीभन्दा उसको प्रतिष्ठा कम थिएन। यसले गगनसिंहको चुरीफुरी चुलीमा पुग्यो। ऊ कसैलाई टेर्दैन। महारानीको नाममा आफूखुसी हुकुम ठोक्छ। यस्तो प्रतीत हुन थाल्यो. मानौँ ऊ दोस्रो राजा थियो।

कामको व्यस्तताले पनि उसलाई धेरैजसो महारानीको खोपीमा बस्नुपर्थ्यो साधसोधका निम्ति। पुरानो बैठके भएको कारण कहिले भित्र दरबारमा खाने. सुत्ने, लाडिएर बोल्ने। यसरी महारानीसमक्ष न्यासे पल्टिएको दरबारियाहरूलाई मन परेन, ईर्ष्या गर्न थाले।

महारानी र गगनसिंहबीच कुत्सित सम्बन्ध भएको अफबाह फैलियो जसले गर्दा गगनसिंहलाई पनि माथवरसिंहलाई जस्तै गरेर जङ्गबहादुरद्वारा मराउन भारदारहरूबीच गुप्त परामर्श भयो। तर गगनसिंह र जङ्गबहादुरको घनिष्ठता बढ्दै गएकाले उपर्युक्त मोतो जङ्गबहादुरसमक्ष कसैले मुख फोर्न आँटेका थिएनन्।

मोतो न जोतोको स्थिति थियो।

यस्तो आफूले जान्नु न सुन्नुको अवस्थामा महारानीबाट गगनसिंहको हत्याबारे सोधिएको सवालको जवाफ चढाउन असमर्थ छ जङ्गबहादुर। विचलित मुख लगाएर उभिइरह्यो, बोलेन। साथै महारानीको प्रश्नलाई अनुत्तरित छोड्न पनि खतराले खाली थिएन। महारानी बारम्बार त्यही जिज्ञासा दोहोऱ्याइरहेकी छन्– 'गगनसिंहको हत्यारा को हो?'

जङ्गबहादुर असमञ्जस स्थितिमा पऱ्यो। के भनेदेखि महारानीको कोपभाजनबाट बच्न सकिने हो, गम्न लाग्यो। अन्ततोगत्वा महारानीको आशयबमोजिम नजिक उभिएको काजी वीरकिशोर पाँडेतिर लक्ष्य गरेर मुख खोल्न बाध्य भयो–

'महारानी! कुरा बिन्ती चढाउन घाँटीसम्म आएको छ। भनिहाल्न आँट पुग्दैन। कहीँ ठीक ठाउँमा पर्दैन कि!'

जुँगा चल्यो, कुरा बुझिन् महारानीले। उनलाई सबै भारदारमाथि शङ्का थियो। सबैलाई दण्ड दिनुपर्ने। केवल सजाय तोक्नका निम्ति कुरा कोट्याइरहेकी एक जनालाई अचानो बनाउन। अब बिनाहिचकिचाहट वीरकिशोरलाई तुरुन्त कैद गर्न हुकुम दिइन्।

वीरकिशोर समातियो।

उसलाई अपराध स्वीकार गराउन महारानी स्वयम् क्रुद्ध नागिनीझैँ माथिबाट फाल हाल्दै तल पटाङ्गिनीमा आइपुगिन्।

वीरकिशोरले अनभिज्ञता जाहेर गर्‍यो। त्यसले महारानीको क्रोधाग्निमा घृताहुतिको काम गर्नुसिबाय केही भएन। अभिमानसिंहलाई वीरकिशोरको टाउको तुरुन्त काट्न आज्ञा गरिन्।

अभिमानसिंह अनकनायो, महाराजाधिराजको आज्ञाबिना वीरकिशोरको शिर छेदन गर्न साफ नामन्जुर गर्‍यो।

महारानीले लोग्नेको मुखतिर हेरिन् परमाज्ञाका निम्ति।

यति बेलासम्म राजेन्द्र नबोली बसेका थिए देवमूर्तिझैँ। अब कुरा आफ्नै थाप्लामा पर्न लागेको देखेर उनी यस सम्बन्धमा प्रधानमन्त्री फत्तेजङ्गको पनि राय चाहिन्छ भनी उनलाई डाकी ल्याउने निहुँले बाहिर निस्किए।

राजाबाट कोतको भयावह अवस्थाको यथार्थ सूचना पाउनासाथ फत्तेजङ्ग घरबाट कोततिर हिँडे। तर कोतको द्वारपालले उनी एक जनाबाहेक उनका लावालस्करलाई भित्र जान दिएनन्, त्यही पनि असुरक्षित अवस्थामा।

भारदारहरूको मनमा गगनसिंहको हत्या जङ्गबहादुरले गरेको भ्रम परेको छ, किनकि उनीहरूबीच आठ-पाँच यस्तै गुप्त सरसल्लाह हुने गर्दथ्यो।

यही मिथ्याबोधको कारणले भारदारहरू र जङ्गबहादुरका भाइबीच पहिले वक्रभावको भनाभन सुरु भयो। पछि उत्तेजित खडाजङ्गी। जङ्गबहादुर विचारशील छ, बोल्दैन।

महारानी झ्यालबाट लगातार क्रोधातुर वाणीमा– 'गगनसिंहको हत्यारा को हो?'

उत्तर नआएकाले प्रश्नकर्ता पुनः तल ओर्लिन्। नाङ्गो तरबार उज्याउँदै सरासर स्वयम् वीरकिशोरको टाउको काट्न जाइलागिन्। फत्तेजङ्ग र जङ्गबहादुरले जम्ला हात गरेर छेकेकाले फर्किएर माथि जान बाध्य भइन्। तर अझ उनको रिस सेलाएको थिएन– 'गगनसिंहको हत्यारा पत्ता नलगाई तिमीहरू कोही पनि बाहिर जान पाउँदैनौ।'

फत्तेजङ्ग, अभिमानसिंह र जङ्गबहादुरको मातहतमा जनही तीन–तीन पल्टन रहेको थियो।

आफ्नो अन्तर्गतका सेनालाई खबर गर्न अभिमानसिंह बाहिर निस्किन हिँड्यो। तर सम्पूर्ण राष्ट्रसेनाको प्रभुभक्ति राजदरबारप्रति भएकाले निस्किन पाएन, गारतले रोक्यो।

उसलाई आफूविरुद्ध अन्यायी, अत्याचारी, भ्रष्टाचारी आदि जनगुनासोको कारणले फौजमाथि दुष्प्रभाव परेको जानकारी छैन। कोतबाहिर फुस्किने प्रयत्न गऱ्यो। यो उसको ठूलो भूल थियो।

बलमिचाइ गरेर बाहिर उम्किन लागेको आरोपमा उसको छातीभित्र सङ्गिन रोपिदियो सैनिकले– ग्वाम्म।

रगतको फोहरा छुट्यो। त्यही रुधिर धाराले भित्तामा लेख्यो– 'गगनसिंहलाई मार्ने जङ्गे हो।' प्राणहीन भयो।

उपर्युक्त आरोपलाई फत्तेजङ्गको छोरो खड्गविक्रम शाहले तुरुन्त समर्थन गऱ्यो– 'यो सबै बदमासी जङ्गेकै हो।'

कडा वाक्यले विरोध नगरेमा खड्गविक्रमको आरोप सदर ठहरिने डरले जङ्गबहादुरको भाइ कृष्णबहादुरले मुख छोड्यो– 'झूटा चौतरिया! चुप लाग्। यस्तै बकबक गरिस् भने तँ पनि अभिमानसिंहझैँ मारिएलास्!'

'हजुर' सम्बोधनवाची शब्दको मान्यताप्राप्त शाह घरानालाई कँवर केटाले 'तँ' को सञ्ज्ञा प्रयोग गरेको खड्किएछ खड्गविक्रमलाई। त्यही पनि यस्तो भिडमभिडको स्थितिमा। एक्कासि कृष्णबहादुरमाथि तरबारको वार गऱ्यो।

सहसा यत्रो ठूलो साङ्घातिक हमला होला भन्ने सोचेको थिएन कृष्णबहादुरले। असावधानीमा बचाउका निम्ति हात उठाउँदा उसको दाहिने हातको बूढी औँलो काटियो। रगत तरर्र चुहिन थाल्यो। घायल भाइ कृष्णबहादुरको रक्षा गर्न बमबहादुर

जाइलाग्यो। तर उसको तरबार म्यानमा बाँधिएकाले हतारमा गाँठो फुकाउन सकेन। खड्गविक्रमले उसमाथि पनि प्रहार गर्ने मौका पायो।

दैवसंयोग खड्गविक्रमले हानेको तरबारको टुप्पो दलिनमा ठोकिएकाले मारकउपर पूरा मार पर्न पाएन, सामान्य चोट लाग्यो।

बमबहादुर अझ तरबार थुत्ने प्रयत्नमा छ, सकेको छैन। खड्गविक्रमले दोस्रो मारका निम्ति तरबार उज्याइहाल्यो।

यसै समयमा धीरशमशेरले बिजुली चम्केको गतिमा आएर तरबारको एक चोटमा खड्गविक्रमलाई कम्मरमा हानेर दुई टुक्रा नपारेको भए बमबहादुरको ज्यान कदापि बच्ने थिएन।

खड्गविक्रमको मृत्युले स्थिति झन् गम्भीर भयो, डामाडोल। चौतरिया अत्यधिक बहुसङ्ख्यामा थिए। राजपुत भएको कारणले पनि 'त्वं शरणम्' मा जान भएन। निहत्था लड्न तयार परे। यस्तो साङ्ग्रामिक अवस्थालाई काबूमा ल्याउने हेतुले जङ्गबहादुर लम्किँदै फत्तेजङ्गनिर पुग्यो। पुत्रशोकले विह्वल बाबु जङ्गबहादुरको कुरा सुन्ने पक्षमा भएनन्। अन्य भारदारको लहैलहैमा लागे। 'गगनसिंहको हत्यारा जङ्गबहादुर हो' कराउँदै महारानीकहाँ जान भऱ्याङ उक्लन थाले।

उनको पछि-पछि 'मेरो कुरा सुन्नोस्' भन्दै जङ्गबहादुर दगुऱ्यो। एक अङ्गरक्षक भऱ्याङको शिरमा उभिइरहेको थियो कसैलाई पनि महारानीसमक्ष प्रस्तुत हुन नदिन। उसले जङ्गबहादुरको मुखमा हेऱ्यो। त्यहाँ अवश्य सिकिस्त भाव देख्यो होला, नजिक खडा राम आलेलाई फत्तेजङ्गउपर गोली चलाउने आज्ञा दियो। गोली लाग्नासाथ फत्तेजङ्गले ऐय्या भन्न पनि पाएनन्। प्राणहीन भएर भऱ्याङबाट लड्दै तल पछारिन पुगे।

पटाङ्गिनीको अर्कातिर रणोद्दीपसिंह र गोप्रसाद शाहमा मुड्कामुड्की चलिरहेको थियो। अघिल्लाले धर्मपरायण मनोवृत्तिको कारणले होला निःशस्त्र प्रतिद्वन्द्वीविरुद्ध हतियार चलाएन। दुवै जुधारुबीच द्वन्द्वयुद्ध सुरु भयो। यसै बखत बमबहादुर र कृष्णबहादुर आएर गोप्रसादलाई बिताइहाले।

तत्क्षण सिसमहलको झ्यालबाट 'काट् ... काट् ... काट् ...' भन्ने आदेश आयो। त्यो स्वर महारानीको हुन सक्छ, नहुन पनि या अन्य अडभङ्गेको। सम्भाव्य

उमा या पुतलीको। जसको आवाज भए पनि गारतका कम्पुले भारदारहरूलाई छपाछप काट्न थाले। कोतको पटाङ्गिनी अब पूरा हत्यास्थलमा परिणत भयो।

तथापि फत्तेजङ्गको भाइ वीरबहादुर शाहको नेतृत्वमा चौतरिया दलले निकै पराक्रम देखायो। पछि साहससाथ जो अझ पनि सैनिकको सामना गरिरहेका थिए तिनको हिम्मत पनि हराएर गयो। उनीहरू अँध्यारोमा जता पायो उतै भाग्न थाले। कोही होचो पर्खाल नाघेर उम्के। कोही नालको बाटो। कोही प्राणरक्षाको कुनै उपाय नदेखी मुर्दाहरूकै बीचमा मरेझैँ घोप्टिए।

केही मानिसहरूको ज्यान जङ्गबहादुरका भाइहरूले बचाए। बाँच्नेमध्ये फत्तेजङ्गका भाइ रणशूल शाह पनि थिए।

मध्यरात्रिदेखि प्रारम्भ भएको यो लामो र भयङ्कर नरमेध उज्यालो नहुँदै समाप्त भयो।

धेरैजसो दियालो र चिराग निभिसकेका, कुनै मधुरा। दुईतीन ठाउँका महाद्वीप जस्ताको तस्तै प्रकाशयुक्त थिए।

'देवदूत!' जननी स्वरले– 'देवदूत!'

रक्तपाती आ-आफ्ना घाउचोटमा मलमपट्टी गर्नमा व्यस्त थिए। कोही रक्तरञ्जित हतियार धोइपखालीमा।

स्त्रीजनको बोलावटतिर कसैको ध्यान गएन, काममा एकचित्त रहे। जङ्गबहादुरले कुनै व्यक्तिउपर हतियार चलाउन नपरेकाले उसलाई धुने-पखाल्ने प्रश्न आएन। लहुलुहान व्यक्तिमाथि चिन्तित दृष्टिले हेरिरह्यो, कवै जनसंहारमाथि। कुनै घोप्टो परेर मरेको, कुनै उत्तानो। कोही घुस्रुक्क। कसैको टाउको छैन। कुनै मुर्दा प्याकप्याक मुख बाइरहेका। कुनै छटपटाइरहेका।

स्वास्नीमानिसको स्वरले देवदूतलाई डाकेको आवाजले जङ्गबहादुरको एकत्रित चिन्तन भङ्ग भयो। बोलाउनेतिर पुलुक्क हेऱ्यो। उमालाई चिन्यो। उसको बाबु गगनसिंहलाई सम्झियो जसको अनुकम्पाले ऊ उन्नतिको शिखरमा लम्किन थालेको थियो।

'देवदूत!' पुनः स्वर पारी उमाले आफ्नो अभिमुख दिशातिर नजर गाडेर– 'देवदूत!' छिनछिनको अन्तरालमा।

उपर्युक्त नामको मान्छेलाई धुइँपत्ता लगाएर खोजिसकेको थियो जङ्गबहादुरले। कहीँ फेला नपरेकाले 'देवदूत' जीवित मानिस होइन, प्रेतात्मा हो भन्नेमा विश्वस्त। तैपनि उमाले हेरेर सम्बोधन गरेको कोणतिर आँखा गाडिरह्यो। सोच्न थाल्यो– यस्तो लासको बीभत्स स्थितिमा उमाले देवदूतलाई खोज्नुको कारण उसको पागलपन पनि हुन सक्छ या पितृशोकको बेचैनीमा प्रेतदेहलाई डाक्न पुगेकी।

यस्तै तर्क-वितर्क खेलिरहेको थियो उसको मनमा। साँच्चिकै उसले आँखा गाडेर हेरिरहेको अँध्यारो कोणतिरबाट एउटा धमिलो मनुष्य आकार निस्कियो। उमातिर जान लागेको दृष्टिगोचर भयो।

त्यो अस्पष्ट आकृतिलाई पिशाच-आत्मा ठानेर तरबारको बिँडमा हात पुऱ्यायो जङ्गबहादुरले जुध्ने मनसुवाले।

परन्तु जसै मान्छेको लुप्ताकार लमकलमक अगि बढेर महादीपको उज्यालो भूभागमा छर्लङ्ग देखिन पुग्यो, जङ्गबहादुरको आश्चर्यको सीमा नाघ्यो।

देवदूत भूत होइन, मान्छे रहेछ। त्यही पनि उसको आफ्नै साहिँलो भाइ बद्रीनरसिंह, चिन्यो।

कहिले भाइतिर जिल्ल परेका आँखा तिखार्छ। कवे देवदूतलाई बोलाउने अन्यासक्तापट्टि।

बाबुको हत्याले छोरीको चेहरा शोकाकुल हुनुपर्ने हो, आँखामा आँसु। त्यस्तो शोकसन्तप्त चिह्न केही छैन, अन्यपरा। उल्टै प्रेममिलनको उमङ्ग छ। श्रीवृद्धि र मायालु मुस्कान।

प्रेमपरिलुप्तको रङ्गढङ्ग र प्रेमपत्रको जोडघटाउबाट जङ्गबहादुरलाई अहिले झल्याँस्स स्मरण हुन आयो कि यी प्रेमी-प्रेमिकाबीच अवरोध बनेको कारणले गगनसिंहको वध भएको हो खुद प्रेमीद्वारा। अतः उसले पनि यी अनुरागीको प्रेममिलनमा बाधक बन्न मनासिब ठानेन, बरु रूखको आडमा पुरापुर छेकिएर परिस्थितिको अध्ययन गर्न थाल्यो मौन।

प्रेमी कहिले उज्यालो, कहिले अँध्यारो ठाउँबाट लुक्दै-छिप्दै प्रेमिकाकहाँ आइपुग्यो– 'उमा!' सम्बोधन गरेर भन्यो– 'लहरो तान्दा पहरो गर्जेको देख्यौ?'

प्रश्नको अक्षरशः अर्थ थियो – उमालाई अपनाउनका निम्ति गगनसिंहको हत्या नगरी भएन। ऊ एक जनालाई मार्नुपर्दा यत्रो ठूलो नरसंहार हुन गयो।

बल्ल जङ्गबहादुरले 'कोतपर्व' को मुख्य आधारतत्त्व बुझ्यो।

उमाले बुझ्ने वास्तै गरिन। भिन्दै बनिबनाउ योजना रहेछ ऊसित, हतारिँदै– 'प्राणनाथ! हिँडनोस्, माथि महारानीको दर्शन गर्न जाऔँ। तपाईंलाई प्रधानमन्त्री पदका निम्ति हामी सिफारिस गर्दछौँ।' फेरि– 'मजबुरबाट तपाईंमाथि सकारात्मक सोचाइ राखिबक्सेको छ।'

प्रियतमले प्रधानमन्त्री पदलाई लात माऱ्यो– 'प्रिया! प्रधानमन्त्री पद नै जीवनको लक्ष्य हैन, मलाई तिमी पाए पुग्छ। कुनै ओहदाको लालच छैन। तिमी मेरी जीवन हौ। मेरो आत्मा!' चरीचुम्बन बर्साउन थाल्यो।

चुम्बी युगल कोतपरिसरबाट भाग्नका निम्ति पर्खालमाथि उक्लिए। ईर्ष्या, द्वेष, जालझेल, षड्यन्त्र र राजनीतिलाई परित्याग गरेर प्रेमसागरमा फाल हाले, अदेख भए।

तत्क्षण माथिबाट पुतली ओर्लिई, खोजतलासका आँखाले चारैतिर हेरी, स्वर दबाएर डाक्न थाली– 'जर्साब! जर्साब!'

जङ्गबहादुर जर्साब देखा पऱ्यो।

पुतली हतारिँदै बोली– 'देख्नुभो जर्साब उमा र देवदूत भागेका? हामी पनि यहाँ नबसौँ। परिस्थितिको फाइदा उठाएर भागौँ। यस्तो सुनौलो मौका फेरि कहिल्यै आउनेछैन।' प्रेमालिङ्गनका लागि अघि बढी– 'जाऔँ, भागौँ।'

पलायनका निम्ति यो सुझाव बेमनासिब थिएन। किनकि भारदारहरू परमधाम पुगिसकेका। केही सैनिक गगनसिंहमार्फत भर्ना भएकाले निःसर्गतः उमाका पक्षपाती। कोही पुतलीका आफन्त। कुनै जङ्गबहादुरको मातहतका हुनाले पुतलीलाई भगाउन आइतबार थिएन। तर जङ्गबहादुरले त्यसो गर्न चाहेन, हप्कायो– 'धत्, सरकारमा जाहेर नगरी यहाँबाट तिमीलाई गुम पार्नु दण्डनीय काम हो। गाल पर्छ, पाप लाग्छ।' सम्झायो– 'यो पुण्यभूमि हो, राजदरबार!' प्रेमीको नकारात्मक भावले पुतलीको चित्त दुखेछ, मुर्मुरिई– 'ठूलाको बोल, सानाको मोल भन्छन्। तपाईंजस्तो मर्दले आफ्नो वाचाबन्धन तोड्नु नामर्दी हो, ठूलो पाप!' भनी– 'मलाई लाने वाचा गर्नुभएको हैन बुङताङमा पहिलो पटक भेट हुँदा।'

'आफ्नो वचन पूरा गर्ने ताकमा छु ...'

बीचमा कुरा काट्यो जङ्गबहादुरले– 'त्यसका निम्ति धैर्यको आवश्यकता छ। तातै खानु जल्दी मर्नु गर्न हुन्न।' भ्याङ उक्लन अघि बढ्यो। पुतली पछि लागी।

सैनिकले रोकेन।

उहिले एक दिन जङ्गबहादुर र पुतली अहिलेको झैँ साथसाथ महारानीको दर्शन गर्न जाँदा जङ्गबहादुर घोक्रेठ्याकमा परेको अभिनय गरेर महारानीका पाउमा पछारिन पुगेको घटना स्मरण भएछ पुतलीलाई। उक्त अनुचिन्तन याद दिलाउँदै हाँसो गरी– 'तपाईंलाई मैले तल चोकदेखि माथि कचहरी बैठकसम्म गलहत्त्याउँदै ल्याएको भ्रममा परेर गगनसिंह काजीले झन्डैले मलाई ठटाउनुभएको थियो,' सोधी– 'सम्झना छ तपाईंलाई?'

त्यो चाखलाग्दो प्रसङ्ग जङ्गबहादुरले बिर्सेको थिएन, तैपनि केही प्रतिक्रिया जनाएन, महारानीको जयजयकार पुकार्दै मौसुफको जुनाफमा हाजिर भयो, पाँच पटक झुकेर आदाब अर्ज गऱ्यो।

महारानीलाई गगनसिंहको साटो अर्को कर्मठ मतियार जङ्गबहादुर पाएकोमा सान्त्वना मिल्यो, उत्ति नै खेरि युवराजाधिराज सुरेन्द्रलाई त्यहाँको भयङ्कर रक्तपातको दृश्य देखाउन आज्ञा दिइन्। त्यसको तात्पर्य थियो सुरेन्द्रलाई तर्साएर काशीतिर भगाउने अनि रणेन्द्र शाहलाई युवराजाधिराज बनाउने।

काजी रामकृष्ण कँवर, बालनरसिंहजस्ता कट्टर राजभक्तको सन्तान जङ्गबहादुरले राष्ट्रिय एकताको प्रतीक राजगद्दीको मर्यादाक्रममा तलमाथि पार्न किन मन पराउँथ्यो?

उसले महारानीको हुकुमबमोजिम सुरेन्द्रलाई कोतमा उपस्थित गरायो अवश्य। तर बाटामा उनको कान फुक्यो कि यस घटनाले डराउनुपर्ने कुनै आवश्यकता छैन। उनको गाथगादीको सुरक्षाको अभिभारा लियो।

त्यति बेला झिसमिस उज्यालो हुन लागिसकेको थियो। लासहरू सम्बन्धित हकवालाहरूलाई सुम्पिने काम भइरहेको थियो।

त्यहीबीच महारानी राज्यलक्ष्मीदेवीबाट जङ्गबहादुरले प्रधानमन्त्री र प्रधानसेनापति पद प्राप्त गरे। भोलिपल्ट प्रधानमन्त्री र प्रधानसेनापति पदमा नियुक्त

भएबापत जङ्गबहादुर नियमअनुसार महाराजाधिराज राजेन्द्रविक्रम शाहकहाँ दाम राख्न गए।

गत रातको हृदयविदारक घटनाले राजा रुष्ट रहेछन्। जङ्गबहादुरलाई प्रधानमन्त्रीको जङ्गी पोसाकमा देख्नासाथ क्रोधयुक्त स्वरमा चड्किए– 'कसको हुकुमले राज्यका यतिका भारदारहरू र अफिसरहरूको हत्या भएको?'

'सबै कामकुरा महारानीकै हुकुममुताबिक तामेल गरिएको हो.' जङ्गबहादुरले हात जोरे– 'महारानीलाई स्वयम् सरकारबाट राज्यको मुख्तियारी प्राप्त छ।'

राजा अझ बढी कुपित देखिए। रानीको तालुको छाला पैतालामा पुऱ्याउने झोकमा उनको खोपीभित्र पसे पाखुराको बाहुला मास्तिर सार्दै।

अघिल्लो रातसम्म लोग्नेको केही धक मान्थिन् रानी। आज उनका विरोधी भारदार कोही छैनन्। सबै सखाप। जङ्गबहादुरलाई प्रधानमन्त्री र प्रधानसेनापतिमा उनले नै नियुक्त गरेकी। यस्तो सर्दो बन्दो स्थितिमा लोग्नेको पाखुराखैँचाइसित किन डराउँथिन् महारानी? जोईपोइबीच कडाकडी कुरा पऱ्यो। खैँचाखैँची।

राजामा निश्चयात्मक समझदारीको दौर्बल्य र कूटनीतिरहित महत्त्वाकाङ्क्षा भएकाले उनको पक्षपाती हुन खतराले खाली देख्दैनन् जङ्गबहादुर। रानीको वकालत गर्न थाले।

रानी र प्रधानमन्त्रीको संयुक्त स्वरका सामु राजाले आफूलाई टुहुरोटिङ्गरो महसुस गरे, डराए।

रानीको हौसला बढ्यो। आफूलाई सर्वेसर्वा ठानिन्, स्पष्ट शब्दमा लोग्नेलाई औँलो ठड्याएर चेतावनी दिइन् कि अझ पनि उनका ज्येष्ठ पुत्र रणेन्द्रलाई राजगद्दीको प्रथम उत्तराधिकारी बनाइएन भने शीघ्र नै अर्को रक्तपात मच्चिनेछ जसको तुलनामा गत रातको हत्याकाण्ड नगण्य ठहरिएला। यो पूर्वजनाउको तात्पर्य थियो, लोग्नेलाई समेत मृत्युको घाटमा पुऱ्याइने धम्की।

राजालाई ज्यान जोगाउने चिन्ता पऱ्यो। महारानीको धम्कीको केही उत्तर नदिई सरासर भवानी सिंहको साथमा हात्ती चढेर पाटनतिर लस्किए।

लोग्ने तर्सिएकाले अरू बढी आँतबाँत पाइन् स्वास्नीले। तर्सुवाको झन् बढी तेजोवध गर्नका लागि तत्कालै भवानी सिंहको शिरच्छेदन गर्न आज्ञा दिएर एक सुबेदारका साथ ५० जवान सैनिक पठाइन्।

ती सैन्यले राजाको सवारी बीचबाटोमा रोकेर उनको अगाडि नै महारानीको मृत्युदण्डको आदेश अक्षरशः पालन गरे। राजाले प्रतिरोध गर्न सकेनन्। घोसेमुन्टो लगाएर पाटनतिर लागे चुपचाप।

यस्तै भीरुताको कारणले गर्दा स्वास्नीले जङ्गबहादुरलाई दबाव दिन लागिन् यथाशीघ्र रणेन्द्रलाई राजगद्दीमा बसाउन।

परन्तु जङ्गबहादुर पनि पुरानै भारदारका सन्तान थिए राजगद्दीको मर्यादाक्रममा तलमाथि पार्न कदापि नमान्नेवाला। महारानीको चेप कहिले नसुनेको, कवै नबुझेको, कवै बिर्सिएको बहाना गर्न लागे। अब त झन् महारानीको दर्शनमा समेत एक्लै जान पनि छोडे।

हप्ता, महिना, वर्ष बित्यो।

जङ्गबहादुरको आलेङटालेङ नीतिले महारानीको मनमा आफ्नो आकाङ्क्षा परिपूर्ति नहुने शङ्का उत्पन्न भयो। आखिर १३ अक्टोबर १८४९ इ. को दिन एक दासीको हातद्वारा जङ्गबहादुरकहाँ पत्र पठाइन् जसमा सुरेन्द्र शाह र उपेन्द्रलाई मार्ने आज्ञा थियो।

जङ्गबहादुरको स्थिति यस समयसम्म पर्याप्त बलियो भइसकेको थियो, यस पत्रले झन् मजबुत पाऱ्यो। अब उनलाई न महारानीको कुनै डर न वास्ता। उत्तरमा लेखिदिए कि धार्मिक र नैतिक दुवै दृष्टिले पाप ठहरिएको यस्तो अपराध मबाट कदापि हुन सक्दैन। व्यक्तिगत सम्बन्ध जस्तो भए पनि प्रधानमन्त्रीको हैसियतमा मेरो केही राजकीय कर्तव्य छ। त्यसैले पनि म यो आज्ञापालन गर्न असमर्थ छु। पत्रको अन्त्यमा लेखिएको थियो कि यस प्रकार राजकुमारहरूको हत्या गर्ने विचार राखेबापत स्वयम् मुख्तियार महारानी पनि देशको प्रचलित कानुनबमोजिम दण्डसजायको भागी बन्नुपर्नेछ।

महारानीले प्रत्यक्ष रूपमा यस पत्रबारे कुनै नराम्रो प्रतिक्रिया देखाइनन्। तर भित्रभित्रै उनी जङ्गबहादुरको हत्या गराउने षड्यन्त्र रच्न लागिन्।

यस पालि उनको अभीष्ट साधना पूरा गराउने सूत्रधार वीरध्वज बस्नेत छानियो।

माथवरसिंह र जङ्गबहादुरबाट धोका खाइसकेकीले यस पल्ट उनले वीरध्वजलाई तामा, तुलसी र हरिवंश छुन लगाई आफूप्रति सदा इमानदार रहने

र जङ्गबहादुरका साथै सुरेन्द्रविक्रम र उपेन्द्रविक्रमलाई पनि मार्ने षड्यन्त्रमा सक्रिय रूपले सामेल हुने वाचा बँधाइन्। वीरध्वजले महारानीको चित्त बुझायो।

वीरध्वजको दुर्भाग्य र जङ्गबहादुरको सौभाग्यले गर्दा किरिया हाल्ने ठाउँमा पुतली साक्षीका रूपमा राखिएकी रहिछ।

दुवैतिरको चिठी आदानप्रदानको जानकारी छ उसलाई। एक किसिमको मस्यौदाकर पनि। जङ्गबहादुरको ज्यान खतरामा देखेर पुतलीको मनमा जौतिल छड्किन लाग्यो– 'कसरी जङ्गबहादुरकहाँ खबर पठाऊँ?'

दैवसन्जोग दरबारको पण्डित विजयराजसित भेट भएछ उसको। पण्डितको हातबाट जङ्गबहादुरकहाँ छुस्केरा पठाई सुटुक्क। षड्यन्त्रको योजनाअनुसार जङ्गबहादुर भोजभतेरका निम्ति हनुमानढोकाभित्रको भण्डारखालचोकमा डाकिने अनि परमधाम पुऱ्याइने. जसरी माथवरसिंहको वैकुण्ठवास भएको थियो।

यही कपटपूर्ण योजना कार्यान्वित गर्नका निम्ति एक उपयुक्त दिनमा जङ्गबहादुरलाई भण्डारखालमा डाकेर ल्याउन वीरध्वज खटियो।

उता षड्यन्त्रको रहस्योद्घाटन भएकाले जङ्गबहादुर आफ्ना भाइहरू र विश्वास परेका चार पल्टन फौजका साथ दरबारतिर प्रस्थान गरे हातहतियारले लयस।

बाटामा उनलाई दलबलसहित आउन लागेको देखेर वीरध्वजको सातोपुत्लो उड्यो। भाग्न पनि पाएन। अग्रपङ्क्तिका सिपाहीहरूसित भन्यो– 'म प्रधानमन्त्रीसित भेट्न चाहन्छु।'

कृष्णबहादुरले उसलाई निरस्त्र पारेर जङ्गबहादुरको अगाडि लग्यो। जङ्गबहादुरलाई देख्नासाथ वीरध्वजले हडबडाउँदै भन्यो– 'महारानी तपाईंलाई भेट्न चाहिबक्सिन्छ।'

व्यङ्ग्यबाणले घोचे जङ्गबहादुरले– 'स्वयम् तपाईंलाई नै प्रधानमन्त्री पद बक्सिएपछि अब मसित महारानीको के वास्ता रह्यो र?'

यत्तिकैमा कप्तान रणमेहर अधिकारीले वीरध्वजलाई दुई टुक्रा पाऱ्यो। दरबारतिर अगाडि बढे। त्यहाँ पुग्नासाथ जङ्गबहादुरको आज्ञाअनुसार त्यहाँ तैनाथ भएका फौजहरूले आत्मसमर्पण गरी केही गरेनन्। विरोध गर्नेहरूलाई मारे। कोही भागे।

यस हत्याकाण्डलाई इतिहासमा भण्डारखालपर्व भनिन्छ।

यस काण्डपछि जङ्गबहादुरका विरोधी कोही रहेनन्। उनले महारानीको घाँडो पन्छाउने मौका छोपे। तुरुन्तै भारदारी सभा बोलाएर त्यस भेलाको सम्मतिअनुसार महारानी राज्यलक्ष्मीदेवीलाई नेपाल छोडी काशी जाने आज्ञा दिए।

राजाले रानीसित अलग्गिएर बस्ने मन नगरेकाले लोग्ने-स्वास्नी दुवै जना काशीमा निर्वासित जीवनयापन गर्न पुगे।

नेपालबाट बेलाबखतमा यसरी खेदिएका वा स्वयम् भागी आएका बागीको उचालाइमा परेर राजेन्द्रले आफ्नो नेपाल नफर्कने अठोट परित्याग गर्नुपर्‍यो।

उनलाई यो पनि ज्ञान नभएको होइन कि राजनीतिक भगौटेको मौखिक आश्वासन केवल मृगमरीचिका मात्र हो। तर पनि एक शताब्दीअघि सन् १८०३ को अन्ततिर एवंरीतले काशीमा निर्वासित जीवनयापन गरिरहेका स्वामी महाराज रणबहादुर शाह एक दिन एकाएक थानकोट आइपुगे।

उनलाई काठमाडौँ पस्न नदिने हेतुले बाटो रोक्न तत्कालीन प्रधानमन्त्री दामोदर पाँडे अगाडि प्रस्तुत भए दलबलसहित।

ती अवरोधक सेनालाई महानिर्वाणानन्द रणबहादुर शाहले सम्बोधन गरे– 'फौजहो! तिमीहरू मलाई आफ्नो राजा भन्छौ कि दामोदरेलाई?'

फौजी जवान रणबहादुर शाहको पछि लागे। दामोदर मरेको मुसालाई उपियाँले छोडेझैँ एक्लो परे।

त्यही विगत घटना दोहोरिने आशाको क्षीण धागोले तानिँदै र लक्ष्मीदेवीको दुराग्रहले घचेडिँदै राजेन्द्रविक्रम नेपालको तराई अलौ नामक स्थानभित्र पसे भरौटे फौजसहित।

भाडाका टट्टू र उनलाई छेक्न काठमाडौँबाट खटिई गएका राष्ट्रसेनाबीच फाटफुट गोली हानाहान भयो। केही बेरको ढ्याङढ्याङ-दुङदुङपछि राजा राजेन्द्र पक्राउ परे।

विगत चीन-नेपाल मैत्री सन्धिसित तिब्बत सन्तुष्ट थिएन। शीघ्र नै ल्हासास्थित नेपाली व्यापारीलाई थिचोमिचो गर्न थाले। त्यस किचाघानबारे जुन सूचना त्यहाँको चिनियाँ राजदूतले आफ्नो सरकारलाई पठाउँथ्यो त्यस पत्राचारमा नेपाली पक्षकै अर्घेलो देखाइन्थ्यो।

तिनताक नेपालको घरेलु राजनीतिक स्थिति सुदृढ थिएन। कुन भारदारको अभ्युदय कहिले हुने हो, कसको पतन। यही अन्योलको कारणले तिब्बतसित निश्चित फैसला गर्ने मौका परेन। तिनको ज्यादती सहेर बस्नुपऱ्यो नेपालीहरूले।

युवराज सुरेन्द्र शाह राज्यासनारूढ भएपछि राजदरबार माखेसाङ्लोबाट मुक्त भयो। राज्यको व्यवहारगत व्यवस्था अडिग। तत्पश्चात् लगत्तै जर्नेल बमबहादुर र धीरशमशेरका फौजले क्रमश: केरुङ र कुतीको बाटो तिब्बतमाथि आक्रमण गर्न सैनिक योजना बनाए। मदतका लागि केन्द्रमा कर्णेल जगत्शमशेर र कर्णेल बखतजङ्ग पूरा तयारीका साथ आदेशको प्रतीक्षामा तैनाथ गरिए।

धेरै पल्टको शान्तिवार्ता भङ्ग भएपछि नेपालले धावा नबोली धरै पाएन। धीरशमशेरको फौज र भोटे फौजबीच कुतीमा घम्साखान युद्ध भयो। विजय नेपालकै पक्षमा रह्यो। त्यहाँबाट नौ मिलअगाडि सुनागुम्बामाथि पनि नेपाली फौजले कब्जा जमायो।

यता केरुङमा बमबहादुरको फौज र भोटे फौजबीच पनि निकै जमेर लडाइँ भयो। यसमा पनि विजयश्रीले नेपाली फौजलाई नै वरण गरिन्।

शत्रुको ठूलो क्षति गर्दै सनकसिंह झुङ्गागढी दखल गर्न सफल भयो। जनवरी १८५६ इ. मा तिब्बती प्रतिनिधिमण्डल शान्तिवार्ता चलाउन काठमाडौँ आयो। लामो छलफलपछि त्यो मण्डल सन्धिपत्रमा हस्ताक्षर गर्न बाध्य भयो।

सन्धिअनुसार अबउपरान्त तिब्बतले नेपाललाई प्रतिवर्ष १० हजार रुपियाँ बुझाउने।

त्यहाँका विद्रोही नेपाल आएको खण्डमा या नेपालका विद्रोही त्यहाँ गएमा एक देशले अर्कालाई सुम्पिदिने। तिब्बतस्थित नेपालीको मुद्दामामिलामा नेपाल सरकारको प्रतिनिधि डिट्ठाले मात्र निर्णय गर्न पाउने।

नेपाल र तिब्बतबीच झगडा पर्न गएमा दुवै सरकारका प्रतिनिधिले आपसी सल्लाहबाट निपटारा गर्ने।

नेपालीमाथि लागेको आर्थिक दण्डको आमदानी नेपालले पाउने र युद्धमा नेपाली फौजद्वारा अधिकृत इलाका फिर्ता दिने व्यवस्था भयो।

यस प्रकार नेपालको गरिमामय अस्तित्व अविच्छिन्न रहन गएकोमा नवोदित राजा श्री ५ सुरेन्द्र साह्रै खुसी भए। तिघ्रा ठटाई-ठटाई हाँस्न थाले– 'हा ... हा ... हा ...!'

उनी रिसाएमा पनि अघोर जङ्गिने, काट्न-मार्न बेर नलगाउने। खुसी भएमा पनि ज्यादै प्रसन्न मुद्रामा हुने, आफ्नो आङको छाला काढेर दिन बेर नलगाउने दानवीर कर्णजस्ता।

उनको यस्तो उग्रवादी स्वभाव कसैलाई पनि मन पर्दैनथ्यो। चाहे प्रमोदित बेलामा होस् वा कुपित। जङ्गबहादुर उनलाई आँखा तरेर अथवा तर्साउने चोर औँलो ठड्याएर सामान्य स्थितिमा रहन बाध्य पार्थे। अहिले त्यसो गरेनन्। झन् उनको असङ्गत चर्को हाँसोमा साथ दिन लागे– 'हा ... हा ... हा ...!'

राजा र प्रधानमन्त्रीको मुखबाट विशृङ्खल अट्टहास निक्लिरहेको समयमा भाइभारदार निःस्पृह बस्नु दरबारिया अदब-काइदाविपरीत आचरण मानिन्थ्यो।

चाटुपटुताले हाँसो गर्न थाले– 'हा ... हा ... हा ...!'

हाँसोको खुला होडबाजी पऱ्यो– 'हा ... हा ... हा ...!'

उहिले वि. सं. १८२५ मा नेपाल राष्ट्रका उन्नायक पृथ्वीनारायण शाहले काठमाडौँ उपत्यकामा विजयझन्डा फरफराएको दिनमा पनि यस्तै खुसीयालीको हाँसो परेको थियो।

राजाले सैनिकलाई योग्यता र वीरताअनुरूप पुरस्कार वितरण गर्न लागे।

अभिमानसिंह थापाले सरदारी खानगी पाए। कुलानन्द जैसीले वीरता। रघुनाथ भट्टले सात हजार रुपियाँ। यस्तै प्रकारले अन्य भारदार तथा सैनिक पनि यथोचित सम्मान र पारितोषिकको भागी बने।

त्यही इनाम वितरणको सिलसिलामा प्रधानसेनापति रामकृष्ण कुँवर या कँवरलाई पनि श्री ५ पृथ्वीनारायण शाहबाट सोधनी भयो– 'म तँलाई के दिऊँ? के माग्छस्?'

'सरकार!' सेनापतिले हात जोरे– 'निगाह भए पशुपति-आर्यघाटदेखिन् गुह्येश्वरी मन्दिरसम्म जाने बाटोमा सिँढी बनाउन पाऊँ।'

श्रीपति केहो बेरको अनुचिन्तनपछि बोले– 'हुन्छ बना। तर त्यो निर्माण मैले आफैँले गर्न चाहेको थिएँ। तैँले इच्छा गरिहालिस्। लौ बना, हुन्छ।' फेरि मुख

खोले– 'तैँले हाम्रा हजुरमा यति गुन लगाएको छस् कि आधा राज्य मागे पनि नाइँनास्ति गर्न मेरो नैतिकताले दिन्न।'

त्यही आफ्ना पूर्वज पृथ्वीनारायण शाहको औदार्यको सिको टिपेर राजा सुरेन्द्रले पनि प्रधानमन्त्री र प्रधानसेनापति भएका जङ्गबहादुरलाई आजको हँसिलो वातावरणमा प्रश्न गरे– 'जङ्गे! भन्, तँ हाम्रा हजुरबाट के बक्सिस् चाहन्छस्, यो विजयोत्सवको हर्षबढाइँमा तँलाई म के दिऊँ?'

जङ्गे पनि अग्रज रामकृष्ण कँवरको देखासिकी गर्न पछि हटेनन्। तर उनको माग सोमतिलो भएन– 'सरकार! निगाह हुने हो भने पुतली नानीलाई लैजान पाऊँ।'

'को पुतली?' गम खाए राजाले।

शाही क्याम्पमा लाग्नुअगावै पुतलीसित बुङताङमा आफ्नो वाग्निश्चय भएको बेहोरा जाहेर गरे प्रधानमन्त्रीले सङ्क्षिप्त।

'तिमीहरूबीच बिहाबारी चल्छ?'

'चल्छ सरकार! उनी पनि द्विजाति हुन्,' पुतलीको जन्म हुनुअगाडिका दुई सन्तान खसेकाले उसलाई सालनालसहित रछ्यानमा मिल्काइएको थियो। पछि दोर्जे तामाङलाई एक फुक्का दाममा बेचेको ग्रहदशा निवारणका निम्ति। साथै बाबु-आमाको मूल परेकाले विवाह नभएसम्म उनीहरूको मुख हेर्न नहुने।

यी सम्पूर्ण बेलीबिस्तार गर्न लागेका थिए प्रधानमन्त्रीले। तर उनलाई उछिनेर राजाले तथास्तुको मुख खोले– 'हुन्छ जङ्गे, लैजा!' थपे– 'तैँले मलाई यति धेरै गुन लगाएको छस् कि पुतली एक जना केटी त के यहाँभित्र भएजति सबै चाकर्नीको माग गरे पनि मैले नाइँनास्ति गर्न उचित परोइन।' आफूलाई सौतेनी आमाले मार्न खोजेको बखतमा जङ्गबहादुरले जोगाइदिएको विगत घटनाको स्मरण गर्दै भने– 'अहिल्यै लगे पनि हुन्छ।' पुनः हाँस्न थाले।

प्रधानमन्त्रीले पनि साथ दिए। यो मनकारी खबर क्षणद्युतीजस्तै दरबारभित्र एकाएक चम्कियो।

पुतलीका सँगीसँगाती हर्ष प्रकट गर्न लागे उत्तेजित स्वरले। कोही बिछोडको वेदनाले पिलपिलाउन। ईर्ष्या गर्नेहरू पनि नभएका होइनन्।

प्रेममिलनको हर्ष आफ्नो ठाउँमा छ पुतलीको। त्यसको अतिरिक्त उसलाई गाउँघरमा निमुखा नारीमाथि पर्ने शोषणको तीतो अनुभव छ। त्यस्ता दुराचार

उन्मूलनका निम्ति शिक्षाको विकास गर्नु एकमात्र मूल मन्त्र ठान्छे जसबाट देशवासीका आँखा खुल्छन्, चेतना अभिवृद्धि हुन्छ। त्यही शिक्षाप्रद सुझाव आफ्ना दुलहालाई दिएर मातृभूमिमा विद्याको प्रथम दियो बाल्नका निम्ति हतारिएकी छ। साह्रै खुसी भई। फुर्केर भुइँमा खुट्टै छैनन् जस्ती। एक पाइलाभन्दा अर्को चाँडो अघि सार्न थाली। तथापि दरबारबाट बिदा हुँदा रुने चलन थियो। लोकाचारका निम्ति सुँक्क-सुँक्क नाके स्वरमा नयन माड्दै तल नासलचोकमा पुगी।

राजसीचोकको अट्टहासयुक्त स्थितिमा नवागन्तुक केटीको परेलाभित्र नेत्रजल र अनुनासिक स्वर कवाबमा हड्डी होला भन्ने शङ्का परेछ जङ्गबहादुरको मनमा जुन सन्देहले गर्दा उनको पुतलीलाई हत्याउने तिकडम असफल हुन सम्भव। उत्ति नै खेरि घुम्टयौलीतिर हेरेर रुने होइन, हँसमुख हुने इसारा गरे।

गुण्ठनवतीले बुझी। ऊ पनि लर्तरी अबला थिइन।

दरबारभित्र दैनिक-साप्ताहिक पत्रपत्रिका आउँथे। अन्तर्राष्ट्रिय समाचारसङ्ग्रह र मुखपत्रसमेत। त्यहाँ कसैले पढ्न जानेका थिएनन्।

अखबार यथावत् थन्किन्थे, मिल्किन्थे। तर पुतली खोजी-खोजी पढ्थी। संसारभरको राजनीति कण्ठ। पुस्तकको कीरो भने पनि हुने।

एकातिर यस्तो गहिरो अध्ययन, अर्कातिर कोतपर्व, भण्डारखाल हत्याकाण्ड र अलौ उपसंहारको अनुभवका साथै कान्छी महारानी राज्यलक्ष्मीको शासनकालमा उनलाई ब्रिटिस राजदूतद्वारा बारम्बार चढाइएका जनतालाई मौलिक अधिकार प्रदान गर्नुपर्ने सुझाव, अर्ती र सल्लाह सुन्ने संयोग पाएकी। ती वैचारिक युक्ति अनुगमन नगरेको कारणले महारानीको अधोपतन भएको पनि देखेकी। यो सन्ने परिपक्वताको जोडघटाउबाट ऊ यो निष्कर्षमा पुगेकी छ कि यदि वर्तमान शासनव्यवस्थामा आमूल परिवर्तन गरिएन भने जङ्गबहादुर पनि साबिकवाला प्रधानमन्त्रीहरूजस्तै अकालमृत्युको घाटमा पुऱ्याइनेछन् अथवा महारानी लक्ष्मीदेवीजस्तै अधोगतितिर।

नेपाल गरिबी, अशिक्षा र भ्रष्टाचारको दलदलमा फसिरहेको। पुतलीलाई त्यहाँ नासलचोकमा चाहिँ हाँसो परेको निको लागेनछ। जङ्गबहादुरतिर हेरेर साङ्केतिक प्रश्न गरी– 'किन यसरी तपाईंले राजारङ्क सबैलाई हाँसोमा उडाउनुभएको?' थपी– 'हाम्रो हाँसेर खेर फाल्ने समय छैन। संसार प्रगतिपथमा निकै अघि

बढिसक्यो। तिनको कदममा कदम मिलाउनका निम्ति जनतालाई पढाउनुपऱ्यो। आँखा खुलाएर सक्षम नागरिक बनाउनू।' फेरि भनी– 'अनि मात्र नेपालका खोलानाला र नदीबाट पानीको साथसाथ हीरामोती बग्न थाल्नेछ।'

जङ्गबहादुरलाई शिक्षाको महत्त्वबारे व्याख्या गर्नु भालुलाई पुराण सुनाउनुजस्तो थियो। तर त्यहाँ हाँसो परेको सम्बन्धमा उनीसित तयारी उत्तर रहेछ, सानो स्वरले सान गरे– 'घरमूलीलाई यसरी हाँसोमा उडाएर उल्लू सिधा नपारीकन उसको घरबाट तिमीजस्ती गुणवतीलाई इलिकमिलक पार्न सकिन्छ?' फेरि बोले– 'कि त देवदूतले जस्तै ससुराको हत्या गरेर अर्को कोतपर्व मच्चाउनुपऱ्यो तिमीलाई यहाँबाट उम्काउन।' मुस्काए।

पर्दानसिनको मनमा षड्यन्त्र र हत्याको राजनीतिलाई सदाका लागि तिलाञ्जली दिएर जननिर्वाचित प्रतिनिधिद्वारा चलाइने शासनव्यवस्था लागू गराउने विचार थियो बेलायतको जस्तै। त्यस सम्बन्धमा गहिरो अध्ययन पनि गरेकी। जङ्गबहादुरसित भेट हुनेबित्तिकै सर्वप्रथम त्यसबारे कुरा कोट्याउन उत्सुक। परन्तु देवदूतको प्रश्न बीचमा तेर्सिन आएकाले पुतलीको स्मृतिपटमा उमा झुलुक्क देखा पर्न आई। अनि कोतपर्वको रगताम्मे दृश्य।

त्यति बेला देवदूतलाई प्रधानमन्त्री पद दिलाउनका निम्ति उमाले महारानी राज्यलक्ष्मीदेवीसमक्ष बिन्तीभाउ गरेकी थिई। सकारात्मक आश्वासन पनि पाएकी। तत्पश्चात् किन हो कुन्नि ती प्रेमजुगल महारानीको हजुरमा फर्केर दर्शन गर्न आएनन्। कोतको पर्खालबाट फाल हालेर भागे। त्यो पलायनको कारण पुतलीलाई थाहा छैन। किन तिनीहरूले प्रधानमन्त्री पद पाउने सुवर्ण अवसर परित्याग गरे। नत्र जङ्गबहादुरको ठाउँमा देवदूत प्रधानमन्त्रीमा नियुक्त हुन सम्भव थियो। यही रहस्यमय तर्कनामा मगज खियाउन थाली पुतली। बोलिन।

देवदूत कहाँको मानिस होला? त्यसले उमालाई कहाँ बेपत्ता पाऱ्यो? तिनीहरू कुन हातलमा होलान्? सोच्न थाली।

चिन्तनमननको समय थिएन। यथाशीघ्र दरबारबाट उम्कनु बेस। 'रात रहे अग्राख पलाए' होला भन्ने भयले प्रेमीको आशयमुताबिक प्रेमिका पनि नक्कली हाँसो अभिनय गरेर प्रहसनमा निचरिन थाली– 'हा ... हा ... हा ...!'

त्यहाँ नासलचोकमा उपस्थित लब्धप्रतिष्ठ हाँसे. विशेष गरेर सिसबैठकभित्र विराजमान श्री ५ महाराजाधिराज सुरेन्द्रप्रति आदाब अर्जको दर्शन चढाउँदै बिदाइ पाइला पछाडि सार्न थाली– 'हा ... हा ... हा ...!' हास्दै। प्रवेशद्वारनिर पुगी। प्रेमीलाई आफ्नो पछ्याउने अन्सार गरेर फुत्त बाहिर निस्किई, प्रफुल्ल।

प्रफुल्लितले अनुमान गरेकी थिई, प्रेमी र आफू पैदल घर जान होला, जसरी उहिले बुङताङको जङ्गलबाट त्रिशूलीघाट गमन गरेका थिए – स्वच्छन्दले, दोकलै।

घर जाने बाटोमा काठमाडौँ सहरनिवासीको आँगनमा पर्ने। जानपहिचान गर्ने। भलाकुसारी सोध्ने। आत्मीयता बढाउने।

सगुनका निम्ति '*लावा* (लसुन) कुटुक्क *ऐला* (रक्सी) घुटुक्क' गर्ने विचार थियो। छोइला-बजी खाने। परन्तु सुनढोकाबाहिर निस्किएपछि जनताजनार्दनसित घुलमिल हुने, हिमचिम बढाउने परिस्थिति देखिन।

हनुमानढोका-प्राङ्गणमा चौघोडे बग्गी ल्यान्डो कसिकसाउ रहेछ। फूलमाला, ध्वजापताकाले गुम्फित।

सरकारी स्थायी नियमअनुसार विवाहको सज्जाकृत वाहनभित्र दाइजोमा जाने हीरामोती, माणिक आदिका विशेष किमती गहना। त्यसै गरेर असर्फी, गिन्नी, दामका तोडा भरिभराउ बयलगाडाहरू पनि बग्गीपछाडि ताँती लागेका।

पालेपहरा, सुरक्षाकर्मी तदारुक। भोटसित लडाइँ गर्नका निम्ति जमाइएका हजार फौज खारेज गरिएका थिएनन्। ती सम्पूर्ण गुल्म हाजिर गराइएका भोटे पहिरनमा।

एक जना लट्टाधारी जोगी जसलाई सेर्बूले धेरै वर्षपहिले कर्राको ओढारमुनि धुनी जगाएर बसेको देखेकी थिई, अहिले त्यही यायावरलाई डबलीपासमा स्थापित जगन्नाथ मन्दिरको पेटीमाथि देखी।

यो तापसको विगत आशीर्वादअनुसार आफ्नो फलिफाप हुँदै आएकाले यस पल्ट पनि आशिष् माग्न ऊनेर पुगी।

'नमस्कार साधु महाराज!' भक्तिपूर्वक नतमस्तक हात जोडी, साथै कर्रामा भेट भएको बखतमा आफूलाई जिस्काउनका निम्ति रजस्वला भएको सङ्केत गरेर आफ्नो चाकेपाङ्ग्रोतिर यो तापसले औँल्याएझैँ अहिले पनि छिहिलिने हो कि डराई।

तर यस पल्ट महात्मालाई कोतपर्वमा हुने रक्तपातको भविष्य सङ्केत गर्नु थिएन। न सेर्बूलाई शुभेच्छा व्यक्त गर्नु। बाउँठो कुरा झिके– 'यो बग्गी विदेशी आयात हो। किन ल्याएको?' घृणाको नाक खुम्च्याए। पुतलीका कानमा निकै बेर सिकिस्ती मुद्राले फुसफुसाए।

कर्णेजापको तात्पर्य थियो– किसान-मजदुरको रगत-पसिना-आँसुले तिरेको मालगुजारीबाट झिकाइएको यो आरामदायी चारपाङ्ग्रे अपाङ्गका निम्ति काममा लगाउनुपर्छ। हट्टाकट्टा प्रधानमन्त्रीका निम्ति किन आवश्यक? यो भ्रष्टाचार हो।

हुन पनि जङ्गबहादुरजस्ता तगडा पुरुषका निम्ति काठमाडौँको एक ठाउँबाट अर्को ठाउँमा जान वाहनको आवश्यकता थिएन। न वनमा उड्ने पक्षीजस्ती पुतलीका लागि अपरिहार्य। पछिल्तीले महात्माको आरोपलाई युक्तिसङ्गत ठानो, झसङ्ग भई।

आफूले नित्य पाठ गर्ने भगवद्गीता र दुईतीन अर्थशास्त्रका पुस्तक कोठामा छोडेर आएकी थिई राजालाई नसोधी लैजान नहुने ठानेर। तर उसको दुलहाले यतिका धनमाल आफूखुसी लान लागेको मन पराइन। जिल्ल परी। विचारशील मुद्राले बग्गीतिर हेरिरही, भित्र पसिन।

जङ्गबहादुर आइपुगे। अगाडि-पछाडि हात जोर्ने खुसामदीको हूल। कोही उनका जुत्ता पुछ्ने। कोही चमर-पङ्खा डोलाउने।

त्यो सम्मानित व्यक्तिलाई पुतलीले महात्माको बग्गीप्रतिको नकारात्मक धारणा अवगत गराई। स्वदेशको धन बिदेसिन थालेपछि नेपालको मुद्रा अवमूल्यन हुने खतरा देखाई।

यो संशयलाई नकार्नतिर लागेन जङ्गबहादुर। आफ्नो निरूपण सुनायो– 'म वैरागी, सन्न्यासी हैन। संसारभरका प्रधानमन्त्रीले बग्गी चढ्छन्। मलाई पनि त्यसो गर्न नैसर्गिक अधिकार छ।'

'हो,' महामानसको आलोचनात्मक आकाशवाणी पुनः जङ्गबहादुरका कानमा पर्‍यो। 'तर त्यसो गर्नका निम्ति नेपालमा बग्गी बन्ने प्राविधिक ज्ञानको आवश्यकता पर्छ।' थपे– 'जुन मुलुकमा बग्गी बनाउने कारखाना छैन त्यहाँका वजिर, अमात्यले बग्गी चढ्ने सोख गर्न हुन्न। गरेमा अरूले हात्ती चढेको देखेर आफूले धुरो चढेको

जस्तो हास्यास्पद हुन जान्छ। अहिले नेपालीको जीवनस्तरअनुसार प्रधानमन्त्रीले डोली, घोडा अथवा बयलगाडाबाट काम चलाउनुपर्छ।'

यस मितव्ययितालाई गाईजात्रे सञ्ज्ञा दिएर निन्दा गर्न तम्सिएका थिए जङ्गबहादुर। पुतलीले महात्माको समर्थनमा कुरा झिकी– 'हो त नि, हामी जो अगुवा त्यही बाटो हगुवा भएर विदेशी सवारी उपयोग गर्न लागेमा त्यसको नराम्रो प्रतिक्रिया तलका कर्मचारीमा पर्न जान्छ। सबै जागिरे बग्गी नै ताक्ने हुन्छन्। पैदले कोही हुँदैनन्। यसले राष्ट्रको अर्थतन्त्रमा धक्का पर्न जान्छ। देश टाट उल्टन सम्भव!' ऐयासीमा खर्च कटौती गरेर शिक्षणसंस्था खोलाउन, जनतालाई बहुदलीय राजनीतिक अभ्यास गराउनतिर कुरा घुमाई।

जङ्गबहादुरलाई मन परेन। पोथी बासेको ठाने। दोषदर्शी खिल्ली ओठमा जनाएर खिस्सिएको हाँसो मुस्काए, घिनालु।

पोथीले 'शठे शाठ्यं...' गर्न हुने युग थिएन। चीनमा समेत त्यस्तो नयाँ विचारधाराका महिलावर्गलाई भूतको सञ्ज्ञा दिएर पिट्ने-मार्ने चलन थियो। घोसेमुन्टो लगाई पुतलीले, चुइँक्क बोल्न सकिन।

भाले-पोथी दुलहा-दुलहीका रूपमा यानभित्र पसे।

अघिल्लाले पछिल्लाको निन्याउरो मुखको कारण दरबार परित्याग गर्नुपरेको पीर ठानेका छन्। निन्याउरीलाई उत्साहित गर्नका निम्ति सुनको कल्ली, हीराको फूली, नत्थी, तिलहरी, पोते र चुरा पहिराइदिए।

ती उत्कृष्ट अलङ्कार तथा गाडामा भएका रुपल्ली भरिभराउ धोक्रो कौसी बाट झिकिएका थिए, राजपरिवारबाहेक अरू कसैले उपभोग गर्न नपाउने। अहिले जङ्गबहादुरले 'बाघको छालामा स्यालको रजाइँ' गरेकोमा जनआवाज उठ्नुपर्ने। तर मुलुकमा पठनपाठनको व्यवस्था थिएन। राजनीतिक चेतना शून्य।

यस्तो अज्ञानताको अन्धकूपभित्र नेपाल माता बलात्कारमा पर्नु स्वाभाविकै हो। तर साक्षरी अन्तर्ज्ञानबाट पुतलीको दिव्यचक्षु खुलेको छ। आफूलाई लगाइदिएको गहना र बग्गीभित्रको किमती सामग्रीमा नेपाली जनताको परिश्रम, आँसु र रगत देख्न थाली, तर्सिई– 'भइगयो, यी गहना नलगाऊँ क्यारे!' नारीजाति आभूषणले होइन; सुचरित्र, कर्मण्य, मनस्विता, सुबुद्धि र मानवताले चम्किनुपर्ने कुरा झिकी,

गहना फुकाल्न लागी– 'यसरी राष्ट्रढुकुटीका गहना आफूखुसी चलाएकोमा पछि हाम्रो बदनामी होला। गाल पर्ला!'

निष्कासित महारानी लक्ष्मीदेवीको शासनकालको अस्थिरता, युवराज सुरेन्द्रको उद्धतपना र त्यस बेला भारदारहरूको भ्रष्ट शासनको अन्त्यपछि जनमानसमा जीउधनको सुरक्षा अनुभव हुन थालेको छ। सरकारी कर्मचारी जङ्गबहादुरको हुकुम र नियममा अभ्यस्त।

उनले जङ्गी-निजामती बन्दोबस्तमा अनेक सुधार गरे। जमिनमा किसानको हक थिएन। भूकर छल्नका निम्ति मुगलान भासिनुपर्ने। यसले गर्दा राजकोषमा ठूलो घाटा थियो। रैती-दुनियाँलाई पनि बित्थैको मर्का।

गाउँका मुखियालाई मालगुजारी उठाउने उत्तरदायित्व सुम्पिएपछि किसानले खनजोत गरेको भूमिउपर स्वामित्व पाउने भए।

हिन्दुस्तानको इस्ट इन्डिया कम्पनीले आजसम्म नेपाललाई राजनीतिक परिभाषाअनुरूप स्वतन्त्र 'राज्य' मानेको थिएन। प्रत्येक राजकीय पत्रादिमा नेपाल राजाको नाम उल्लेख हुन्थ्यो, हिन्दुस्तानका राज्यरजौटालाई जस्तै नेपाल सरकारलाई होइन। पछि जङ्गबहादुरको अनवरत प्रयत्नबाट नेपाललाई पूरा अर्थमा सार्वभौमसत्ता-सम्पन्न स्वतन्त्र राज्य मान्यो।

यस्तो राष्ट्रवादी महत्त्वपूर्ण काम र दरबारभित्र विभिन्न व्यक्ति तथा गुटमा विभाजित शक्तिलाई आफूमा केन्द्रित गरेर जङ्गबहादुरले आफ्रो स्थिति राम्ररी बलियो पारिसकेका थिए। सर्वत्र अमनचैन। 'डर' शब्दभन्दा बढी डरलाग्दा हुन पुगिसकेकाले दुर्निमित्तको वास्ता गरेनन्। निर्भीक बोले– 'पुतली! यी तिमीले लगाएका सौभाग्यचिह्न गहना हुन्। सधवाले फुकाल्न हुन्न।' प्रेरणा दिनका निम्ति मोतीको माला, हीराको हार र मुकुट लगाइदिए। दुवैतिरको कुममा बुरुच। रङ्गिन औँठी र छातीमा तारापुञ्ज स्टार।

ती सौभाग्यसूत्रलाई ग्रिक कथाको 'प्यान्डोरा बक्स' आपत्को पुरियाको उपनाम दिएर अस्वीकार गर्न चाहेकी थिई सौभाग्यवतीले, खास गरेर राजदरबारभित्रको जेथा भएको कारणले। तर सौभाग्यशाली पनि आफ्रो इष्टसाधनाका निम्ति कम धूर्त थिएनन्। एक नम्बरको वाक्पटु, चोट्टा। तर्क प्रस्तुत गरे– 'तिम्रो भनाइ साँचो हो पुतली! गहनापातले ईर्ष्या-द्वेष उत्पन्न गराउँछ। आफन्तबीच

वैमनस्य। यी भगडाका बीउ हुन्।' फेरि भने– 'त्यसै कारण यी आपत्का पुरियास्वरूप रहेका आभरणलाई मैले यहाँ दरबारबाट आफ्नो घर लान लागिरहेको छ ताकि अब राजाको कसैले डाह गर्ने नसकून्। अहित चिताउने कारण रहेन। नेपालको एकताका प्रतीकलाई लोकनिन्दाबाट जोगाउनका निम्ति मैले यी गहना यहाँ दरबारमा राख्न नचाहेको।' अघि बोले– 'जे-जति अपजस पर्न आउँछ, मेरै थाप्लामा बज्रिन्छ, राजगद्दी बेदाग रहोस्!' समुद्रमन्थनमा महादेवले कालकूट विष पिएर देवगणलाई बचाएभैँ गहना आफूले लगेर दरबारलाई निष्कलङ्क राख्न खोजेको तर्क प्रस्तुत गर्दै भने– 'हामी समयको गतिसँगसँगै बिलाए पनि राजतन्त्र बचिरहोस्।'

पोइले जति पत्यार पर्ने खालको आदर्श छाँटे पनि राष्ट्रकोष हडपेको चित्त बुभ्रेन जोईलाई। चोरी, डकैती, अनैतिक काम ठान्छे।

उहिले बुङताङको जङ्गलमा देखेको यो सुतुवा युवक जसको टाउकोमा सर्प बेरिएर बसेको थियो, गोडा खाली। वेशप्रकार दौरामुनि लँगौटी कछाड। चाउलो फाटेको टोपी। गरिबीसित सङ्घर्ष गरिरहेको वीरनरसिंहको र यो प्रधानमन्त्रीको जङ्गी पोसाकमा भएका जङ्गबहादुरलाई दाँज्न थाली– वीरनरसिंहको निधारमा परिश्रमको अर्चनीय पसिना थियो। हरेक थोपामा नेपालीको दु:खसुख टल्किरहेको। श्वासेन्द्रियबाट वीर नेपालीको हिम्मत, जाँगर र सामर्थ्य बोलिरहेको। त्यही अतिमानुष्यको जमामर्दी, निष्कलङ्क र सरलताकी दासी भएकी थिई सेर्बू। दायाँ-बायाँ, अगाडि-पछाडि उसकै भभल्को आउने। यतिसम्म कि त्यही निस्खोटको प्रेममिलनमा निराश भएर एक साँभ भन्डैले त्रिशूली नदीबाट फाल हालेर आत्महत्या गरेकी। केही बेरअघिसम्म पनि उसकै नाम जप्दै हिँडेकी। तर अहिले प्रधानमन्त्रीको रत्नजडित पगरीमा त्यो मोहनी देख्दिन। उल्टो भ्रष्टाचारको दुर्गन्ध अनुभव गर्छे। गरिब देशवासीको विस्मयादिबोधक 'अहा' र 'ऐय्या' सुन्छे।

आँखामा महादेवको तीन नेत्र बलेको व्यक्तिवादी तृष्णा।

पुतली कहालिई। दुलहाको दुराचरणको गन्धले स्वत: उसको नाक खुम्चेछ, सान्निध्यबाट अलि पन्छिई। जनसहयोगका निम्ति झ्याम्मिने आँखा च्यातेर चारैतिर हेरी, तर जताततै फौज र सुरक्षाकर्मीको समुद्र। स्थानीय मानिस कतै देखिँदैनन्, सिबाय देवमन्दिर, कौसी-बार्दली र छानामाथि।

जनतालाई शक्तिसम्पन्न गराउनुको सट्टा दुलहा आफू तानाशाह हुन खोजेको दुलहीलाई चित्त बुझ्दैन। अप्रसन्नता प्रकट गर्नका निम्ति विपरीत दिशातिर फर्केर रातो अछेताको मङ्गलमय टीका निधारमा थोपर्न थाली काँपेको हातले।

बाहाँ देब्रे परेछ। बायाँ हात अलच्छिन मानिने हुनाले लोग्नेले रोके। स्वास्नीले भूल महसुस गरिछ, डिच्च हाँसी।

आफ्नो औँलाले टीका लगाइदिन लागे लोग्नेले मिलाएर।

त्यही बखत स्वास्नीले राजनीतिक विचार व्यक्त गर्ने मौका छोपी– प्रधानमन्त्री जनताको सेवक हो। उनीहरूको रहनसहनमा घुलमिल भएर देश विकास गर्नुपर्छ। यसरी चौघोडे बग्गी, त्यही पनि विदेशी आयातको राजोपकरणमा खर्च गर्नु व्यर्थ छ। यसो गर्ने पैसा र समयले शिक्षणसंस्था खोल्नु बेस ...।

यस विचारधारासित सहमत छैनन् लोग्ने। उनी आफूलाई श्री ३ सरकार ठान्दछन्। रक्षक।

बग्गी चल्यो। त्यसभित्रका आसनपतिले पहिरिएका आभूषण, भड्किला पोसाक, अत्तरको बास, सवारीको भव्यता, सुवर्ण मुद्रा भरिभराउ बयलगाडा र लावालस्करको शोभनकृत यात्राले जनसाधारणलाई मन्त्रमुग्ध पाऱ्यो, भयग्रस्त पनि। जयजयकार गर्न थाले।

काठमाडौँ उपत्यकाका धेरैजसो साहूको ह्लासामा बन्दव्यापार चल्दथ्यो। नेपाल-भोटको नयाँ सन्धिले ठूलो लाभ भएको। साह्रै खुसी। अहिले आभार व्यक्त गर्ने मौका छोपे– 'जय महाराज!' घाँटीको नसा फुल्ने गरेर कराउन थाले।

त्यही जयस्तुतिअनुरूप हीराको तीन चाँद पहिरिए श्री ३ महाराज जङ्गबहादुरले झन्डै-झन्डै राजमुकुटजस्तो बान्की-बनोटको। थर पनि राणा।

राजा र जनताको अनुमतिबिना लोग्नेले त्यसो गरेको अर्द्धाङ्गिनीलाई चित्त बुझेन। पुनः ठुस्सिएर मुन्टो बाहिरतिर फर्काई।

ठुसुवी र रमितेका आँखा जुध्न पुगेछन्।

पुतली महारानीको जयजयकार गुन्जियो। उसको पछाडि बग्गीको रासबाट चमर-पङ्खा डोलाउन थालियो। त्यही विरुदावलीको छाती चिर्दै यान गद्दीबैठक हुँदै वसन्तपुर पुग्यो।

हनुमानढोकाको नौतले दरबारको अति उत्तम काष्ठकलाको झ्यालमा राजा सुरेन्द्र विराजमान रहेछन्। जुलुसियाको ध्यान आफूतिर खिच्न थपडी मारे। 'जङ्गे! जङ्गे!' चिच्च्याए।

उहिले त्यही झ्यालबाट राजा राजेन्द्रले बन्दीगृहतिर डोरिइरहेका भू. पृ. प्रधानमन्त्री भीमसेन थापालाई यसै गरेर करतलध्वनिबाट बोलाएका थिए। त्यति बेला डोरिया सैनिकले थापालाई पछाडि फर्केर आवाहकको दर्शन गर्न दिएका थिएनन्। तर अहिलेको परिस्थिति भिन्दै छ।

बास्साको ताली र आह्वान कानमा पर्नेबित्तिकै श्री ३ महाराज जङ्गबहादुर राणा बग्गीबाट ओर्लिए। सुवर्ण मुद्रा भुइँमा राखेर जङ्गी सलाम ठोके। 'श्री ५ महाराजाधिराजको जय!' पाँच पटक जयघोष गरे।

अपदस्थ श्री ५ राजेन्द्र भक्तपुरमा नजरबन्द थिए। उनकी महारानी बनारसमा।

यी दुई निष्कान्त राजघराना आमाबाबुमध्ये एकले जङ्गबहादुरलाई 'श्री ३ महाराज' को नयाँ उपाधिले विभूषित गरेको भ्रूटो आभास भएछ छोरालाई, चिन्तित देखिए, किनकि त्यसो गर्ने अधिकार केवल बहालवाला गद्दीनसिनलाई मात्र थियो। हडबडाएर सोधे– 'जङ्गे! तँलाई श्री ३ महाराजको नयाँ सम्मान बुबाबाट बक्सेको कि कान्छी मुमाले?'

'हैन,' इन्कार गरे श्री ३ महाराजले, 'उहाँहरूलाई कसैलाई केही बक्सने अधिकार छैन।' एकनास बोले– 'यो श्री ३ महाराजको नयाँ पदवी मलाई सरकारबाट निगाह भएको हो।'

'ए!' दृढ भए सिंहासनारूढ– 'बल्ल बुझेँ। तैँले हाम्रो हजुरमा सुवर्ण मुद्रा राखेर दर्शन गरेको कारण त्यही हो?'

'हो। पहिले नेपाल अधिराज्यको प्रधानमन्त्री र प्रधानसेनापति थिएँ, अब सरकारबाट कास्की र लमजुङको श्री ३ महाराजको ओहदा पनि निगाह भएको छ। सरकार!'

सरकारलाई श्री ३ महाराजको पदवीबारे केही जानकारी छैन। न कास्की र लमजुङ कहाँ अवस्थित छन्? जिल्ल परे। तर बिहानदेखि हँसिलो मुद्रामा भएकाले धेरै जिरह सवाल गरिरहन आवश्यक देखेनन्। परिस्थिति पनि थिएन। हाँसीखुसी श्री ३ लाई बिदा दिए।

यात्रागामी सहरको घना बस्ती झौँछे टोलतिर मोडियो।

कच्ची सडक, माटो-इँटले बनेको। दुईतिर बगलमा अछुत हिँड्नका निम्ति खोल्से गोरेटो। त्यही कुलेसोमाथि बग्गीको पाङ्ग्रा गुडिरहेको। हिलो नाल छताछुल्ल।

खिचापोखरी आइपुग्यो।

त्यस वडामा उहिले जङ्गबहादुरलाई कर्जा नतिरेबापत कठालो समातेर ढलमा गाड्ने साहूको घर रहेछ। ऊ आफ्नो आसामीको अभ्युदयपछि लुकीछिपी हिँड्ने गर्थ्यो ऊ ऋण असुल्नका निम्ति पहिले गरेको ज्यादतीमाथि इबी फेरिने त्रासले। अहिले पनि श्री ५ महाराजाधिराजको सवारी भएको भ्रममा परेर पसलबाट सडकमा ओर्लिएको थियो दर्शन गर्न। तर बग्गीभित्र आफ्नो बाँकीवालालाई देखेर उसको हंसले ठाउँ छोड्यो। एक्कासि मुखबाट याचनाको वाक्य निस्कियो– 'जङ्गबहादुर महाराजको जय!'

उहिले त्यही मुखले रिनवालालाई आमाचकारी गालीगलोज बकेको थियो, पाखुरा निमोठेर लोप्पा खुवाएको। त्यही पीरले जङ्गबहादुर काठमाडौँमा टिक्न नसकेर मधेस भासिनुपरेको।

रिनी-धनीका चार आँखा जुध्नेबित्तिकै अघिल्लालाई पुरानो दु:खदायी घटना हात्ती खेदाका निम्ति चितौन पसेको, त्यहाँ असफल भएर लाहोर हानिएको, बाटामा सेर्बूसितको भेट र वाचाबन्धन आज पूरा भएको सम्झना ओठमा फैलाएर ङिच्च मुस्काए। एक मुठी मुद्रा सेठतिर फालिदिए।

श्री ३ को बग्गीपछाडि बगालै चाकरीबाज थिए घोडासँगसँगै दगुरिरहेका। नियुक्ति पाउने, पदोन्नति हुने, मुद्दामामिला जितिने र बक्सिसको आशामा। घोडासँगसँगै दगुरिहेका ती दौडदत्तले श्री ३ बाट हुत्त्याइएका सिक्का टापटिप पारे। खोसाखोस। एउटा पनि महाजनको हातमा परेन। डराएर महाजनले श्री ३ महाराजको तीन चाँदमा हेरिरह्यो, काँपिरह्यो। पसिनाले निथ्रुक्क।

लाटलुट गर्नेको छेउमा बुङताङवासी रामदास महाजन पनि रहेछ। महारानी पुतलीले चिनी। यो जगरसेठसित धेरै वर्षपहिले त्रिशूलीघाटमा एकान्त परेको साँझमा उसको कामुक रूपको विरुद्ध सेर्बूले घृणाका आँखा तरेकी थिई, तर्जनमा तयार। अहिले त्यस धम्कीको विपरीत आफूले लगाएका गहनालाई महाजनले

देख्छ कि भन्ने हीनताबोध भएछ, पसिना काढी। शिर ठाडो गर्न सकिन। काँपेको हातले एक अँजुली मुद्रा ऊतिर फालिदिई आँखामा छारो हाल्न।

महाजन अनुगृहीत भयो– 'पुतली महारानीको जय!' करायो– 'जङ्गबहादुर महाराजको जय!' दुईचार रुपियाँ खल्तीमा दाखिला गऱ्यो पनि।

ऊ बहाल पुगेपछि जुलुसले नागरिक अभिनन्दनको रूप लियो।

धूपबत्तीको आरती। आँखीझ्याल, कौसी, बार्दलीबाट अभिषेकको फूलामाला, अबिर-सिन्दूर। सम्मानित महाराजको गुण-पराक्रमको बखान-वर्णनले सहर गुञ्जायमान। चारैतिर पुष्पार्पण, जयजयकार।

कर्राका महात्मा यहाँ पनि देखा पर्न आए।

बग्गीभित्रबाट महाराज-महारानीले नमस्कारको हात जोरे। असर्फी भेटी चढाए।

महात्माले ग्रहण गरेनन्, सल्लाह दिए उही बाउँठो लयमा– 'महाराज! तिमीजस्ता राष्ट्रविभूतिले हिँड्ने बाटो (राजनीतिक प्रणाली) यो हैन। विपरीत दिशा (बहुदलीय प्रजातान्त्रिक व्यवस्था) तिर लाग। जनतालाई पढाऊ। मौलिक अधिकार देऊ। चाँडो आमचुनाव गराएर जनतालाई राज्यसत्ता हस्तान्तरण गर्नु बेस।'

हिन्दुस्तानमा ब्रिटिस सरकारले जनतालाई पढायो। मौलिक अधिकार प्रदान गऱ्यो। राजकाजमा संलग्न गराउन खोज्यो। तर त्यहाँका शिक्षित समाजले सरकारको विरोधमा आवाज उठाएको जङ्गबहादुरले आँखाभरि देखिरहेका छन्, कानभरि सुनिरहेका।

दिनहुँजसो सरकारविरोधी जुलुस हुन्छ। हडताल। खुराफात। तोडफोड।

नेपालमा त्यस्तो हङ्गामा हुन नदिनका निम्ति जनतालाई नपढाउनु बढिया ठाने जङ्गबहादुरले। रैती दुनियाँका आँखा खुल्लान्, टाठाबाठा होलान्, नटेर्लान्, सत्ता गुम्ला भन्ने डर पऱ्यो।

एउटा विद्यालय पनि खोलिएन। त्यही शिक्षाविरोधी नीतिप्रति सचेत गराएका हुन् महात्माले कोग्ल्याँटो लयमा।

आँ गर्दा अलङ्कार बुझी पुतलीले। अन्धकार भविष्यका निम्ति तर्सिई। अन्धमुष्टीभित्र देशको प्रगति हुनु परै रहोस्, जङ्गबहादुरका आफ्नै वंशबीच शक्ति

र सम्पत्तिका निम्ति काटमार चल्ने। चिल्लीबिल्ली पर्ने सम्भावना आँखासामुन्ने आयो पुतलीको, अतालिई। बग्गीबाट फाल हालेर सहरवासीको हूलभित्र 'त्वं शरणम्' मा जान चाहन्छे ठूलो स्वरले शिक्षाविरोधी नीतिको भन्डाफोर गर्न। साथै आफूले लगाएका गहना फुकालेर तिनलाई हिल्ला लगाउन। परन्तु सतित्वसपुत नारीले सौभाग्यचिह्न गहना फुकाल्न भएन। लोग्नेको आयु क्षीण हुने रूढिवाद छ। त्यही पनि मायालु हातले लगाइदिएको। यसको अतिरिक्त पुरुषप्रधान युग, लोग्नेसित असहमति प्रकट गर्ने अधिकारबाट वञ्चित। केवल मनोरञ्जनको साधनमा सीमित। मनस्ताप प्रकट गर्नु व्यर्थ थियो, कुइनाले पहरो फोर्न खोजेको जस्तो। डराई-डराई पोइतिर पुलुक्क हेरी रुन्चे मुखले।

पतिले महात्माको भविष्यसूचक अभिव्यक्तिको महत्तर पारख्न सकेनन्। लागुभागुको सुरमा प्रलापेको अनुमाने। खास वास्ता पनि गरेनन्।

वामाङ्गिनीको पिन्चे मुखलाई पनि बेहुलीको स्वाङ ठाने। यही गफलतले ठेलिँदै, हुर्रिँदै सफलोत्सव थापाथली पुग्यो जहाँ श्री ३ महाराज जङ्गबहादुर राणाको निवास थियो – थापाथली दरबार।

शुभमुहूर्तका निम्ति केही बेर घरको मुख्यांशबाहिर पर्खिनुपर्ने भयो। सरासरी भित्र पस्न नहुने।

प्राङ्गणमा नवदम्पतीको स्वागतार्थ घरमूली आमा र जेठी पत्नीबाहेक सकल जहान-परिवारको उपस्थिति थियो। अन्य आफन्त र प्रभुत्व व्यक्ति पनि।

त्यही भीडमा दुलहीले घुम्टोभित्रबाट उमा, देवदूत, मामा दोर्जे तामाङ र बाबु रामसिंहलाई देखी। झट्ट आँखालाई विश्वास गर्न सकिन। शिरमाथिको छोपो राम्ररी उघारेर अनपत्यारको निधो तिखार्न थाली।

दृष्टिगतहरूलाई स्पष्ठ ठम्याई – उमा, देवदूत, मामा दोर्जे तामाङ। सेर्बू जन्मँदा बाबु-आमाको मूल नक्षत्रमा परेकीले रामसिंहको मुखै देखेकी थिइन। अहिले चिन्ने कुरै आएन। यतिखेर परिचय पाई।

रगताम्मे जङ्गी कोतको भयावह आँगनबाट सड्किएपछि देवदूत र उमाबारे राजदरबारभित्र नाना थरीका अफबाह फैलिएका थिए।

कसैले ती दुईलाई कोतको कत्लेआममा परे भन्थे। देवदूतलाई ख्याक र उमालाई किचकन्ने। तिनको प्रेतात्मा दरबारभित्र मसानचोकमा कराएको सुन्नेहरू

पनि थिए। यस्तो व्यामोहको अवस्थामा देवदूत र उमा आफ्ना सहोदर साहिँला देवर-देउरानी भएको थाहा पाएर पुतली महारानीको खुसीयाली चरम बिन्दुमा पुग्यो। आश्चर्यले स्तब्ध।

उमा राजदरबार हनुमानढोकाभित्र मालिक्नीकी थान्कोमा राखिएकी थिई। पुतली नोकर्नी। अघिल्लीलाई पछिल्लीले 'हजुर' सम्बोधनवाची शब्द प्रयोग गरेर आदर गर्नुपर्ने। अहिले त्यसको विपरीत पुतली जेठानी, त्यसमा पनि र उमा देउरानी हुन आएकाले उमाले पुतलीलाई 'हजुर' भन्नुपर्ने भयो। पुतलीले 'तिमी'।

नयाँ परिस्थितिसित एक्कासि घुलमिल हुन अप्ठ्यारो परेकाले दरबारभित्रका बलबैँसेबीच चलेको पाल्सी बोलमा कुरा गर्न थाले।

यही हँस्यौलीको परिप्रेक्ष्यमा जेठानीको आभूषणमध्ये मोतीको माला र हीराको बुरुच आफ्नो भएको देउरानीले चिनी जुन ऊ जङ्गी कोतबाट भागेर आउँदा दरबारमा छोडेकी थिई। जेठानीले पनि बिर्सिएकी रहिनछ। उत्ति नै खेरि फुकालेर बहिनीलाई पहिराइदिई हाँसीखुसी।

मुक्तावली र बुरुच मात्र होइन, बाजुबन्द र औँठी पनि।

जर्नेल बमबहादुर र उनकी मुखिनीलगायत सबै देवर-देउरानी पुतली महारानी भाउजूको दर्शन गर्न आए। दाम राखे। साथमा रामसिंह र दोर्जे तामाङ पनि थिए। उनीहरूले पनि 'महारानीको जय!' पुकारे। दाम राखे।

आँगनको छुट्टै भूभागमा कुमारी मन्दिर थियो। त्यही देवीमूर्तिको दर्शन गर्न जङ्गबहादुर महाराज गएका रहेछन्। फर्किएर महारानीकहाँ आए।

त्यहाँ उनका सकल भाइ-बुहारी थिए, लावालस्कर चाकरीबाज।

रामसिंह र दोर्जे तामाङलाई क्रमशः एक जनालाई मीरसुब्बा दर्जा दिए, अर्कोलाई कम्यान्डिङ कर्णेल।

तामाङलाई फौजमा लिने प्रथा नभएकाले तागाधारी घोषणा गरे, क्षत्रिय जनै पहराइदिए दोसल्लासहित।

उहिले चीनका बादशाह कनयुङको राज्यकालमा दिगार्चेली टासी लामाको पेकिङमा मृत्यु भयो। उनको उत्तराधिकारीका सम्बन्धमा चित्त नबुझेकाले भाइ सुमर लामा सहायता याचना गर्न नेपाल आए।

नेपाल यस्तै अवसरको प्रतीक्षामा थियो। सुमर लामालाई मदत गर्ने निहुँमा नेपाली फौज हिमालको शृङ्खला नाघी भोटको भित्री भागमा दाखिला भयो।

यस्तो अपर्झट हमलाको प्रतिरोध गर्ने शक्ति थिएन भोटेहरूसित। सम्पूर्ण भोटमा आतङ्क फैलियो। अन्ततः भोटको रक्षार्थ चिनियाँ फौज आइपुग्यो। तिनीहरू अत्यधिक सङ्ख्यामा भएकाले हमलावरको जोड चलेन। बहादुरीका साथ पछि हट्नुपर्‍यो।

चिनियाँहरू नेपालीलाई खेद्दै सरासरी पाँचमाने भन्ज्याङ आइपुगे। शीघ्र नै काठमाडौँ ओर्लन बेर थिएन। तर नेपालीले यस साह्रोगाह्रो घडीमा अद्भुतको चतुरता देखाएकाले चिनियाँ फौजको बाढी एकाएक जितपुर फेदीमा आएर रोकियो।

राति चिनियाँ फौजको तीनैतिर नेपालीहरूले रूख र बुटेनहरूमा राँकाहरू बालिदिए। साथै घरेलु जन्तुका सिङमा पनि त्यसै गरियो।

चिनियाँहरू भ्रमवश आफूलाई तीनतिरबाट अगणित शत्रुले घेरेको ठानेर भागाभाग गरे। यो अनायास विजयको स्मरणमा उक्त फेदी जितपुर फेदीको नामले विख्यात भएको जनश्रुति छ। चिनियाँ वाहिनीका ७० हजार सदस्यमध्ये दुईचार सय राजघरानाका नातागोता, कुलिनहरू छेत्रीको परम्पराअनुसार शत्रुलाई पीठ देखाउनुभन्दा रणभूमिमा वीरगति प्राप्त गर्नु श्रेयस्कर ठानेर भागेनन्, लडिरहे।

अल्पसङ्ख्यक लडाकूको केही जोर चलेन। कुनै मारिए। कोही पक्राउ परे।

युद्धबन्दी मुक्त भएपछि स्वदेश फर्कने स्थिति थिएन, असम्भव। काठमाडौँ उपत्यकाभित्र बस्ने अनुमति पाएनन्, चीन वापस जान पनि सकेनन्। ती अलपत्रे चार भन्ज्याङबाहिरका डाँडावरिपरि जङ्गल, पाखा-पहरा खनी-खोस्री जीवनयापन गर्न थाले।

रहँदा-बस्दा आफूले खनजोत गरेको माटोमा तिनको मायापिरती बस्यो। वैवाहिक सम्बन्ध जुट्न गयो। जायाजन्म भयो। नेपालका प्रभुसत्तासम्पन्न नागरिक बने।

तिब्बती भाषामा घोडचढीलाई 'तापाक' भनिन्छ। उक्त शब्द अपभ्रंश भएर 'तामाङ' हुन आएको हो।

अर्कातिर जङ्गबहादुर कुँवर या कमरको वंशावलीको कथाअनुसार हिन्दुस्तानमा मुगल साम्राज्यको अभ्युदयपश्चात् चितोर राज्यको पतन भयो। अतः चितोरको पतनपछि पहाड पसेको देखिन्छ।

अहिराम कुँवर सपरिवार गोरखा आए। त्यहाँका शाहवंशीय राजाले उनलाई एउटा खोलाले खाएको गाउँमा बस्न अनुमति दिए।

त्यो बलौटेनीलाई नवागन्तुकले खनखान गरेर उर्वर पारे। सुखदुःखले त्यहीँ कालक्षेपण गर्न लागे। कालान्तरमा उक्त गाउँ 'कमर खोला' नामले प्रसिद्ध हुन गयो। अद्यापि त्यस गाउँमा कमरहरू अधिक सङ्ख्यामा छन्।

यस भनाइमा सत्यताको अंश जति भए पनि यो प्रमाणित छ कि अहिराम कुँवरका सन्तति रामकृष्ण कमर पृथ्वीनारायण शाहको सेनामा सम्मानित अफिसर थिए।

हिन्दुस्तानको राजस्थान प्रान्तबाट निर्गभित क्षत्रिय र तिब्बततिरबाट लड्न आएका 'तापाक' जातमा असमानता हुन नहुने, किनकि दुवै जाति वीर वर्ण, क्षत्रियोचित काम गर्ने योद्धा। त्यसमा पनि अभ्र दुवै नेपाली। तर दुर्भाग्यवश हिन्दुस्तानबाट बसाइँ सरेर आएको कमर क्षत्रियले आफूलाई ठूलो ठान्यो, तागाधारी। चीनबाट देशान्तरित तापाकलाई सानो, मदमुखी। त्यसै कारण दोर्जे तामाङलाई जनै दिएका होलान् श्री ३ महाराज जङ्गबहादुरले। तर पुतली महारानी त्यसो गर्न आवश्यक ठान्दिनन्। उत्तर र दक्षिणतिरबाट आएकालाई समान देख्छिन्।

तत्क्षण घर भित्रने मुहूर्तको घोषणा गरे पण्डितले।

साइतको बोली बज्यो पन्चेबाजामा।

सोही उपलक्ष्यमा छाउनी टुँडिखेलबाट सम्मानार्थ क्रमशः १९ र १५ तोप पड्कियो– द्वाङ्ग-द्वाङ्ग।

श्री ३ महाराज जङ्गबहादुर राणा र श्री ३ महारानी पुतली राणा *गृहप्रवेश* गरे !






ऐतिहासिक उपन्यास
















**सेतो बाघ** उपन्यासप्रति साहित्यानुरागी मनीषीको अत्यधिक अभिरुचि देखिएकाले **गृहप्रवेश**को जन्म हुन गएको हो ।

यो इतिहास होइन, ऐतिहासिक उपन्यास हो अनि कल्पनालाई सत्यतथ्यको सन्निकट पुऱ्याउने प्रयास पनि ।

शक्ति र सत्ताले उन्मत्त जङ्गबहादुर र ती दानवीय गुण भनूँ या मानवीय दुर्गुणप्रति विरक्त पुतली महारानीबीचको मानसिक द्वन्द्वले भविष्यलाई घचघच्याइराख्न सफल छ उपन्यास ।




**GRIHAPRAVESH**
(House entry)
*A historical fiction*
Diamond Shamsher Rana
Rs. 250.00

